# १. अन्तर्राष्ट्रिय र राष्ट्रिय आर्थिक गतिविधि

## अन्तर्राष्ट्रिय आर्थिक गतिविधि

१.१ विश्व अर्थ व्यवस्थामा पटक पटक देखिने व्यावसायिक चक्र (business cycle) को प्रवृत्ति अनुरुप सन् २००१ मा विश्व अर्थ व्यवस्थामा सुस्तता छायो । सो वर्ष विश्वको आर्थिक वृद्धि दरमा सन् २००० को ४.७ प्रतिशतको वृद्धिबाट ठूलो कमी आई २.५ प्रतिशतमा सिमित रह्यो । विभिन्न अर्थतन्त्रहरुमा समष्टिगत आर्थिक व्यवस्थापनमा देखिएका चुनौतीहरु, कतिपय अर्थतन्त्रहरुले भ्रेल्नु परेका आर्थिक र वित्तीय समस्या एवं संकटको प्रभाव, सन् २००० मा भएको तेलको उच्च मूल्य वृद्धि, स्टक एक्स्चेञ्जहरुमा देखिएको शिथिलता र वित्तीय सम्पत्तिको घट्दो मूल्य, निजी क्षेत्रको लगानी र उपभोगमा आएको शिथिलता, सेप्टेम्वर ११ को आतंककारी घटना आदिको कारण व्यावसायिक चक्रको घट्दो प्रवृत्तिमा थप वल मिल्न गयो । यसै क्रममा सन् २००१ मा विकसित अर्थतन्त्रहरुको वस्तु र सेवाको आयात १.५ प्रतिशतले र निर्यात १.३ प्रतिशतले घट्न गई विश्वको व्यापार आयतन ०.२ प्रतिशतले घट्न पुग्यो ।

तालिका १ (क) : विश्वको आर्थिक वृद्धि दर (वार्षिक वृद्धि प्रतिशत)

| | | | प्रक्षेपण | |
|---|---|---|---|---|
| | २००० | २००१ | २००२ | २००३ |
| **विश्वको उत्पादन** | ४.७ | २.५ | २.८ | ४.० |
| **विकसित अर्थतन्त्रहरु** | ३.९ | १.२ | १.७ | ३.० |
| प्रमुख विकसित अर्थतन्त्रहरु* | ३.५ | १.१ | १.५ | २.८ |
| अन्य विकसित अर्थतन्त्रहरु | ५.३ | १.६ | २.५ | ३.७ |
| **विकासोन्मुख मुलुकहरु** | ५.७ | ४.० | ४.३ | ५.५ |
| **विकासोन्मुख एशिया** | ६.७ | ५.६ | ५.९ | ६.४ |
| चीन | ८.० | ७.३ | ७.० | ७.४ |
| आसियन-४** | ५.१ | २.६ | ३.३ | ४.१ |
| दक्षिण एशिया*** | ५.३ | ४.२ | ५.२ | ५.६ |
| भारत | ५.४ | ४.३ | ५.५ | ५.८ |
| वंगलादेश | ५.५ | ४.५ | ३.९ | ४.० |
| पाकिस्तान | ३.९ | ३.४ | ४.२ | ५.१ |

* *संयुक्त राज्य अमेरिका, जापान, जर्मनी, फ्रान्स, संयुक्त अधिराज्य र क्यानडा ।*

** *इण्डोनेशिया, मलेशिया, फिलिपिन्स र थाइल्याण्ड ।*

*** *वंगलादेश, भारत, मान्दिभ्स, नेपाल, पाकिस्तान र श्रीलंका ।*

*श्रोतः वर्ल्ड इकोनोमिक आउटलूक, अन्तर्राष्ट्रिय मुद्रा कोष, वासिङ्गटन डि.सी., अप्रिल २००२, पृ. ६ र ३५ ।*

१.२ समष्टिगत आर्थिक व्यवस्थापनमा दिइएको जोड, आर्थिक सुधारका परिसूचक तथा व्यावसायिक वातावरणमा देखिएका सकारात्मक गतिविधिको फलस्वरुप व्यावसायिक

चक्रको ह्रासोन्मुखी प्रवृत्ति छोटिन गई सन् २००२ मा विश्व अर्थतन्त्र २.८ प्रतिशतले र सन् २००३ मा ४ प्रतिशतले विस्तारित हुने देखिएको छ । विश्वको व्यापार समेत सन् २००२ मा २.५ प्रतिशतले र सन् २००३ मा ६.६ प्रतिशतले वढ्ने अनुमान छ ।

तालिका १ (ख) : विश्व व्यापार (वार्षिक प्रतिशत परिवर्तन)

| | | | प्रक्षेपण | |
|---|---|---|---|---|
| | २००० | २००१ | २००२ | २००३ |
| **विश्वको व्यापार आयतन** (वस्तु र सेवा) | १२.४ | -०.२ | २.५ | ६.६ |
| **आयात** | | | | |
| विकसित अर्थतन्त्रहरु | ११.६ | -१.५ | २.१ | ६.६ |
| विकासोन्मुख मुलुकहरु | १६.० | २.९ | ६.४ | ७.७ |
| संक्रमणमा रहेका (पूर्व-केन्द्रीकृत) मुलुकहरु | १३.२ | १०.८ | ८.० | ७.७ |
| **निर्यात** | | | | |
| विकसित अर्थतन्त्रहरु | ११.७ | -१.३ | ०.९ | ६.३ |
| विकासोन्मुख मुलुकहरु | १५.० | ३.० | ४.८ | ७.० |
| संक्रमणमा रहेका मुलुकहरु | १४.६ | ६.३ | ५.२ | ६.१ |

*श्रोत : वर्ल्ड इकोनोमिक आउटलुक, अन्तर्राष्ट्रिय मुद्रा कोष वासिङ्गटन डि.सी., अप्रिल २००२, पृ.६ ।*

तालिका १. २: कुल गार्हस्थ्य उत्पादन (स्रोत अनुसार)

१.३ एशियाली विकासोन्मुख मुलुकहरुको आर्थिक वृद्धि दर सन् २००१ मा ५.६ प्रतिशत रहेकोमा सन् २००२ मा ५.९ प्रतिशत र सन् २००३ मा ६.४ प्रतिशत पुग्ने प्रक्षेपण छ। दक्षिण एशियाली मुलुकहरुको आर्थिक वृद्धि दर सन् २००१ मा ४.२ प्रतिशत रहेकोमा सन् २००२ मा ५.२ प्रतिशत र सन् २००३ मा ५.६ प्रतिशत हुने अनुमान छ। नेपालका छिमेकी मुलुकहरु मध्ये सन् २००१ मा आर्थिक वृद्धि दर चीनको ७.३ प्रतिशत, भारतको ४.३ प्रतिशत, वंगलादेशको ४.५ प्रतिशत र पाकिस्तानको ३.४ प्रतिशत रहेको थियो । सन् २००२ र सन् २००३ मा आर्थिक वृद्धि दर चीनमा क्रमश: ७ प्रतिशत र ७.४ प्रतिशत, भारतमा ५.५ प्रतिशत र ५.८ प्रतिशत, वंगलादेशमा ३.९ प्रतिशत र ४ प्रतिशत तथा पाकिस्तानमा ४.२ प्रतिशत र ५.१ प्रतिशत रही आर्थिक विस्तारमा क्रमिक सुधार हुने प्रक्षेपण रहेको छ । अन्तर्राष्ट्रिय मुद्रा कोषको प्रक्षेपण अनुसार दक्षिण एशियामा उपभोक्ता मूल्य सूचीको वृद्धि दर सन् २००२ र सन् २००३ दुवै वर्षहरुमा ४.२ प्रतिशत रहने अनुमान छ ।

तालिका १ (ग) : विश्वको मूल्य स्थिति (वार्षिक प्रतिशत परिवर्तन)

| | | | प्रक्षेपण | |
|---|---|---|---|---|
| | २००० | २००१ | २००२ | २००३ |
| **तेल (Oil)** | ५७.० | -१४.० | -५.३ | -४.४ |

| | | | | |
|---|---|---|---|---|
| **गैर-ऊर्जा वस्तुहरु** (**Non-fuel Commodities**) | १.८ | -५.५ | -०.१ | ७.२ |
| **उपभोक्ता मूल्य** | | | | |
| विकसित अर्थतन्त्रहरु | २.३ | २.२ | १.३ | १.८ |
| विकासोन्मुख मुलुकहरु | ६.१ | ५.७ | ५.८ | ५.१ |
| संक्रमणमा रहेका मुलुकहरु | २०.२ | १५.९ | १०.८ | ८.७ |

*श्रोत : वर्ल्ड इकनमिक आउटलूक, अन्तर्राष्ट्रिय मुद्रा कोष, वासिङ्टन डि.सी., अप्रिल २००२, पृ.६ ।*

## राष्ट्रिय समष्टिगत आर्थिक स्थिति

१.४ आर्थिक बर्ष २०५८।५९ विभिन्न आन्तरिक तथा बाह्य कारणले गर्दा विकास तथा शान्ति सुरक्षाको स्थितिको दृष्टिकोणबाट असाधारण बर्षको रुपमा देखा पऱ्यो । विगतमा सरकारले आर्थिक विकासको गतिलाई तिब्रतर बनाई गरिवी निवारणको अभियानमा सशक्तता दिन विभिन्न नीतिगत, संस्थात्मक तथा नियमन सुधारका कार्यक्रमहरुलाई कार्यान्वयनमा ल्याई समग्र विकासको लागि उपयुक्त वातावरणको सिर्जना गर्न सक्षम रह्यो । तर यस चालु बर्षमा अर्थतन्त्रले उक्त वातावरणको उपयोगबाट अधिकतम लाभ उठाई विकासको गतिलाई तिब्रता प्रदान गर्न निकै व्यवधानहरुको सामना गर्नु पऱ्यो । खुलेआम लुटपाट, हिंसा, आगजनी, आतंक तथा अशान्तिको परिस्थिति वीच श्री ५ को सरकार विकास अभियानलाई तिब्रतर बनाउन निकै प्रयत्नशील रह्यो । यसको वावजुद राष्ट्को आधारभूत कर्तव्य आफनो नागरिकको जीऊधनको सुरक्षामा समेत आंच आउने परिस्थितिको सिर्जना भएबाट सरकारको कार्यसूचीमा शान्ति सुरक्षाको स्थापनाले विकासको अवधारणालाई उछिनिदिएको छ । फलस्वरुप, श्री ५ को सरकारले बाध्य भई संकटकालिन अवस्थाको घोषणा गर्नु पऱ्यो । तसर्थ यस परिस्थितिमा २०५८।५९ को विकास स्थितिको समिक्षा गर्दा यस परिवेशलाई समेत मध्य नजर राखी निष्पक्ष एवं वस्तुपरक दृष्टिकोणबाट गरिनु आवश्यक छ ।

१.५ आर्थिक बर्ष २०५७।५८ मा कृषि क्षेत्रको कुल गार्हस्थ्य उत्पादन २०५१।५२ को फ्याक्टर कस्टको स्थीर मूल्यमा ४.२ प्रतिशत र गैर कृषि क्षेत्रको ४.९ प्रतिशतले बृद्धि भई कुल गार्हस्थ्य उत्पादन ४.६ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षमा क्रमश: १.७ प्रतिशत र ०.२ प्रतिशतले बृद्धि भई समष्टिगत आर्थिक बृद्धि ०.८ प्रतिशतले मात्र हुन सक्यो । यसरी आर्थिक बर्ष २०५८।५९ मा बाह्य र आन्तरिक घटनाको प्रतिकुल असरबाट अर्थतन्त्रलाई पूर्णतया मुक्त राख्न संभब नभएता पनि प्रतिकुल असरलाई न्यून पार्न श्री ५ को सरकार सफल रह्यो । अन्यथा यस स्थितिमा आर्थिक विकासको समष्टिगत आर्थिक बृद्धिदर ऋणात्मक हुन सक्ने संभावना थियो । सरकार विभिन्न रचनात्मक तथा व्यावहारिक नीतिगत कार्यक्रमहरुको कार्यान्वयन गरी यस संभावनाबाट अर्थतन्त्रलाई मुक्त गर्न सफल रह्यो । आर्थिक बर्ष २०५८।५९ को सवभन्दा उल्लेखनीय बिकास प्रवृति यहि नै रह्यो । यस अवधिमा आर्थिक गतिविधिका प्रमुख परिसूचकहरुका प्रवृत्ति तालिका १(घ) मा प्रस्तुत गरिएको छ ।

१.६ कुल गार्हस्थ्य उत्पादनको श्रोत (By Industrial Origin) अनुसारको प्रवृतिलाई केलाउदा कृषि क्षेत्रको आर्थिक बृद्धिदर गत वर्ष ४.३ प्रतिशत रहेकोमा यस बर्ष केवल १.७ प्रतिशत मात्र रहन गयो । यसरी कृषि क्षेत्रको आर्थिक बृद्धिदर घटन जानुमा खाद्यान्न उत्पादन हुने प्रमुख क्षेत्र पूर्वाञ्चलमा शुरुमा खडेरी र धान वाली लगाई सके पछि

अत्यधिक बर्षाले बाली लागेको भू-क्षेत्रमा ह्रास आएको हुँदा धान बाली १.२ प्रतिशतले घटन जानु नै प्रमुख कारण रह्यो । यस बर्षको उल्लेखनीय प्रगति बिद्युत, ग्यास तथा पानीको रहन गएको छ जसको बृद्धिदर २०५७।५८ मा ७.९ प्रतिशत रहेकोमा चालु आर्थिक बर्षमा १४.९  प्रतिशत रहेको अनुमान छ । काली गण्डकी "ए" (१४४ मेगावाट क्षमता) र भोटेकोशी (३६ मेगावाट) आयोजनाहरु सम्पन्न भएबाट यो उल्लेखनीय बृद्धिदर हासिल हुन सकेको देखिएको छ ।  माओवादी आतंककारीले गर्दा उपत्यका भित्र अन्तर्गमन अत्यधिक भएर निर्माण कार्यमा तिव्रता आएको अनुमान छ । परिणामस्वरुप गत बर्षको ०.९ प्रतिशतको तुलनामा चालु बर्षमा निर्माण बृद्धिदर ४.९ प्रतिशत रह्यो जस्ले समष्टिगत आर्थिक बृद्धिलाई सकारात्मक बनाउन प्रभाव पार्‍यो । तर अन्य क्षेत्रहरुको बृद्धिदर भने गत बर्षको तुलनामा कम रह्यो । सबभन्दा ठूलो ऋणात्मक प्रवृती उद्योग तथा व्यापार, रेण्टुरेन्ट र होटलमा देखियो जून विगत बर्षमा क्रमशः ३.६ प्रतिशत र २.८ प्रतिशतले बृद्धि भएकोमा चालु बर्षमा ५.९ प्रतिशत र ६.४ प्रतिशतले ह्रास आएको अनुमान छ । देशमा औद्योगिक संस्थानहरुले व्यहोर्नु परेको शान्ति सुरक्षाको स्थिति, नेपाल भारत सन्धिमा केही समयको लागि भएको अनिश्चितता, पर्यटकको आगमनमा २१.२ प्रतिशत कमी आएको, नेपालीको प्रमुख निर्यात वस्तुहरु (गलैचा २३.१ प्रतिशतले र तयारी पोशाक २८.८ प्रतिशतले) को उत्पादनमा ह्रास तथा पश्मिना जस्तो एक प्रमुख निर्यात बस्तुमा ७८.५ प्रतिशतले ऱ्हास भएकोले कुल गार्हस्थ्य उत्पादनको बृद्धिदरमा ऱ्हास आउनमा यी क्षेत्रहरु कारक तत्व रहेको अनुमान छ । अन्य क्षेत्र मध्ये सामुदायिक तथा सामाजिक सेवाको आर्थिक बृद्धिदर गत वर्ष १५.० प्रतिशत रहेकोमा चालु बर्ष केवल ३.२ प्रतिशतमा सिमित हुन गएको अनुमान छ । त्यसै गरी वित्त तथा घर जग्गाको बृद्धि दर गत बर्ष ३.८ प्रतिशत रहेकोमा चालु बर्षमा २.७ प्रतिशतमा ओर्लेको अनुमान छ ।

१.७ कुल राष्ट्रिय उत्पादन प्रचलित मूल्यमा आर्थिक वर्ष २०५७।५८ मा ८.६ प्रतिशतले बृद्धिभई रु. ४२६ अर्व पुगेकोमा आर्थिक बर्ष २०५८।५९ मा ४.७ प्रतिशतले बृद्धि भई ४४६ अर्व पुगेको अनुमान छ ।

१.८ आर्थिक बर्ष २०५७।५८ मा कुल गार्हस्थ्य उत्पादनमा (फ्यायक्टर कस्टको स्थिर मूल्यमा) कृषि क्षेत्रको योगदान ३७.९ प्रतिशत रहेकोमा चालु बर्षमा ३८.१ प्रतिशत र गैर कृषि क्षेत्रको योगदान ६२.१ प्रतिशतबाट झरी ६१ प्रतिशत रहेको अनुमान छ ।

१.९ प्रतिव्यक्ति आयको बृद्धि चालु बर्ष सकारात्मक रहेको अनुमान छ । आर्थिक बर्ष २०५७।५८ मा प्रति व्यक्ति कुल गार्हस्थ्य उत्पादन रु. १७,७१८ (रु. सत्र हजार सात सय अठार अर्थात अमेरिकी डलर २४०) रहेकोमा चालु आर्थिक वर्षमा प्रतिव्यक्ति कुल गार्हस्थ्य उत्पादनमा २.१ प्रतिशत बृद्धि भई रु. १८,०८३ (अठार हजार त्रियासी अर्थात अमेरिकी डलर २३६) पुगेको अनुमान छ । यसरी नेपाली मुद्रामा प्रतिव्यक्ति कुल गार्हस्थ्य उत्पादनमा सिमान्त बृद्धि हुँदा हुँदै पनि नेपाली रुपैंया र अमेरिकी डलर बीचको विनिमय दरमा भएको परिवर्तनले गर्दा अमेरिकी डलरमा प्रतिव्यक्ति कुल गार्हस्थ्य उत्पादनमा सिमान्त ह्रास आएको देखिएको छ ।

१.१० नवौं योजनाको सम्पूर्ण अवधिमा कृषि क्षेत्रको आर्थिक बृद्धिदर ४ प्रतिशत र गैर कृषि क्षेत्रको आर्थिक बृद्धिदर ७.३ प्रतिशत गरी समष्टिगत आर्थिक बृद्धिदर ६ प्रतिशत पुग्ने लक्ष्य रहेकोमा योजना अवधिमा कृषि क्षेत्रको बार्षिक औषत आर्थिक बृद्धिदर २.९

प्रतिशत र गैर कृषि क्षेत्रको आर्थिक बृद्धिदर ४.६ प्रतिशत रही समष्टिगत आर्थिक बृद्धिदर ३.९ पुग्ने अनुमान रहेको छ ।

१.११ कृषि क्षेत्र तथा गैर कृषि क्षेत्रको कुल गार्हस्थ्य उत्पादन (फ्याक्टर कस्टको) प्रचलित मूल्यमा आर्थिक वर्ष २०५७।५८ मा क्रमशः ३.० र १०.३ प्रतिशतले बृद्धि भई कुल गार्हस्थ्य उत्पादन ७.४ प्रतिशतले बढेको थियो । चालु बर्षमा कृषि तथा गैर कृषि क्षेत्रको बृद्धिदर क्रमशः ४.९ र ३.९ रही कुल गार्हस्थ्य उत्पादनको वृद्धिदर ४.३ प्रतिशत पुगेको अनुमान छ । यसरी आर्थिक वर्ष २०५७।५८ मा कुल गार्हस्थ्य उत्पादन रु ३९३ अर्व रहेकोमा २०५८।५९ मा रु. ४१० अर्व पुगेको अनुमान छ ।

## राष्ट्रिय उत्पादन

१.१२ कुल राष्ट्रिय उत्पादनको बृद्धिदर आर्थिक वर्ष २०५७।५८ मा प्रचलित वजार मूल्यमा ८.६ प्रतिशतले बृद्धि भएकोमा चालु आर्थिक बर्षमा ४.६ प्रतिशतले मात्र बृद्धि हुन सक्यो । यसले गर्दा प्रतिव्यक्ति राष्ट्रिय उत्पादनमा २.४ प्रतिशतले सिमान्त वृद्धि भएको अनुमान छ । आर्थिक बर्ष २०५७।५८ मा प्रतिव्यक्ति कुल गार्हस्थ्य उत्पादन रु. १८,४१६ (अठार हजार चार सय सोह्र अर्थात अमेरिकी डलर २५०) रहेकोमा प्रतिव्यक्ति राष्ट्रिय उत्पादनमा २.४ प्रतिशत बृद्धि भई रु. १८,८५२ (अठार हजार आठ सय वाउन्न अर्थात अमेरिकी डलर २४६) पुगेको अनुमान छ । यसरी अमेरिकी डलरमा प्रति व्यक्ति राष्ट्रिय उत्पादन घट्न जानुमा नेपाली मुद्राको विनिमयदरमा भएको परिवर्तन मुख्य कारणको रुपमा रहेको अनुमान छ ।

## साधनको श्रोत तथा उपयोग

१.१३ आर्थिक बर्ष २०५७।५८ मा कुल गार्हस्थ्य उत्पादन (उत्पादकको चालु मूल्यमा) को अनुपातमा कुल उपभोग ८५.४ प्रतिशत रहेकोमा आर्थिक बर्ष २०५८।५९ मा ८६.८ प्रतिशत रहन गएको अनुमान छ । निजी क्षेत्रको उपभोग आर्थिक वर्ष २०५७।५८ मा ७५.४ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५८।५९ मा ७६.२ प्रतिशत पुगेको र सार्वजनिक क्षेत्रको अनुपात १०.० रहेकोमा १०.६ पुगेको अनुमान छ । यसरी कुल उपभोगमा भएको बृद्धिलाई विश्लेषण गर्दा कुल उपभोग आर्थिक वर्ष २०५७।५८ मा ८.५ प्रतिशतले बृद्धि भएकोमा आर्थिक वर्ष २०५८।५९ मा ६.१ प्रतिशतले मात्र बृद्धि भएको अनुमान छ । निजी क्षेत्रमा उपभोगको वृद्धिदर आर्थिक वर्ष २०५७।५८ मा ७.३ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५८।५९ मा केही घट्न गई ५.५ प्रतिशत पुगेको छ । सार्वजनिक क्षेत्रको बृद्धिदर आर्थिक वर्ष २०५७।५८ मा १८.५ भएकोमा आर्थिक वर्ष २०५८।५९ मा १०.८ प्रतिशतले मात्र बृद्धि भएको अनुमान छ । परिणामस्वरुप कुल गार्हस्थ्य उत्पादन (उत्पादकको प्रचलित मूल्यमा) संगको लगानी अनुपात आर्थिक वर्ष २०५७।५८ मा २४.३ प्रतिशत रहेकोमा केही घट्न गई आर्थिक वर्ष २०५८।५९ मा २३.६ प्रतिशत रहेको अनुमान छ । कुल गार्हस्थ्य बचत आर्थिक वर्ष २०५७।५८ को १४.७ प्रतिशतबाट आर्थिक वर्ष २०५८।५९ मा १३.२ प्रतिशतमा ओर्लेको छ ।

१.१४ यसैगरी कुल गार्हस्थ्य उत्पादन (उत्पादकको प्रचलित मूल्यमा) को अनुपातमा निर्यात (वस्तु तथा सेवा) आर्थिक वर्ष २०५७।५८ को २२.४ प्रतिशतबाट आर्थिक वर्ष २०५८।५९ मा १८.२ प्रतिशत र आयात (वस्तु तथा सेवा) आर्थिक वर्ष २०५७।५८ को ३२.० प्रतिशतबाट आर्थिक वर्ष २०५८।५९ मा २८.८ प्रतिशतमा ओर्लेको कारणबाट

निर्यात /आयात अनुपात गत आर्थिक वर्षको ०.७० बाट ०.६३ मा झरेको अनुमान छ ।

१.१५ यसैगरी कुल पूँजी निर्माणको प्रबृतिमा पनि केही परिवर्तनहरु देखा परेको अनुमान छ । आर्थिक बर्ष २०५७।५८ को ६.४ प्रतिशत बृद्धिदरको तुलनामा कुल स्थिर पूँजी निर्माण आर्थिक वर्ष २०५८।५९ मा ७.९ प्रतिशतले बृद्धि भएको अनुमान छ जसलाई सकारात्मक परिवर्तनको रुपमा लिनु पर्दछ । देशमा रहेको विषम बर्तमान स्थितिको बाबजुद पनि नीजि क्षेत्रको पूँजी निर्माण गत बर्षको ऋणात्मक ०.३ प्रतिशत बृद्धिदरबाट १२.३ प्रतिशत पुग्नुको पछाडि सरकारी प्रयास पनि निहित छ । सार्वजनिक क्षेत्रको साधन उल्लेखनीय परिमाणमा पूँजी निर्माणमा उपयोग गर्नुको साटो शान्ति सुरक्षा लगायत अन्य उपभोग शिर्षकमा खर्च गर्नु पर्ने बाध्यताका बाबजुद पनि अर्थतन्त्रमा कुल पूँजी निर्माणमा बृद्धि ल्याउने सरकारी प्रयास निजी क्षेत्रको पूँजी निर्माणमा भएको बृद्धिबाट सफल भएको अनुमान छ । यसरी कुल स्थीर पूँजी निर्माणमा कुल गार्हस्थ्य उत्पादन (उत्पादकको प्रचलित मूल्यमा) संगको अनुपात आर्थिक वर्ष २०५७।५८ मा १९ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५८।५९ मा सिमान्त बृद्धि भई १९.७ प्रतिशत रहेको अनुमान छ । यसैगरी २०५७।५८ मा सार्वजनिक क्षेत्रको कुल स्थिर पूँजी निर्माणमा कुल गार्हस्थ्य उत्पादन (उत्पादकको मूल्यमा) ७.६ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५८।५९ मा ७.४ प्रतिशतमा झरेको र सोही अवधिमा निजी क्षेत्रको ११.४ प्रतिशतबाट १२.३ प्रतिशतमा पुगेको अनुमान छ । त्यस्तै आर्थिक वर्ष २०५७।५८ मा निजी र सार्वजनिक क्षेत्रको अंश क्रमशः ५९.९ र ४०.१ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५८।५९ मा क्रमशः ६२.३ र ३७.७ प्रतिशत रहेको अनुमान छ । यस प्रकार कुल गार्हस्थ्य उत्पादन, राष्ट्रियउत्पादन तथा साधनको श्रोत तथा उपयोगको परिमाणमा आएको ‑ह्रास समष्टिगत अर्थतन्त्रमा आर्थिक बर्ष २०५७।५८ को तुलनामा आर्थिक वर्ष २०५८।५९ मा देखा परेको ऱ्हास स्थितिको प्रतिविम्वको रुपमा देखा परेको छ ।

## चुनौतीहरु

१.१६ विगत बर्षहरुमा झै यस वर्षमा पनि कृषि क्षेत्रको आर्थिक बृद्धिदर अपेक्षाकृत बृद्धि हुन नसक्नुमा कृषि क्षेत्रले सिंचाईको लागि मौसममा निर्भर रहदै आउन परेकोले हो । तसर्थ खेति गरिएका क्षेत्रलाई निरन्तर सिंचाई सुविधा उपलब्ध गराउन सकेमा मात्र कृषि क्षेत्रको उत्पादन प्रबृतिलाई मौसमगत प्रभावबाट मुक्त गरी उत्पादनमा बृद्धि गर्ने संभावना हुने हुदा बढ्दो खेती गरिएको जमिनमा भरपर्दो सिंचाई प्रणालीको व्यवस्था गर्दै सिंचाई सुविधा प्रदान गर्दै जानु चुनौतीपूर्ण रहेको छ । अर्थतन्त्रमा कृषि क्षेत्रको देन अझ पनि महत्वपूर्ण रहेको परिप्रेक्षमा कृषिको उत्पादनमा बृद्धि नआउन्जेल कुल गार्हस्थ्य उत्पादनमा थपघट भैरहने स्थिति बिद्यमान रहेको छ ।

१.१७ आर्थिक बृद्धिदरलाई स्थायित्व एवं निरन्तरता दिन कुल गार्हस्थ्य उत्पादनमा लगानीको अनुपात बढाउदै जानुपर्ने तर नेपालमा हाल पनि उपभोग अनुपात निकै बढि भई लगानी अनुपातमा प्रतिकुल असर परेको छ । तसर्थ, सार्वजनिक तथा निजी गरी सवै क्षेत्रहरुमा उपभोग स्तरलाई नियन्त्रण गरी अनुपात घटाउदै लैजानु चुनौती पूर्ण रहेको छ ।

१.१८ विकास कार्यलाई तिब्रतर बनाउन उपभोग अनुपात अझ पनि धेरै घटाई बचत तथा लगानी बढाउदै जानु अर्को चुनौतीपूर्ण कार्य रहेको छ । बचत अभिबृद्धि तथा परिचालनको लागि सवै संयन्त्रण उपयोगमा ल्याई सरकारी तथा निजी क्षेत्र दुवैमा वचत बढाउदै जाने र यसरी बृद्धि हुने बचत कुल स्थिर पूँजी लगानीमा उपयोग गर्दै जाने कार्य चुनौतीपूर्ण रहदै आएको छ ।

१.१९ बस्तु तथा सेवाको आयात तथा निर्यात बीचको खाडललाई क्रमशः पूर्ति गर्दै जानु अर्थतन्त्रको स्थायित्वलाई आवश्यक रहेको पृष्ठभूमिमा बस्तु तथा सेवाको आयातलाई नियमन गर्ने र बस्तु तथा सेवाको निर्यातलाई प्रर्बद्धन गर्दै जाने अर्को चुनौतीपूर्ण कार्य रहदै आएको छ ।

# २. सार्वजनिक वित्त

## वित्तीय विकास तथा वजेट

२.१ आर्थिक वर्ष २०५६।५७ मा कुल गार्हस्थ्य उत्पादनसंग राजस्व परिचालनको अनुपात ११.३ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५७।५८ मा ०.६ प्रतिशत विन्दुले बृद्धि भई ११.९ प्रतिशत पुगेको छ । खर्चतर्फ भने कुल खर्च आर्थिक वर्ष २०५६।५७ को १७.५ प्रतिशतबाट १.९ प्रतिशत विन्दुले वृद्धि भई आर्थिक वर्ष २०५७।५८ मा १९.४ प्रतिशत पुगेको छ । यसरी कुल राजस्व र खर्च वीचको अन्तर आर्थिक वर्ष २०५६।५७ मा ६.२ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५७।५८ मा १.३ प्रतिशत विन्दुले वृद्धि भई ७.५ प्रतिशत पुगेको छ ।

तालिका २ (क) : सरकारी खर्च र राजस्वको कुल गार्हस्थ्य उत्पादन
(उत्पादकको प्रचलित मूल्यमा) संगको अनुपात

| आर्थिक वर्ष | सरकारी खर्च | | | राजस्व पचिालन | अन्तर |
|---|---|---|---|---|---|
| | साधारण | विकास | कुल | | |
| २०५०।५१ | ६.३ | १०.६ | १६.९ | ९.८ | ७.१ |
| २०५१।५२ | ८.८ | ९.० | १७.८ | ११.२ | ६.६ |
| २०५२।५३ | ८.७ | १०.० | १८.७ | ११.२ | ७.५ |
| २०५३।५४ | ८.६ | ९.५ | १८.१ | १०.८ | ७.३ |
| २०५४।५५ | ९.० | ९.६ | १८.६ | १०.९ | ७.७ |
| २०५५।५६ | ९.१ | ८.३ | १७.४ | १०.९ | ६.५ |
| २०५६।५७ | ९.१ | ८.४ | १७.५ | ११.३ | ६.२ |

| | | | | | |
|---|---|---|---|---|---|
| २०५७।५८ | १०.४ | ९.० | १९.४ | ११.९ | ७.५ |

२.२ आर्थिक वर्ष २०५६।५७ मा राजस्व वचत कुल विकास खर्चको २६.४ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५७।५८ मा १६.५ प्रतिशतमा झरेको छ । यसरी राजस्व वचतमा आएको कमीको कारण राजस्वको वृद्धिदर १४ प्रतिशत र साधारण खर्चको वृद्धिदर २३.९ प्रतिशत रहनुबाट यस्तो देखिएको छ । यस्तो हुनुमा शान्ति सुरक्षाको कारणले आर्थिक क्रियाकलापहरु बढ्न नसकेकोले राजश्व असूलीमा अपेक्षाकृत वृद्धि हुन नसक्नु तर साधारण खर्च तर्फ भने निरन्तर वृद्धि भइरहनु जस्ता कारणहरुलाई लिन सकिन्छ ।

२.३ आर्थिक वर्ष २०५६।५७ मा न्यून वित्त परिचालनको अंश कुल विकास खर्चमा ५५.६ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५७।५८ मा सो प्रतिशत ६५.३ पुगेको छ । न्यून वित्त परिचालन र सो पूर्ति गर्ने श्रोतहरु तलको तालिकामा प्रस्तुत गरिएको छ ।

तालिका २ (ख) : विकास खर्च र सो को पूर्ति गर्ने स्रोत

| शिर्षक | २०५३।५४ | २०५४।५५ | २०५५।५६ | २०५६।५७ | २०५७।५८ |
|---|---|---|---|---|---|
| क) कुल विकास खर्च * | २६५४.२६ | २८९४.३९ | २८५३.१३ | ३१७४.९२ | ३७०६.५९ |
| ख) खर्च वेहोर्ने श्रोतहरु ** | | | | | |
| अ. राजस्व वचत | २३.३ | १९.९ | २१.७ | २६.४ | १६.५ |
| आ. वैदेशिक अनुदान | २२.४ | १८.७ | १५.२ | १८.० | १८.२ |
| ई. न्यून वित्त परिचालन | ५४.३ | ६१.४ | ६३.१ | ५५.६ | ६५.३ |
| १. वैदेशिक ऋण | (३४.१) | (३८.२) | (४१.५) | (३७.२) | (३२.५ |
| २. आन्तरिक ऋण | (११.३) | (११.७) | (१६.५) | (१७.३) | (१८.९) |
| ३. मौज्दातमा परिवर्तन | (८.९) | (११.५) | (५.१) | (१.१) | (१३.९) |

* *रु. करोडमा उल्लेख गरिएको छ ।*

** *प्रतिशतमा प्रस्तुत गरिएको छ ।*

## सरकारी वित्त

२.४ आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा कुल सरकारी खर्च २०.५ प्रतिशतले बृद्धि भई रु. ७९ अर्व ८३ करोड ५१ लाख पुग्यो । चालु आर्थिक वर्षको कुल खर्च मध्ये अघिल्लो आर्थिक वर्ष २०५६।५७ को तुलनामा साधारण तर्फ २३.९ प्रतिशत वृद्धि भएको थियो भने विकास तर्फ १६.७ प्रतिशतले बृद्धि हुन गएको थियो । आर्थिक वर्ष २०५७।५८ मा विकास खर्च कुल खर्चको ४६.४ प्रतिशत रहन गएको छ भने अघिल्लो आर्थिक वर्ष २०५६।५७ मा यस्तो प्रतिशत ४७.९ रहेको थियो ।

२.५ आर्थिक वर्ष २०५६।५७ मा कुल सरकारी खर्च रु. ६६ अर्व २७ करोड २५ लाख मध्ये राजस्व परिचालनबाट ६४.८ प्रतिशत, वैदेशिक अनुदानबाट ८.६ प्रतिशत, वैदेशिक ऋणबाट १७.८ प्रतिशत, आन्तरिक ऋणबाट ८.३ र मौज्दात परिवर्तनबाट ०.५ प्रतिशत व्यहोरिएको थियो भने आर्थिक वर्ष २०५७।५८ मा कुल खर्च व्यहोर्ने स्रोत मध्ये राजस्व परिचालनबाट ६१.२ प्रतिशत, वैदेशिक अनुदानबाट ८.५ प्रतिशत, वैदेशिक ऋणबाट १५.१ प्रतिशत, आन्तरिक ऋणबाट ८.८ प्रतिशत र मौज्दात परिवर्तनबाट ६.४ प्रतिशत हुन गई सरकारी खर्च व्यहोर्ने श्रोत मध्ये वैदेशिक ऋण र मौज्दात

परिवर्तन तर्फ गत वर्ष भन्दा क्रमशः २ प्रतिशत र १३५० प्रतिशतले वृद्धि भएको देखिन्छ ।

## साधारण खर्च

२.६ आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा साधारण खर्च २३.९ प्रतिशतले बृद्धि भई रु. ४२ अर्ब ७६ करोड ९२ लाख पुगेको छ । आर्थिक वर्ष २०५७।५८ मा साँवा र व्याज भुक्तानी अघिल्लो आर्थिक वर्षको तुलनामा ३.५ प्रतिशतले बृद्धि भएको देखिन्छ । यस आर्थिक वर्षमा कुल साधारण खर्चमा साँवा र व्याज भुक्तानीको अंश २४.३ प्रतिशत, सामाजिक सेवा तर्फ २५.४ प्रतिशत, आर्थिक सेवा तर्फ ३.८ प्रतिशत र विविधमा १८.४ प्रतिशत रहेको छ । यसै गरी साधारण प्रशासन तर्फ १४.६ प्रतिशत र रक्षातर्फ ८.९ प्रतिशत र वांकी अन्य शिर्षकहरुमा खर्च भएको देखिन्छ । आर्थिक वर्ष २०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा साधारण खर्च मध्ये सामाजिक सेवातर्फ ३०.७ प्रतिशतले र रक्षातर्फ ९.५ प्रतिशतले बृद्धि भएता पनि आर्थिक सेवातर्फ २६.७ प्रतिशतले कमी आएको देखिन्छ । संवैधानिक अंग, वैदेशिक सेवा, राजस्व प्रशासन, न्याय प्रशासन, आर्थिक प्रशासन र योजना, ऋण लगानी र विविधतर्फ समेतको खर्च समष्टिगत रुपमा हेर्दा अघिल्लो आर्थिक वर्षको तुलनामा ५३.४ प्रतिशतले वृद्धि भएको देखिन्छ । गत आर्थिक वर्षको प्रथम आठ महिनामा रु. २९ अर्ब ९६ लाख साधारण खर्च भएकोमा चालु आर्थिक वर्षको सोही अवधिमा १९.० प्रतिशतले वृद्धि भई रु. ३४ अर्ब ५२ करोड ९५ लाख साधारण खर्च भएको छ ।

## विकास खर्च

२.७ आर्थिक वर्ष २०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा विकास खर्च १६.७ प्रतिशतले बृद्धि भई रु. ३७ अर्ब ६ करोड ५९ लाख पुगेको छ । साधारण र विकास खर्चको अनुपात हेर्दा आर्थिक वर्ष २०५५।५६ देखि  विकास खर्चको भन्दा साधारण खर्चको परिमाण वढी हुने प्रवृत्ति देखा परेको छ । यसरी आर्थिक वर्ष २०५४।५५ मा साधारण र विकास खर्चको अनुपात कुल खर्च मध्ये क्रमशः ४८.४ र ५१.६ प्रतिशत रहेकोमा सो प्रवृति परिवर्तन हुदै आर्थिक वर्ष २०५६।५७ मा साधारण खर्च र विकास खर्चको अनुपात कुल खर्चको तुलनामा क्रमशः ५२.१ र ४७.९ प्रतिशत रह्यो । यस्तै आर्थिक वर्ष २०५७।५८ मा यो अनुपात ५३.६ र ४६.४ प्रतिशत रहन गई कुल खर्चमा साधारण खर्चको अंश वढ्दै गएको देखिन्छ । प्रथम आठ महिनाको समीक्षा गर्दा गत आर्थिक वर्षमा रु. १७ अर्ब ८५ करोड ६० लाख विकास खर्च भएकोमा यस आर्थिक वर्षमा सो खर्च ३१.८ प्रतिशतले कमी भई रु. १२ अर्ब १७ करोड १७ लाख भएको देखिन्छ ।

२.८ विकास खर्चतर्फ अघिल्लो वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा आर्थिक सेवातर्फ १३.२ प्रतिशतले, सामाजिक सेवातर्फ ३.८ प्रतिशतले आर्थिक प्रशासन र योजनातर्फ ५.८६ प्रतिशतले र साधारण प्रशासन तर्फ १७.७ प्रतिशतले वृद्धि भएको छ । सामाजिक सेवाहरु अन्तर्गत शिक्षा र स्थानीय विकासमा आर्थिक वर्ष २०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा क्रमशः ८.२ प्रतिशत र ११.८ प्रतिशतले विकास खर्च बृद्धि भएको देखिन्छ भने स्वास्थ्य तथा पिउने पानी क्षेत्रमा आर्थिक वर्ष

२०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा क्रमशः ७.३ प्रतिशत र ०.७ प्रतिशतले विकास खर्चमा कमी आएको देखिन्छ ।

२.९ आर्थिक सेवाहरुतर्फ आर्थिक वर्ष २०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा कृषि, सिंचाई, विद्युत र यातायातमा क्रमशः ११.५ प्रतिशत, २९.८ प्रतिशत, २३ प्रतिशत र १४ प्रतिशतले वृद्धि भएको थियो । आर्थिक वर्ष २०५७।५८ मा कुल विकास खर्च मध्ये आर्थिक सेवा तर्फको खर्च ५७.० प्रतिशत, सामाजिक सेवा तर्फको खर्च ३४.७ प्रतिशत र अन्य क्षेत्रमा बाँकी ८.३ प्रतिशत खर्च भएको छ ।

२.१० श्री ५ को सरकारको बजेट विनियोजन र निकासाको कार्य प्रणालीलाई अझ बढी यथार्थपरक बनाई अनुगमन र मूल्यांकनमा निरन्तरता ल्याउने, परियोजना संचालनका क्रममा बजेटको अनिश्चितता हटाउने जस्ता उद्देश्य प्राप्तिको लागि श्री ५ को सरकारले चक्र प्रणालीको आधारमा ३ वर्षे मध्यकालिन कार्यक्रम र बजेट तर्जुमा गर्ने

मञ्जुषा २ (१)

**मध्यकालिन कार्यक्रम र बजेट तर्जुमा Medium Term Expenditure Framework (MTEF)**

बजेट तर्जुमा र कार्यान्वयनका क्रममा निर्धारित लक्ष्य र प्रगति वीच अपेक्षित तालमेल र समन्वय हुन नसकेको सन्दर्भमा आयोजना तर्जुमादेखि मूल्यांकन, छनौट, प्राथमिकिरण, बजेट विनियोजन र कार्यान्वयनसम्मका प्रकृयामा परेका समस्या समाधान गर्न श्री ५ को सरकारले मध्यकालिन आर्थिक योजना सम्वन्धी अवधारणा अगाडि ल्याएको छ । यसका निम्न विशेषता रहेका छन् :

१. यथार्थ वस्तुस्थितिको आधारमा योजना र वार्षिक बजेट वीच तालमेल गराई कार्यक्रम तथा आयोजनाको छनौटमा प्राथमिकिरण गर्ने ।
२. आयोजनाहरुको बजेट कार्यान्वयन तालिका र त्यसबाट हुने फाइदावारे विश्लेषण गर्ने ।
३. मध्यकालिन बजेटको आकारवारे पूर्व जानकारी हुने हुँदा आयोजनाहरुले आगामी तीन वर्षको बजेट विनियोजनवारे पूर्व जानकारी पाई आयोजना कार्यान्वयन विश्वसनीय रुपमा अघि बढाउन सक्ने ।
४. बजेटलाई साना साना धेरै आयोजनामा छर्ने कार्य हटाई प्राथमिकता प्राप्त आयोजनाहरुमा पर्याप्त बजेट विनियोजन एवं निकासा गर्ने व्यवस्था गर्ने ।
५. श्री ५ को सरकार, दातृ संस्था एवं जनतालाई पनि निर्धारित मध्यकालिन विनियोजित बजेटबाट समष्टिगत आर्थिक क्षेत्र र अन्य मूल क्षेत्रहरुमा के कस्तो उपलब्धि हुने भन्ने वारे एउटा चित्रण थाहा हुने ।

धारणा ल्याएको छ ।

## वित्तीय श्रोत (राजस्व)

२.११ अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा राजस्व संकलनमा १४.० प्रतिशतले बृद्धि भई रु. ४८ अर्व ८९ करोड ३६ लाख पुगेको छ । आर्थिक वर्ष २०५६।५७ मा यस्तो बृद्धि १५.१ प्रतिशतले भएको थियो ।

२.१२ राजस्वको संरचनाको दृष्टिकोणवाट आर्थिक वर्ष २०५७।५८ मा संकलित कुल राजस्व मध्ये कर राजस्वको अंश ७९.५ प्रतिशत र गैर कर राजस्वको अंश २०.५ प्रतिशत रहन गएको थियो । आर्थिक वर्ष २०५६।५७ मा यस्तो अनुपात क्रमशः ७७.३ प्रतिशत र २२.७ प्रतिशत रहेको थियो ।

२.१३ आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा कर राजस्व संकलन १७.२ प्रतिशतले बृद्धि भई रु. ३८ अर्व ८६ करोड ५१ लाख पुगेको थियो । यस मध्ये भन्सारतर्फको बृद्धि १६.१ प्रतिशत थियो । यसै गरी वस्तु तथा सेवा उत्पादन तथा उपभोगमा लाग्नेकर २०.७ प्रतिशतले बृद्धि भएको देखिन्छ । अघिल्लो आर्थिक वर्षको तुलनामा मूल्य अभिबृद्धिकरको मात्र संकलन २२.३ प्रतिशतले बृद्धि भएको थियो भने आय, नाफा र सम्पत्ति कर तर्फ २०.३ प्रतिशतले बृद्धि भएको देखिन्छ । आयकर तर्फ मात्र हेर्दा आर्थिक वर्ष २०५६।५७ को तुलनामा २०५७।५८ मा २३.५ प्रतिशतले बृद्धि भएको थियो ।

२.१४ गैर कर राजस्वको स्थिति विश्लेषण गर्दा आर्थिक वर्ष २०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा २.९ प्रतिशतले बृद्धि भई रु. १० अर्व २ करोड ८८ लाख पुगेको देखिन्छ । यसमध्ये लाभांशमा ६.८ प्रतिशतले कमी आएको तथा साँवा र व्याज असूलीमा ६.८ प्रतिशतले कमी आएको देखिन्छ ।

## आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनासम्मको राजस्वको स्थिति

२.१५ चालु आर्थिक वर्षको पहिलो आठ महिनामा रु. २९ अर्ब १४ करोड ८७ लाख राजस्व असुली भएको देखिन्छ । गत वर्षको यसै अवधिसंग तुलना गर्दा कुल राजस्व असुली ३ प्रतिशतले वृद्धि भएको देखिन्छ । कुल राजस्व असुलीमा रु. २३ अर्ब ८७ करोड ८६ लाख कर राजस्व र रु. ५ अर्ब २७ करोड १ लाख गैरकर राजस्व रहेको छ । कर राजश्वमा यस अवधिमा ४.६ प्रतिशतले वृद्धि भएको देखिएको छ । यसरी वृद्धि हुनुमा आर्थिक वर्ष २०५८।५९ को बजेट वक्तव्यमा उल्लेख भए वमोजिम २०५८ श्रावण १ गतेको प्रचलित मूल्यमा सम्पत्तिको मूल्य स्वयं घोषणा गरी सो को १० प्रतिशत वरावरको रकम २०५८ पौष मसान्त भित्र तिरेमा यसरी तिरेको करलाई नै अन्तिम कर मानी सम्पत्तिको श्रोतको छानविन नगरिने प्रत्याभुति दिने प्रस्ताव कार्यान्वयनमा आउनु एक प्रमुख कारकको रुपमा देखा परेको छ । कर राजस्व परिचालनमा यो कदम एक सशक्त कदमको रुपमा देखा परेको छ ।

२.१६ चालु आर्थिक वर्षको पहिलो आठ महिनासम्ममा भन्सार तर्फ रु. ७ अर्ब ९७ करोड ९८ लाख असुली भएको छ । सो रकम गत आर्थिक वर्षको यसै अवधिको असुली भन्दा करिव २.१ प्रतिशतले बढी छ । आयकर तर्फ चालु आर्थिक वर्षको पहिलो आठ महिनासम्म रु. ४ अर्ब ५५ करोड २ लाख पुगेको छ । यो रकम गत आर्थिक वर्षको यसै अवधिमा संकलित भएको रु. ४ अर्ब २२ करोड ८६ लाख भन्दा ७.६ प्रतिशतले बृद्धि भएको छ ।

२.१७ मूल्य अभिबृद्धिकर तर्फ चालु आर्थिक वर्षको प्रथम आठ महिनासम्ममा जम्मा रु. ७ अर्ब ६० करोड ९८ लाख राजस्व असुली भएको छ । गत आर्थिक वर्षको यसै अवधिको तुलनामा यो ३.२ प्रतिशतले वढी छ । समीक्षा अवधिमा गत आर्थिक वर्षको यसै अवधिको तुलनामा वस्तु तथा सेवाको उत्पादन तथा उपभोगमा रु. १० अर्ब ५ करोड ४० लाख असुली पुगेको छ । यो गत वर्षको यसै अवधिको तुलनामा १.७ प्रतिशतले वढी छ । मालपोत तर्फको घर जग्गा रजिष्ट्रेशन र मालपोत असुलीमा गत आर्थिक वर्षको यसै अवधिमा रु. ३० करोड ६३ लाख राजस्व असुली भएकोमा यस आर्थिक वर्ष

समीक्षा अवधिमा ८७.५ प्रतिशतले वृद्धि भई रु. ५७ करोड ४२ लाख असुली भएको छ ।

२.१८ गैर कर राजस्वतर्फ चालु आर्थिक वर्षको पहिलो आठ महिनामा गत आर्थिक वर्षको समीक्षा अवधिको तुलनामा ३.७ प्रतिशतले कमी आई रु. ५ अर्ब २७ करोड १ लाख पुगेको छ । उक्त असुली गत वर्षको सोही अवधिमा रु. ५ अर्ब ४७ करोड ५ लाख थियो ।

## वैदेशिक सहायता

२.१९ आर्थिक वर्ष २०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा स्वीकृत वैदेशिक सहायतामा ५३.० प्रतिशतले बृद्धि भई रु. ३१ अर्व २८ करोड ७० लाख पुगेको थियो। यस मध्ये अनुदानको अंश ४५.७ प्रतिशत र ऋणको अंश ५४.३ प्रतिशत रहेको थियो ।

२.२० आर्थिक वर्ष २०५७।५८ मा स्वीकृत सहायता मध्ये द्विपक्षीय सहायता रु. १७ अर्ब ४९ करोड ५९ लाख र वहुपक्षीय रु. १३ अर्ब ७९ करोड १० लाख रहेको थियो । यसरी स्वीकृत सहायता मध्ये द्विपक्षीयको अंश ५५.९ प्रतिशत र वहुपक्षीयको अंश ४४.१ रहेको थियो । आर्थिक वर्ष २०५६।५७ मा स्वीकृत सहायता मध्ये द्विपक्षीयमा रु. ११ अर्ब २९ करोड ३४ लाख अर्थात ५५.२ प्रतिशत र वहुपक्षीयमा रु. ९ अर्ब १५ करोड ४६ लाख अर्थात ४४.८ प्रतिशत प्राप्त भएको थियो ।

२.२१ नेपालको विकासमा समन्वित रुपमा सहायता उपलव्ध गराउन निरन्तर सहयोग पुऱ्याई आएका दातृ समूह अर्थात नेपाल विकास मञ्चको वैठक पहिलो पटक नेपालमै २०५८ माघ २२ देखि २५ सम्म सम्पन्न भयो । यस वैठकमा नेपालको विकास प्रयास र वस्तु स्थितिका सम्वन्धमा व्यापक छलफल भयो । यस वैठकले MTEF लागू गर्ने कुराको साथै सरकारले तयार गरेको नेपालको वैदेशिक सहायता नीति अनुरुप वैदेशिक सहायता परिचालन गर्ने समेत सहमति भएको छ ।

मञ्जुषा २ (२)

**नेपाल विकास मञ्च २००२**

नेपालमा सर्वप्रथम आयोजित नेपाल विकास मञ्चको वैठक यही २०५८ माघ २२ गते देखि २५ गतेसम्म ४ दिन काठमाण्डौ र पोखरामा सम्पन्न भयो । अर्थ मन्त्री डा. राम शरण महत र विश्व वैंकका उपाध्यक्ष (Vice President) डा. मिएको निसिमिजुले यस वैठकको सह-अध्यक्षता गर्नु भएको थियो । यस वैठकमा विश्वका विभिन्न २३ वटा दातृ राष्ट्रहरु तथा अन्तर्राष्ट्रिय संगठनहरुको सहभागिता रहेको थियो । यस अघि नेपाल सहायता समूहको रुपमा पेरिसमा हुने गरेको यस प्रकारको वैठक नेपालमा भएबाट दातृ समूहले वैदेशिक सहायताबाट लाभान्वित हुने समूहसंगको प्रत्यक्ष अन्तर्क्रियाको अवसर प्राप्त गरे भने नेपालको प्रत्यक्ष अवलोकन गर्ने अवसरबाट विश्व सामू नेपालको परिचय बढ्न गएको छ । नेपालको द्रुततर आर्थिक विकासका सन्दर्भमा आगामी १० औ योजनामा गरीवी निवारणको लागि Poverty Reduction Strategy को आवश्यकतालाई जोड दिई वार्षिक वजेटमा पर्न सक्ने कठिनाई कम गर्न Medium Term Expenditure Framework (MTEF) लागू गर्ने सम्वन्धमा नेपाल र दातृ समूहका वीचमा यस वैठकमा सहमति भयो । दातृ संस्था तथा राष्ट्रहरुले नेपालको आर्थिक विकासमा देखाएको निरन्तर प्रतिवद्धता यस वैठकको महत्वपूर्ण उपलव्धि मान्न सकिन्छ । दातृ समूहले उपयोगिता तथा उपलव्धिको आधारमा गरीवी निवारणको लागि नेपाललाई वार्षिक ५० करोड अमेरिकी डलर सहयोग गर्ने प्रतिवद्धताका साथ वैठक समाप्त भएको थियो ।

**अनुदान तथा ऋण**

२.२२ चालु आर्थिक वर्षको पहिलो आठ महिनामा गत आर्थिक वर्षको सोही अवधिको तुलनामा बैदेशिक सहायतामा ५८.३ प्रतिशतले बृद्धि भई रु. ३० अर्ब ३९ करोड ८८ लाख पुगेको छ । स्वीकृत सहायता रकम मध्ये अनुदान रु. २० अर्ब ५१ करोड १४ लाख र ऋण रु. ९ अर्ब ८८ करोड ७४ लाख भई अनुदान र ऋण अनुपात क्रमश: ६७.५ र ३२.५ प्रतिशत रहेको छ । सहायताको वनौट हेर्दा द्विपक्षीयतर्फ रु. १५ अर्ब ७० करोड ७० लाख र वहुपक्षीयतर्फ रु. १४ अर्ब ६९ करोड १८ लाख रहेका देखिन्छ । आर्थिक वर्ष २०५७/५८ को सोही अवधिमा अनुदानको अंश २८.७ प्रतिशत र ऋणको अंश ७१.३ प्रतिशत तथा द्विपक्षीय सहायताको अंश २८.२ प्रतिशत र वहुपक्षीय सहायताको अंश ७१.८ प्रतिशत रहेको थियो । अघिल्लो आर्थिक वर्ष २०५७/५८ को प्रथम आठ महिना र चालु आर्थिक वर्षको आठ महिनाको तुलना गर्दा अनुदान रकममा २७२.४ प्रतिशतले बृद्धि भएको देखिन्छ ।

**प्रतिवद्धता तथा उपयोग**

२.२३ चालु आर्थिक वर्षको प्रथम आठ महिनामा स्वीकृत सहायता आर्थिक वर्ष २०५७/५८ को आठ महिनामा ५८.३ प्रतिशतले बृद्धि भई ३० अर्ब ३९ करोड ८८ लाख पुगेको देखिन्छ । क्षेत्रगत रुपले हेर्दा चालु आर्थिक वर्षको प्रथम आठ महिनामा स्वीकृत सहायता रकम मध्ये पिउने पानीमा रु. ६ अर्ब १३ करोड ५० लाख (२०.२ प्रतिशत), कृषि, सिंचाई, वनतर्फ रु. ६८ करोड १३ लाख (२.२ प्रतिशत), यातायात तथा संचार तर्फ रु. ३ अर्ब ९४ करोड ३५ लाख (१३.० प्रतिशत), बिद्युत तर्फ रु. ७५ करोड ८५ लाख (२.५ प्रतिशत), शिक्षा तर्फ रु. २ अर्ब ७४ लाख (६.६ प्रतिशत), ग्रामिण विकास तर्फ रु. १ अर्ब ५८ करोड ३८ लाख (५.२ प्रतिशत), स्वास्थ्य तर्फ रु. ४ अर्ब ८९

करोड ५६ लाख (१६.१ प्रतिशत) र बाँकी अन्य क्षेत्रतर्फ १० अर्ब ३९ करोड ३७ लाख (३४.२ प्रतिशत) स्वीकृत भएको छ ।

२.२४ आर्थिक वर्ष २०५७।५८ मा वैदेशिक सहायता उपयोग रु. १८ अर्ब ७९ करोड ७४ लाख भई आर्थिक वर्ष २०५६।५७ को तुलनामा ७.३ प्रतिशतले बृद्धि भएको थियो । उक्त अवधिमा वैदेशिक ऋण रु. १२ अर्ब ४ करोड ४० लाख र वैदेशिक अनुदान रु. ६ अर्ब ७५ करोड ३४ लाख उपयोग भएको थियो । आर्थिक वर्ष २०५६।५७ मा रु. १७ अर्ब ५२ करोड ३९ लाख वैदेशिक सहायता मध्ये वैदेशिक ऋणमा रु. ११ अर्ब ८१ करोड २२ लाख र वैदेशिक अनुदानमा रु. ५ अर्ब ७१ करोड १७ लाख उपयोग भएको थियो । आर्थिक वर्ष २०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा वैदेशिक अनुदानको उपयोग १८.२ प्रतिशतले बृद्धि भएको देखिन्छ । आर्थिक वर्ष २०५६।५७ को कुल वैदेशिक सहायता उपयोगमा द्विपक्षीयको अंश २८.१ प्रतिशत र वहुपक्षीयको अंश ७१.९ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५७।५८ मा क्रमशः १४.७ प्रतिशत र ८५.३ प्रतिशत भई क्रमशः रु. २ अर्ब ७७ करोड १२ लाख र रु. १६ अर्ब २ करोड ६२ लाख उपयोग भएको देखिन्छ ।

२.२५ आर्थिक वर्ष २०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा वैदेशिक सहायताको उपयोग मध्ये कृषि, सिंचाई र वनमा १७.६ प्रतिशतले वृद्धि भई रु. ३ अर्ब ७७ करोड ४८ लाख, यातायात, विद्युत तथा संचारमा १३.२ प्रतिशतले बृद्धि भई रु. ९ अर्ब २३ करोड ५१ लाख, सामाजिक सेवामा ०.६ प्रतिशतले कमी आई रु. ५ अर्ब ७५ करोड ९५ लाख पुगेको देखिन्छ । उद्योग तथा वाणिज्यतर्फ भने आर्थिक वर्ष २०५६।५७ को तुलनामा विदेशी सहायताको उपयोग ९३.३ प्रतिशतले ह्रास आई रु. १ करोड ९९ लाख मात्र पुगेको देखिन्छ ।

**<u>तिर्न बाँकी वैदेशिक र आन्तरिक ऋण</u>**

२.२६ विकास खर्च व्यहोर्न राजस्व वचतवाट मात्र पर्याप्त नभएकोले उक्त खर्च वैदेशिक अनुदान तथा आन्तरिक र वाह्य ऋणवाट पूर्ति गरिदै आएको छ । विगत वर्षहरु देखि नै वैदेशिक ऋण बृद्धि हुदै जाने क्रम जारी छ । नेपाली मुद्राको अवमूल्यनले गर्दा वैदेशिक ऋणको भार प्रत्येक वर्ष वढ्दै गएको छ । आर्थिक वर्ष २०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा खूद तिर्न वाँकी वैदेशिक ऋण ५.७ प्रतिशतले बृद्धि भई रु. २०१ अर्ब ५५ करोड ६ लाख पुगेको देखिन्छ ।

२.२७ चालु आर्थिक वर्षको प्रथम आठ महिनामा बैदेशिक ऋण प्राप्ति र भुक्तानीको समायोजन गर्दा २०५८ फाल्गुणमसान्तमा खूद तिर्न वांकी बैदेशिक ऋण रु. २०७ अर्ब ३३ करोड १९ लाख पुग्न गएको छ । गत आर्थिक वर्षको तुलनामा चालु आर्थिक वर्षको प्रथम आठ महिनामा कुल बैदेशिक ऋणमा ४.६ प्रतिशतले बृद्धि भएको छ । साथै सोही अवधिमा रु. ५ अर्ब ६१ करोड ४५ लाख ऋण प्राप्त भएको र साँवा भुक्तानी रु. २ अर्ब ७७ करोड ५६ लाख तथा व्याज भुक्तानी रु. १ अर्ब २ करोड ६८ लाख भएको छ ।

२.२८ २०५७ आषाढको तुलनामा २०५८ आषाढमा आन्तरिक ऋण १०.५ प्रतिशतले बृद्धि भई रु. ६० अर्ब ४ करोड ३७ लाख पुगेको देखिन्छ । आन्तरिक ऋणमा नेपाल राष्ट्र बैंकको अंश २९.० प्रतिशत अर्थात रु. १७ अर्ब ३९ करोड ९७ लाख, वाणिज्य

बैंकहरुको अंश ४२.३ प्रतिशत अर्थात रु. २५ अर्ब ३९ करोड २९ लाख र अन्य संस्था तथा निजी क्षेत्रको अंश २८.७ प्रतिशत अर्थात रु. १७ अर्ब २५ करोड ११ लाख रहेको छ । आन्तरिक ऋण मध्ये विकास ऋण पत्र रु. ५ अर्ब ९६ करोड २२ लाख (९.९ प्रतिशत), राष्ट्रिय बचतपत्र रु. १२ अर्ब ४७ करोड ६४ लाख (२०.८ प्रतिशत), विशेष ऋण पत्र रु. १३ अर्ब ९९ करोड ४३ लाख (२३.३ प्रतिशत) र ट्रेजरी बिल रु. २७ अर्ब ६१ करोड ८ लाख (४६.० प्रतिशत) रहेको छ । २०५८ फाल्गुणसम्ममा आन्तरिक ऋण रु. ६९ अर्ब ४३ करोड ९६ लाख रहेको छ ।

२.२९ चालु आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा कायम रहेको आन्तरिक ऋण गत वर्षको दांजोमा १९.१ प्रतिशतले बृद्धि भएको देखिन्छ । यस मध्ये नेपाल राष्ट्र बैंकको अंश ३३.१ प्रतिशत, वाणिज्य बैंकको ३८.२ प्रतिशत र अन्य संस्था र निजी क्षेत्रको २८.७ प्रतिशत रहेको छ । विभिन्न ऋण पत्रहरु मध्ये ट्रेजरी विल अग्रस्थानमा रही ५९.२ प्रतिशत, राष्ट्रिय बचत पत्र १७.८ प्रतिशत, विशेष ऋण पत्र १२.६ प्रतिशत, विकास ऋण पत्र ९.८ प्रतिशत र नागरिक वचत पत्र ०.६ प्रतिशत रहेको छ ।

२.३० वित्तीय घाटा, प्राथमिक घाटा तथा ऋण/कुल गार्हस्थ्य उत्पादन अनुपात

तालिका २ (ग) : प्राथमिक र वित्तीय घाटा

करोडमा

| आर्थिक वर्ष | वित्तीय घाटा* | प्राथमिक घाटा** | ऋण/कुल गार्हस्थ्य उत्पादन अनुपात*** |
|---|---|---|---|
| २०५३/५४ | -१४३६.२ | -११६४.५ | ५९.९ |
| २०५४/५५ | -१७७७.८ | -१५२३.९ | ६६.४ |
| २०५५/५६ | -१७९९.१ | -१५५९.४ | ६४.१ |
| २०५६/५७ | -१७६६.७ | -१४४१.२ | ६४.५ |
| २०५७/५८ | -२४१८.८ | -२०९२.७ | ६३.८ |

* *कुल राजस्व + वैदेशिक अनुदान - कुल खर्च*

** *वित्तीय घाटा - खुद व्याज आय (व्याज आय तथा भुक्तानीको फरक)*

*** *आर्थिक वर्षको अन्त्यमा कायम रहेको कुल ऋणको आधारमा*

आर्थिक वर्ष २०५६/५७ मा उत्पादन मूल्यमा कुल गार्हस्थ्य उत्पादनको -४.७ वित्तीय घाटा भएकोमा आर्थिक वर्ष २०५७/५८ मा -५.९ पुगेको छ । यस्तै प्राथमिक घाटा अघिल्लो वर्ष -३.८ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५७/५८ मा -५.१ प्रतिशत पुगेको छ । अर्थतन्त्रमा ऋणको भार बढदै गएको स्थिति आर्थिक वर्ष २०५७।५८ मा कुल गार्हस्थ्य उत्पादनको अनुपातमा ऋण ६३.८ प्रतिशत रहनुबाट देखिएको छ ।

**वित्तीय घाटा र पूर्तिको श्रोत**

२.३१ आर्थिक वर्ष २०५७।५८ मा बजेट घाटा रु. २४ अर्ब १८ करोड ८१ लाख रहेको थियो । आर्थिक वर्ष २०५६।५७ संग तुलना गर्दा यो ३६.९ प्रतिशतले बढेको देखिन्छ । न्यूनपूर्ति गर्ने श्रोतहरु मध्ये आर्थिक वर्ष २०५७।५८ मा वैदेशिक ऋण परिचालनवाट रु. १२ अर्ब ४ करोड ४० लाख, आन्तरिक ऋण परिचालनवाट रु. ७ अर्ब र नगद मौज्दात परिचालनवाट रु. ५ अर्व १४ करोड ४१ लाखवाट पूर्ति गरिएको थियो ।

**चुनौतीहरु**

२.३२ कुल गार्हस्थ्य उत्पादनको तुलनामा राजस्व र खर्चको स्थितिलाई हेर्दा राजस्वको अनुपात भन्दा कुल सरकारी खर्च वढी भएकोले दीर्घकालीन रुपमै यस्ले अर्थतन्त्रलाई निकै प्रभाव पार्दै आएको छ । साधारण खर्चको तुलनामा विगत दुई वर्ष देखि विकास खर्चमा ह्रास हुदै गएको छ । त्यसकारण वर्तमान चुनौती भनेको साधारण खर्चमा मितव्ययिता ल्याउने, विकास खर्चलाई उच्च उत्पादनशील क्षेत्रमा लगानी गर्ने, राजस्वको दायरालाई अझ वढी फराकिलो गर्ने र न्यून वित्तमा कमी ल्याई वृहत आर्थिक स्थायित्व कायम गर्नु हो ।

२.३३ चालु आर्थिक वर्षको राजस्व असूलीको प्रवृत्ति तथा आगामी आर्थिक वर्षमा राजस्व अनुमानमा आउने कमी पुरा गर्न प्रशासनिक सुधार तथा उपलव्ध जनशक्तिको अधिकत्तम परिचालनद्वारा वक्यौता राजस्व असूलीलाई प्रभावकारी पारी राजस्व वृद्धि गर्नु पर्ने तथा सम्भाव्य क्षेत्रहरुको पहिचान गरी आन्तरिक राजस्व परिचालनमा प्रभावकारिता ल्याउनु पर्ने चुनौती श्री ५ को सरकार सामू विद्यमान छ ।

२.३४ माओवादी आतंकका कारण ध्वस्त भएका सार्वजनिक संरचनाको पुनर्निमाण गर्न र आतंकबाट पिडित एवं विस्थापित परिवारजनहरुलाई तत्काल राहत दिन आयमूलक पुनर्स्थापना कार्यक्रम संचालन गर्नु पर्ने वाध्यात्मक परिस्थितिको सामना गर्नका लागि पनि ठूलो धनराशी खर्च गर्नु पर्ने अवस्था पनि खर्च व्यवस्थापनका क्षेत्रमा गम्भीर चुनौती बनेको छ ।

२.३५ आतंकका कारण विकास आयोजनाहरु संचालन गर्नमा कठिनाई उत्पन्न भएको विवरणहरु जानकारीमा आएका छन् । यस सन्दर्भमा सुरक्षा तथा विकास कार्यक्रम संगसंगै लैजान सुरक्षा निकाय तथा सम्वन्धित मन्त्रालयहरु वीच साझा संयन्त्रको निर्माण गर्न आवश्यक देखिएको छ । यसै गरी संरचना ध्वस्त भएका जिल्लामा सम्वन्धित मन्त्रालयको कार्यक्रम यस वर्ष पुनसंरचनातर्फ केन्द्रित गर्न साधनको व्यवस्था गर्ने चुनौती सरकारका सामू छ ।

२.३६ वैदेशिक सहायताको स्वीकृति र उपयोगको अन्तरलाई कम गर्दै विदेशी सहायता उपयोगलाई गरीवी निवारण गर्ने राष्ट्रिय उद्देश्य हासिल गर्ने तर्फ अझ वढी परिचालन गर्नु पनि एउटा ठूलो चुनौती भएको छ ।

२.३७ निजी क्षेत्रले प्रतिस्पर्धा गर्न सक्ने वस्तु र सेवाहरुमा तिनकै लगानी प्रोत्साहित गराउने र सरकारी स्वामित्वमा रहेका संस्थानहरुलाई क्रमशः निजीकरण गरी साधन व्यवस्थापन गर्नु पनि चुनौतीपूर्ण रहेको छ ।

# ३. मूल्य तथा आपूर्ति स्थिति

## समष्टिगत मूल्य स्थिति

३.१ राष्ट्रिय शहरी क्षेत्रको उपभोक्ता मूल्य सूची (आधार वर्षः२०५२।५३=१००) को विन्दुगत रुपमा विश्लेषण गर्दा गत आर्थिक वर्ष २०५७।५८ को प्रथम आठ महिनामा ०.१ प्रतिशतले घटेको विन्दुगत मूल्य चालु आर्थिक वर्षको सोही अवधिमा ०.१ प्रतिशतले मात्र वृद्धि भएको छ । चालु आर्थिक वर्षको प्रथम आठ महिनामा औषत मूल्य वृद्धिदर ३ प्रतिशत रहेको छ जुन गत आर्थिक वर्षको यसै अवधिको २.१ प्रतिशतको तुलनामा केही बढी छ । चालु आर्थिक वर्षको समीक्षा अवधिमा खाद्य तथा पेय पदार्थको औषत मूल्य वृद्धि दर ३.९ प्रतिशत र गैर खाद्य वस्तु तथा सेवाको मूल्य वृद्धि दर १.९ प्रतिशत रहेको छ । क्षेत्रगत आधारमा विन्दुगत मूल्य हेर्दा तराईको उपभोक्ता मूल्य समीक्षा अवधिमा ०.४ प्रतिशतले वृद्धि भएको छ जुन गत अवधिमा १.६ प्रतिशतले ह्रास भएको थियो । समीक्षा अवधिमा पहाड र काठमाडौं उपत्यका दुबै क्षेत्रहरुको मूल्य भने क्रमशः ०.६ प्रतिशत र ०.२ प्रतिशतले घटेको छ । यी दुबै क्षेत्रहरुको मूल्य वृद्धि दर गत आर्थिक वर्षको समीक्षा अवधिमा क्रमशः ३.३ प्रतिशत र ०.४ प्रतिशत रहेको थियो ।

३.२ चालु आर्थिक वर्षको प्रथम आठ महिनामा खाद्यान्न उत्पादन यथावत रहे तापनि नगदेवालीको उत्पादन वृद्धि भएको, अत्यावश्यक वस्तुहरुको आपूर्ति नियमित रहेको,

विस्तृत मुद्रा प्रदायको वृद्धि दर उल्लेख्य रुपमा कम रहेको तथा भारतमा खाद्यान्नको उत्पादन सन्तोषजनक रही भारतीय थोक मूल्य सूचीमा पनि सुधार हुंदै गएबाट सबै वस्तुहरुको विन्दुगत मूल्य सूची ०.१ प्रतिशतले मात्र वृद्धि भएको छ । विन्दुगत हिसाबले शिक्षा, शैक्षिक सामग्री तथा मनोरञ्जनको मूल्य सूची बाहेक गैर खाद्य वस्तु तथा सेवा समूहको सबै उपसमूहरुको मूल्य केही बढे तापनि खाद्य तथा पेय पदार्थ समूहको अधिकांश उपसमूहहरुको मूल्य सूची ह्रास भएको हुँदा समीक्षा अवधिमा समष्टिगत मूल्य स्थितिमा नगण्य रुपमा मात्र चाप परेको हो ।

## खाद्य तथा पेय पदार्थ समूह

३.३ समूहगत आधारमा विन्दुगत हिसावले चालु आर्थिक वर्षको प्रथम आठ महिनामा खाद्य तथा पेय पदार्थ समूहको मूल्य १.९ प्रतिशतले ह्रास भएको छ जुन गत आर्थिक वर्षको यसै अवधिमा ५.८ प्रतिशतले घटेको थियो । यसरी चालु आर्थिक वर्षको समीक्षा अवधिमा पनि यस समूहको मूल्य सूचीमा ह्रास हुनुको प्रमुख कारणहरुमा अन्न तथा त्यसबाट बनेका परिकार, मासु, माछा तथा फुल, तेल तथा घ्यू, पेय पदार्थ र जलपानहरुको मूल्य केही माथि गए तापनि तरकारी तथा फलफूल, दाल, मरमसला, दूध तथा दुग्ध पदार्थ र चिनीको मूल्यमा गिरावट देखिनु नै हो । समीक्षा अवधिमा खाद्य तथा पेय पदार्थ समूह अन्तर्गत अधिक भारयुक्त उपसमूह अन्न तथा त्यसबाट बनेका परिकारको मूल्य १.५ प्रतिशतले वृद्धि भएको छ । यो उपसमूहको मूल्यमा गत आर्थिक वर्षको सोही अवधिमा १४.७ प्रतिशतले ह्रास आएको थियो ।

३.४ दलहनको मूल्य आर्थिक वर्ष २०५७।५८ मा १.७ प्रतिशतले घटेकोमा समीक्षा अवधिमा ०.८ प्रतिशतले मात्र ह्रास भएको छ । नेपाल र भारत दुबै देशहरुमा दलहनको उत्पादन स्थिति सन्तोषजनक रही आपूर्ति स्थिति नियमित रहेबाट यो उपसमूहको मूल्य घटेको हो । आर्थिक वर्ष २०५७।५८ को प्रथम आठ महिनामा तरकारी तथा फलफूलको मूल्य १८.४ प्रतिशतले ह्रास भएकोमा चालु आर्थिक वर्षको सोही अवधिमा १९.९ प्रतिशतले घट्न गएको छ । आलु, प्याज जस्ता प्रमुख तरकारीहरुको उत्पादन नेपाल र भारतमा पनि उल्लेख्य वृद्धि हुनाको साथै ॠतुगत तरकारीहरु तथा फलफूलहरुको आपूर्ति पनि नियमित रहेबाट यस उपसमूहको मूल्यमा उल्लेख्य रुपमा ह्रास देखा परेको छ । मरमसला उपसमूहको मूल्य चालु आर्थिक वर्षको प्रथम आठ महिनामा २.९ प्रतिशतले ह्रास भएको छ । गत आर्थिक वर्षको सोही अवधिमा यो उपसमूहको मूल्य ०.७ प्रतिशतले बढेको थियो । आयातीत मरमसलाहरु जस्तै जीरा र मरीचको मूल्यमा उल्लेख्य ह्रास हुनाको साथै स्वदेशी मसलाहरु जस्तै लसुन, खुर्सानी आदिको मूल्यमा सुधार भएबाट समीक्षा अवधिमा मरमसला उपसमूहको मूल्यमा ह्रास देखिएको हो ।

३.५ मासु, माछा तथा फुलको मूल्य चालु आर्थिक वर्षको प्रथम आठ महिनामा १.२ प्रतिशतले वृद्धि भएको छ जबकि गत आर्थिक वर्षको सोही अवधिमा यो उपसमूहको मूल्य १.८ प्रतिशतले बढेको थियो । पहाड र तराई क्षेत्रबाट जिउँदो खसीको आपूर्ति कम हुनु, पशुपन्छीको दानाको मूल्य वृद्धि हुनु तथा कुखुराको मासुको मूल्यमा गत वर्षको दाँजोमा केही चाप परेबाट यो उपसमूहको मूल्य बढ्न गएको हो । दूध तथा दुग्ध पदार्थ उपसमूहको मूल्य समीक्षा अवधिमा १.१ प्रतिशतले ह्रास भएको छ । गत आर्थिक वर्षको सोही अवधिमा यो उपसमूहको मूल्य ६.३ प्रतिशतले वृद्धि भएको थियो ।

तराई क्षेत्रमा दूधको उत्पादन सन्तोषजनक रही आपूर्ति स्थितिमा सुधार भएबाट यो उपसमूहको मूल्य घट्न गएको हो । चालु आर्थिक वर्षको समीक्षा अवधिमा तेल तथा घ्यूको मूल्य २.९ प्रतिशतले वृद्धि भएको छ जुन गत आर्थिक वर्षको सोही अवधिमा १.४ प्रतिशतले घटेको थियो । तोरीको उत्पादन लागत वृद्धिले गर्दा तेलको मूल्य बढ्नु तथा वनस्पति घ्यू तथा तेल भारततर्फ उल्लेख्य निर्यात भएबाट यो उपसमूहको मूल्यमा केही चाप पर्न गएको हो ।

३.६ चिनी तथा गुलियो पदार्थको मूल्य चालु आर्थिक वर्षको प्रथम आठ महिनामा ३.६ प्रतिशतले ह्रास भएको छ जुन गत आर्थिक वर्षको सोही अवधिमा ७.६ प्रतिशतले वढेको थियो । गत वर्षको तुलनामा यस वर्ष चिनीको उत्पादन सन्तोषजनक भएको तथा आपूर्ति मजबूत तुल्याउन नेशनल ट्रेडिङ्ग लि.ले ४०,००० मेट्रिक टन चिनी आयात गरी बिक्री वितरण गरेको र चाकुको मूल्य पनि घटेकोले यो उपसमूहको मूल्यमा ह्रास भएको हो । पेय पदार्थको मूल्य आर्थिक वर्ष २०५७/५८ को प्रथम आठ महिनामा २.२ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षको सोही अवधिमा ४.६ प्रतिशतले बढेको छ । आयातीत हर्लिक्सको मूल्य वृद्धि तथा श्री ५ को सरकारले अन्तःशुल्क दरमा गरेको परिवर्तनबाट हल्का पेय पदार्थ जस्तै कोकाकोला, फ्याण्टाको साथै मदिरा र बियरहरुको मूल्य वृद्धि हुन गएबाट यो उपसमूहको मूल्य वृद्धि भएको हो । रेष्टुराँको खाना (जलपान) उपसमूहको मूल्य चालु आर्थिक वर्षको समीक्षा अवधिमा २.४ प्रतिशतले वृद्धि भएको छ । गत आर्थिक वर्षको सोही अवधिमा यो वृद्धि ७.५ प्रतिशत थियो । यो उपसमूहको मूल्य वृद्धि हुनुमा पेय पदार्थ, खसी र कुखुराको मासु तथा तेल तथा घ्यू जस्ता सहायक पदार्थहरुको मूल्य वृद्धि प्रमुख रहेका छन् ।

## गैरखाद्य वस्तु तथा सेवा समूह

३.७ चालु आर्थिक वर्षको समीक्षा अवधिमा गैरखाद्य वस्तु तथा सेवा समूहको मूल्य २.० प्रतिशतले वृद्धि भएको छ । गत आर्थिक वर्षमा यो समूहको मूल्य ६.५ प्रतिशतले वृद्धि भएको थियो । यस समूह अन्तर्गतका उपसमूहहरु मध्ये शिक्षा, शैक्षिक सामग्री तथा मनोरञ्जन उपसमूह बाहेक अन्य सबै उपसमूहहरुको मूल्य वृद्धि दर समीक्षा अवधिमा ०.१ प्रतिशतदेखि ६.० प्रतिशतसम्म रहेको छ जुन गत वर्ष ०.८ प्रतिशतदेखि १४.३ प्रतिशतसम्म रहेको थियो । लत्ता कपडा तथा तयारी लुगा उपसमूहको मूल्य चालु आर्थिक वर्षको समीक्षा अवधिमा २.१ प्रतिशतले वृद्धि भएको छ । गत आर्थिक वर्षमा यो वृद्धि दर २.७ प्रतिशत रहेको थियो । केही आयातीय कपडा एवं तयारी लुगाहरुको पैठारी मूल्यमा वृद्धि तथा सिलाई खर्चमा समेत वृद्धि भएबाट यो उपसमूहको मूल्य बढ्न गएको देखिन्छ । जुत्ता उपसमूहको मूल्य चालु आर्थिक वर्षको प्रथम आठ महिनामा १.० प्रतिशतले वृद्धि भएको छ । गत आर्थिक वर्षको सोही अवधिमा यो उपसमूहको मूल्य वृद्धि दर ०.८ प्रतिशत रहेको थियो । जुत्ता निर्माताहरुले मूल्य वृद्धि गरेको तथा जुत्ताको पालिसको समेत मूल्य वृद्धिले गर्दा यो उपसमूहमा चाप परेको हो ।

३.८ घरायसी सामान उपसमूहको मूल्य चालु आर्थिक वर्षको समीक्षा अवधिमा २.५ प्रतिशतले वृद्धि भएको छ । गत आर्थिक वर्षमा यो उपसमूहको मूल्य सूची ७.६ प्रतिशतले बढेको थियो । खानेपानी शुल्कमा गरिएको वृद्धि, घरायसी प्रयोजनका आयातीत सामानहरुको पैठारी मूल्य वृद्धि तथा घर भाडामा भएको वृद्धिले गर्दा यो

उपसमूहको मूल्य वृद्धि भएको हो । यातायात तथा संचार उपसमूहको मूल्य गत आर्थिक वर्षमा ६.९ प्रतिशतले बढेकोमा चालु आर्थिक वर्षको समीक्षा अवधिमा ०.१ प्रतिशतले मात्र वृद्धि भएको छ । श्री ५ को सरकारले टेलिफोन शुल्कमा थप ५ प्रतिशत दस्तुर लगाएको हुँदा यो उपसमूहको मूल्यमा सीमान्त वृद्धि भएको हो । औषधी तथा व्यक्तिगत हेरचाह उपसमूहको मूल्य चालु आर्थिक वर्षको समीक्षा अवधिमा ६.० प्रतिशतले वृद्धि भएको छ जुन गत आर्थिक वर्ष सोही अवधिमा ४.३ प्रतिशतले बढेको थियो । विभिन्न आयातीत औषधिहरुको मूल्य भारतबाट नै वृद्धि हुनाको साथै डाक्टरद्वारा परीक्षण शुल्क केही बढाइएको हुँदा यो उपसमूहको मूल्य वृद्धि भएको हो ।

३.९ शिक्षा, शैक्षिक सामग्री तथा मनोरञ्जन उपसमूहको मूल्य चालु आर्थिक वर्षको समीक्षा अवधिमा १.५ प्रतिशतले ह्रास भएको छ जुन आर्थिक वर्ष २०५७।५८ को सोही अवधिमा १४.३ प्रतिशतले वृद्धि भएको थियो । सरकारीस्तरबाट सञ्चालित विद्यालयहरुले शिक्षण शुल्कमा कमी गरेबाट यो उपसमूहको मूल्यमा ह्रास भएको हो । चुरोट उपसमूहको मूल्य आर्थिक वर्ष २०५७।५८ को प्रथम आठ महिनामा ०.८ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षको सोही अवधिमा ४.२ प्रतिशतले बढेको छ । श्री ५ को सरकारले सूर्ती चुरोट जस्ता वस्तुहरुमा लाग्ने अन्तःशुल्क वृद्धि गरेको हुँदा यो उपसमूहको मूल्य वृद्धि भएको हो ।

## राष्ट्रिय थोक मूल्य सूची

३.१० मूल्य तथ्याङ्कको दायरा फराकिलो पार्ने र यसको प्रभावकारितामा वृद्धि गर्ने उद्देश्यले आर्थिक वर्ष २०५२।५३ को बजेट वक्तव्य र नवौं योजनामा समेत उल्लेख भए अनुसार नेपाल राष्ट्र बैंकले राष्ट्रिय थोक मूल्य सूचीको विकास गरी चालु आर्थिक वर्षको शुरुवातदेखि उक्त सूची नियमित रुपमा प्रकाशित गर्न थालेको छ । थोक मूल्य सूची विकासको लागि नेपाल राष्ट्र बैंकले संचालन गरेको थोक मूल्य सूची विकास सर्भेक्षण प्रतिवेदनको आधारमा नेपाल अधिराज्यका २० वटा बजार केन्द्रहरुबाट ७१ वटा वस्तुहरुको ४१५ वटा थोक मूल्य संकलन गरी आर्थिक वर्ष २०५६।५७ लाई आधार वर्ष मानी मासिक रुपमा राष्ट्रिय थोक मूल्य सूची तयार गर्ने गरिएको छ । राष्ट्रिय थोक मूल्य सूचीलाई कृषि (४९.५९ प्रतिशत भार), स्वदेशी उत्पादन (२०.३७ प्रतिशत भार) र आयातीत (३०.०४ प्रतिशत भार) वस्तुहरु गरी तीन समूहमा विभाजित गरिएको छ ।

३.११ राष्ट्रिय थोक मूल्य सूची (२०५६।५७ = १००) अनुसार चालु आर्थिक वर्षको प्रथम आठ महिनामा विन्दुगत रुपमा समग्र मूल्य स्थितिमा १.१ प्रतिशतले ह्रास आएको छ । समूहगत रुपमा हेर्दा कृषि सम्बन्धी वस्तुहरुको मूल्यमा ४.२ प्रतिशतले ह्रास आएको छ भने स्वदेशमा उत्पादित औद्योगिक वस्तुहरुमा ४.३ प्रतिशतले वृद्धि र आयातीत वस्तुहरुमा ०.५ प्रतिशतले वृद्धि भएको छ । चालु आर्थिक वर्षको कृषि उत्पादन स्थिति समग्रमा सन्तोषजनक रहेको र कृषकहरु व्यावसायिक रुपमा तरकारी खेती तथा पशुपालन व्यवसायतर्फ उत्साहित भएको कारण आपूर्ति स्थिति सुदृढ भएकोले कृषि सम्बन्धी वस्तुहरुको मूल्य सूची ह्रासोन्मुख देखिएको छ । स्वदेशमा उत्पादित औद्योगिक वस्तुहरु अन्तर्गत चिया, चिनी आदि वस्तुहरुको मूल्य ह्रासोन्मुख भए तापनि चुरोट, पेय पदार्थ र तेलजन्य वस्तुहरुमा थप करका कारण मूल्य वृद्धि हुन गएको छ ।

आयातीत वस्तुहरुमा रासायनिक मल, हर्लिक्स तथा धुलो दूध, ग्लास सिट आदि वस्तुहरुको मूल्य वृद्धिको कारण यो समूहको मूल्यमा सामान्य वृद्धि भएको छ ।

मञ्जुषा ३ (१)

थोक मूल्य सूची

विश्वका धेरै मुलुकहरुले पहिलेदेखिनै मुद्रास्फीति मापनको लागि, Price movement पत्ता लगाउनको लागि, मूल्य नियन्त्रणको लागि, ठूला परियोजना विश्लेषणको लागि र अन्य प्रयोजनको लागि थोक मूल्य सूचीको प्रयोग गर्दै आएको पाइन्छ । यी उद्देश्यहरुका अतिरिक्त राष्ट्रिय लेखा (National Accounts) का लागि समेत थोक मूल्य सूचीको प्रयोग उपयोगी हुने देखिएको छ । देशको आर्थिक क्रियाकलाप र संरचना समयसंगै परिवर्तन हुंदै गइरहेको र आर्थिक वर्ष २०५७/५८ सम्म एक मात्र मूल्य सूची, शहरी क्षेत्रको उपभोक्ता मूल्य सूची, प्रयोगमा रहेकोमा यसवाट मात्र सवै प्रकारको मूल्य वा लागत स्थितिको विविध आयामहरुको विश्लेषण गर्न अपर्याप्त हुने भएकोले थोक मूल्य सूचीको आवश्यकता महशुस गरिएको हो । यसरी चालु आर्थिक वर्षको शुरुवातदेखि नेपाल राष्ट्र बैंकले राष्ट्रिय थोक मूल्य सूचीको निर्माण गरी सो सूची मासिक रुपमा प्रकाशित गर्दै आएको छ ।

## केही प्रमुख वस्तुहरुको सरदर खुद्रा मूल्य

३.१२ अधिराज्यको १० प्रमुख कृषिजन्य वस्तुहरुको २०५८ श्रावणको तुलनामा २०५८ फाल्गुणमा सरदर खुद्रा बजार मूल्य (प्रति किलोग्राम/लिटर) विश्लेषण गर्दा तीन वस्तुहरुको मूल्य बढेको छ भने सात वस्तुहरुको मूल्य घटेको छ । मूल्य बढेका वस्तुहरुमा सुकेको प्याज (११.१ प्रतिशत), गहुँ (४.४ प्रतिशत) र खसीको मासु (१.८ प्रतिशत) रहेका छन् । मूल्य घटेका वस्तुहरुमा आलु (२६.३ प्रतिशत), अदुवा (२५.२ प्रतिशत), चामल मोटो (४.७ प्रतिशत), मासको दाल (३.६ प्रतिशत), तोरीको तेल (२.३ प्रतिशत) रहरको दाल (०.६ प्रतिशत) र घ्यू खारेको (०.१ प्रतिशत) रहेका छन् । गत आर्थिक वर्षको यसै अवधि (२०५७ श्रावण-२०५७ फाल्गुण) मा मासको दाल, तोरीको तेल, खसीको मासु र सुकेको प्याजको मूल्य बढेकोमा वांकी छ वस्तुहरुको मूल्य घटेको थियो ।

३.१३ पहाडी क्षेत्रमा २०५८ श्रावणको तुलनामा २०५८ फाल्गुणमा उपरोक्त १० प्रमुख वस्तुहरुमध्ये चार बस्तुहरु (गहुँ, घ्यू खारेको, खसीको मासु र सुकेको प्याज) को सरदर खुद्रा बजार मूल्य बढेको छ भने वांकी छ वस्तुहरुको मूल्य घटेको छ । गत आर्थिक वर्षको यसै अवधिमा छ बस्तुहरु (गहुँ, मासको दाल, रहरको दाल, तोरीको तेल, खसीको मासु र सुकेको प्याज) को मूल्य बढेको र वांकी चार वस्तुहरुको मूल्य घटेको थियो । तराईमा २०५८ श्रावणको तुलनामा २०५८ फाल्गुणमा गहुँ, रहरको दाल र खसीको मासुको मूल्य बढेको छ भने वांकी सात बस्तुहरुको मूल्य घटेको छ । गत आर्थिक वर्षको यसै अवधिमा तोरीको तेल, घ्यू खारेको, खसीको मासु र सुकेको प्याजको मूल्य बढेको र अन्य छ वस्तुहरुको मूल्य घटेको थियो ।

३.१४ २०५७ फाल्गुणको तुलनामा २०५८ फाल्गुणमा पहाडी क्षेत्रमा उपरोक्त १० बस्तुहरुमध्ये चामल मोटो, तोरीको तेल, घ्यू खारेको, खसीको मासु, आलु र सुकेको प्याज गरी छ वस्तुको मूल्य बढेको छ भने अन्य चार बस्तुहरुको मूल्य घटेको छ । सोही अवधिमा तराईमा मूल्य वृद्धि भएका छ वस्तुहरुमा चामल मोटो, गहुँ, मासको

दाल, तोरीको तेल, खसीको मासु र आलु रहेका र बांकी वस्तुहरुको मूल्य घटेको छ । अधिराज्यव्यापी रुपमा हेर्दा उक्त अवधिमा मूल्य बढेका वस्तुहरुमा मासको दाल, तोरीको तेल, खसीको मासु र आलु रहेका र बांकी छ वस्तुहरुको मूल्य घट्न गएको छ ।

३.१५ उक्त १० कृषिजन्य वस्तुहरुको मासिक राष्ट्रिय सरदर खुद्रा मूल्यको विश्लेषण गर्दा आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा आर्थिक वर्ष २०५७।५८ को सोही अवधिको तुलनामा पाँच वस्तुहरुको मूल्य बढेको छ भने अन्य पाँच बस्तुहरुको मूल्य घटेको छ । मूल्य बढेका वस्तुहरुमा आलु (२३ प्रतिशत), तोरीको तेल (१०.२ प्रतिशत), खसीको मासु (६.१ प्रतिशत), सुकेको प्याज (४.२ प्रतिशत) र मासको दाल (१.६ प्रतिशत) रहेका छन् । मूल्य घटेका वस्तुहरुमा अदुवा (१६.२ प्रतिशत), गहुँ (७.८ प्रतिशत), चामल मोटो (७.२ प्रतिशत), रहरको दाल (३.९ प्रतिशत) र घ्यू खारेको (२.८ प्रतिशत) रहेका छन् ।

३.१६ पेट्रोलियम पदार्थको मूल्य स्थितिको विश्लेषण गर्दा चालु आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा आर्थिक वर्ष २०५७।५८ को मूल्यको तुलनामा पेट्रोल, डिजेल र मट्टितेलको मूल्यमा कुनै परिवर्तन नभई प्रति लिटर मूल्य क्रमशः रु. ४६, रु. २६।५० र रु. १७ कायम रहेको छ । आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा केही पेट्रोलियम पदार्थहरुको आपूर्ति स्थिति विश्लेषण गर्दा पेट्रोल ८.३ प्रतिशतले वृद्धि भई ६५,६९४ किलोलिटर, डिजेल ३.२ प्रतिशतले वृट्टि भई ३,४४,३४५ किलोलिटर, हवाई इन्धन ११.६ प्रतिशतले वृद्धि भई ७३,२३६ किलोलिटर तथा एल.पी. ग्यास ३५ प्रतिशतले वृद्धि भई ५४,१३९ मेट्रिक टन पुगेको छ । समीक्षा अवधिमा मट्टितेलको आपूर्ति भने २.८ प्रतिशतले घट्न गई ३,१६,०४२ किलोलिटर रहेको छ ।

## चुनौतीहरु

३.१७ नेपालको मूल्य तथा आपूर्ति समग्रमा अनिश्चितता र उतारचढावको स्थितिबाट उम्किन सकेको छैन । खाद्यान्न लगायत कतिपय आवश्यक उपभोग्य वस्तुहरु देशको कृषिको उत्पादन अवस्था, अन्य आन्तरिक उत्पादन स्थिति तथा अन्तर्राष्ट्रिय व्यापारको प्रवृत्तिबाट प्रत्यक्षतः प्रभावित रहेको छ ।

३.१८ श्री ५ को सरकारको स्वामित्वमा रहेका संस्थान र संगठनहरुबाट उत्पादित र उपलब्ध हुने वस्तु र सेवाको मूल्य र गुणस्तर प्रतिस्पर्धी वन्न सकेको छैन । खासगरी सार्वजनिक क्षेत्रका सेवाहरु (Public Utilities) जस्तै विद्युतको उच्च मूल्य र सिमित क्षेत्रका जनतामा मात्र सेवाको पहुंच तथा खानेपानीको अनिश्चित र सिमित आपूर्तिबाट उपभोक्ताहरुले कठिनाई भोग्नु परेको अवस्थामा सार्वजनिक सेवाहरुको प्रतिस्पर्धी मूल्य निर्धारणमा अनुकूल योगदान पुर्‍याउँदै यी सेवाको आपूर्ति देशभर वढाउँदै लग्नु पर्ने चुनौती विद्यमान छ ।

३.१९ कम आयश्रोत र दुर्गम क्षेत्रमा रहेका वासिन्दाहरुलाई उपलव्ध गराइदै आएको खाद्यान्न लगायत अत्यावश्यक वस्तुहरुको आपूर्ति व्यवस्थापन सुदृढीकरण गरी यस्ता वस्तुहरुको मूल्य र आपूर्ति स्थिति नियमित गराई राख्नु पर्ने चुनौती विद्यमान छ ।

३.२० प्रतिस्पर्धात्मक वातावरण र सक्षम बजार प्रणालीबाट उत्पादित र उपलव्ध हुने वस्तु र सेवाको मूल्यबाट आम उपभोक्ता, उत्पादक वा लगानीकर्त्ता, सरकार र सम्पूर्ण अर्थतन्त्र दिगो रुपमा लाभान्वित वन्ने भएकोले आर्थिक व्यवस्थापनको उद्देश्य र प्राथमिकता पनि सोही अनुरुप निर्धारित र कार्यान्वित हुनु पर्ने चुनौती रहेको छ ।

३.२१ नेपाल राष्ट्र बैंक ऐन, २०५८ अनुसार नेपाल राष्ट्र बैंकको एक प्रमुख उद्देश्य र उत्तरदायित्व मूल्य र शोधनान्तर स्थिरता कायम गर्ने रहेको परिप्रेक्ष्यमा देशको मूल्य स्थितिमा स्थायित्व ल्याउने गरी मौद्रिक नीतिको तर्जुमा र सोको कार्यान्वयन गर्नु पर्ने चुनौतीलाई आत्मसात गर्नु पर्ने अपरिहार्यता रहेको छ ।

# ४. मुद्रा, बैंकिंग तथा कर्जा

## मौद्रिक तथा वित्तीय क्षेत्र सम्वन्धी नीति

४.१ उच्च तथा दिगो आर्थिक वृद्धिका लागि तरलता नियमित गर्ने, शोधनान्तर स्थिति अनुकूल वनाउने र मुद्रास्फीति दर उपयुक्त सीमाभित्र कायम राख्ने मौद्रिक नीतिका प्रमुख लक्ष्यहरुका रुपमा रहँदै आएका छन् । यसका साथै वित्तीय क्षेत्रमा स्थायित्व प्रवर्द्धन गर्ने र सुरक्षित, स्वस्थ तथा सक्षम भुक्तानी प्रणालीको विकास गर्ने पनि मौद्रिक नीतिको लक्ष्यको रुपमा रहेको छ । उक्त लक्ष्य हासिल गर्नमा देशको केन्द्रीय वैंकको रुपमा नेपाल राष्ट्र वैंकलाई अझ बढी प्रभावकारी एवं सशक्त वनाउने हेतुले चालु आर्थिक वर्षमा नेपाल राष्ट्र बैंक ऐन, २०५८ तर्जुमा गरी लागू गरिएको छ ।

मञ्जुषा ४ (१)

नेपाल राष्ट्र बैंक ऐन, २०५८ अनुसार बैंकको उद्देश्य तथा काम कर्तव्य र अधिकार

बैंकको उद्देश्य

(क) अर्थतन्त्रको दिगो विकासको निमित्त मूल्य र शोधनान्तर स्थिरता कायम गर्नको लागि आवश्यक मौद्रिक तथा विदेशी विनिमय नीति निर्माण गरी सोको व्यवस्थापन गर्ने,
(ख) बैंकिंग तथा वित्तीय क्षेत्रको स्थायित्व र आवश्यक तरलतालाई प्रवर्द्धन गर्ने,
(ग) सुरक्षित, स्वस्थ तथा सक्षम भुक्तानी प्रणालीको विकास गर्ने,
(घ) बैंकिंग तथा वित्तीय प्रणालीको नियमन, निरीक्षण, सुपरिवेक्षण तथा अनुगमन गर्ने, र
(ङ) नेपाल अधिराज्यको समग्र बैंकिंग तथा वित्तीय प्रणालीको सम्बर्द्धन गरी सो प्रति सर्वसाधारणको विश्वसनीयता अभिवृद्धि गर्ने ।

बैंकको काम, कर्तव्य र अधिकार

(क) बैंक नोट तथा सिक्का निष्काशन गर्ने,
(ख) मूल्य स्थिरता कायम गर्न आवश्यक मौद्रिक नीति तर्जुमा गर्ने र सो नीति कार्यान्वयन गर्ने, गराउने,
(ग) विदेशी विनिमय नीति निर्माण गर्ने तथा सो नीति कार्यान्वयन गर्ने, गराउने,
(घ) विनिमय दर पद्धति निर्धारण गर्ने,

(ङ) विदेशी विनिमय संचितिको व्यवस्थापन र सञ्चालन गर्ने,
(च) वाणिज्य बैंक तथा वित्तीय संस्थालाई बैंकिंग तथा वित्तीय कारोबार गर्न इजाजतपत्र जारी गर्ने, त्यस्तो कारोबारको सम्बन्धमा आवश्यक नियमन, निरीक्षण, सुपरिवेक्षण तथा अनुगमन गर्ने,
(छ) श्री ५ को सरकारको बैंकर, सल्लाहकार तथा वित्तीय एजेन्टको रुपमा कार्य गर्ने,
(ज) वाणिज्य बैंक तथा वित्तीय संस्थाको बैंक तथा अन्तिम ऋणदाताको रुपमा कार्य गर्ने,
(झ) भुक्तानी, फछ्र्यौट (क्लियरिङ्ग) तथा हिसाब मिलान (सेटलमेन्ट) पद्धतिको स्थापना तथा प्रवर्द्धन गरी सो कार्यलाई नियमित गर्ने, र
(ञ) यस ऐन बमोजिम बैंकको उद्देश्य हासिल गर्नको निमित्त बैंकले गर्नु पर्ने अन्य आवश्यक कार्यहरु कार्यान्वयन गर्ने, गराउने ।

## बैक दर तथा पुनर्कर्जा

४.२ अर्थतन्त्रमा तरलताको कमी देखिएको र आर्थिक शिथिलता कायमै रहेको परिप्रेक्षमा नेपाल राष्ट्र बैंकले २०५८ पौष ५ गते मौद्रिक नीतिलाई थप लचिलो वनाउन बैंक दर तथा पुनर्कर्जादर र अनिवार्य नगद अनुपातमा परिवर्तन गरेको छ। यस अनुसार विदेशी मुद्रामा बैंकहरुवाट प्रवाह हुने निर्यात कर्जाको लागि २.० प्रतिशत, रुग्ण उद्योग पुनरुत्थानको लागि ३.० प्रतिशत, ग्रामीण विकास बैंकहरु तथा स्वदेशी मुद्राको निर्यात कर्जाका लागि ४.५ प्रतिशत र अन्य सवै प्रकारका कर्जामा ५.५ प्रतिशत पुनर्कर्जा दर कायम गरियो ।

मञ्जुषा ४ (२)
बैंक दर तथा पुनर्कर्जा दरमा गरिएको परिवर्तन प्रतिशत

| | विवरण | २०५८ श्रावण १ | २०५८ पौष ५ | फरक, प्रतिशत विन्दुमा |
|---|---|---|---|---|
| १ | बैंकहरुवाट विदेशी मुद्रामा प्रवाह हुने निर्यात कर्जाका लागि उपलव्ध गराउने पुनर्कर्जादर | ४.० | २.० | २.० |
| २ | रुग्ण उद्योग पुनरुत्थान कार्यक्रमका लागि वित्तीय संस्थानहरुवाट प्रवाह हुने कर्जाको पुनर्कर्जादर | ४.५ | ३.० | १.५ |
| ३. | ग्रामीण विकास बैंकहरु तथा स्वदेशी मुद्रामा निर्यात कर्जाका लागि प्रदान गरिने पुनर्कर्जादर | ५.५ | ४.५ | १.० |
| ४ | अन्य सवै प्रकारका कर्जामा प्रदान गरिने पुनर्कर्जादर | ६.५ | ५.५ | १.० |

साथै, बढीमा ४ प्रतिशतसम्म ब्याजदर कायम गरी विदेशी मुद्रामा प्रवाह गरिएको निर्यात कर्जाको हकमा मात्र माथि उल्लेखित २ प्रतिशत दरमा पुनर्कर्जा उपलब्ध गराउने व्यवस्था गरिएको छ।

४.३ नेपाल राष्ट्र बैंकमा वाणिज्य बैंक तथा कृषि विकास बैंकले राख्नु पर्ने नगद मौज्दातको सम्बन्धमा चल्ती र वचत निक्षेप दायित्वको ८.० प्रतिशत, मुद्दती दायित्वको ६.०

प्रतिशत र आफ्नो ढुकुटीमा राख्नुपर्ने नगद मौज्दातको हकमा कुल निक्षेप दायित्वको ३.० प्रतिशत रहेको साविकको व्यवस्थामा २०५८ पौष ५ गत देखि लागू हुनेगरी परिवर्तन गरिएको छ ।

मञ्जुषा ४ (३)

अनिवार्य नगद अनुपातमा गरिएको परिवर्तन

प्रतिशतमा

| | विवरण | २०५७ चैत्र ३१ | २०५८ पौष ५ | फरक, प्रतिशत विन्दुमा |
|---|---|---|---|---|
| (क) | नेपाल राष्ट्रबैंकमा राख्नु पर्ने नगद मौज्दात | | | |
| | (१) चल्ती र बचत निक्षेप दायित्वको | ८.० | ७.० | १.० |
| | (२) मुद्दती निक्षेप दायित्वको | ६.० | ४.५ | १.५ |
| (ख) | आफ्नो ढुकुटीमा राख्नु पर्ने नगद मौज्दात- कुल निक्षेप दायित्वको | ३.० | ३.० | - |

## वाणिज्य बैंकतर्फ

४.४ देशका दुई ठूला र पुराना वाणिज्य बैंकहरुको व्यवस्थापकीय र संरचनात्मक सुधार गर्न राष्ट्रिय वाणिज्य बैंकमा व्यवस्थापन समूह नियुक्त गर्ने सिलसिलामा संयुक्त राज्य अमेरिकाको Deloitte Touche Tohmatsu लाई छनौट गरी सम्झौता सम्पन्न भइसकेको छ । नेपाल बैंक लिमिटेडको विद्यमान संचालक समिति विघटन गरिएको छ र नयाँ व्यवस्थापन समूह छनौट गर्ने कार्य सम्पन्न भएको छ । साथै यस बैंकको व्यवस्थापन करारमा दिन लागिएको आयरल्याण्डको ICC बैंकसँग सम्झौता कार्य अघि बढिरहेको छ । साथै २०५८ श्रावण देखि लागू हुने गरी वाणिज्य वैंकहरुलाई निर्देशन जारी गरिएको छ ।

मञ्जुषा ४ (४)

२०५८ श्रावण १ गतेदेखि लागू हुने गरी वाणिज्य बैंकहरुलाई जारी भएको निर्देशन (Prudential Norms)

(क) पूँजीकोष सम्बन्धी व्यवस्था : वाणिज्य बैंकहरुले आर्थिक वर्ष २०५८।५९ को लागि आफ्नो जोखिम भारित सम्पत्तिको ४.५ प्रतिशत प्राथमिक पूँजी र ९.० प्रतिशत पूँजीकोष, आर्थिक वर्ष २०५९।६० को लागि ५.० प्रतिशत प्राथमिक पूँजी र १० प्रतिशत पूँजीकोष तथा आर्थिक वर्ष २०६०।६१ का लागि ६.० प्रतिशत प्राथमिक पूँजी र १२.० प्रतिशत पूँजीकोष कायम गर्नु पर्ने ।

(ख) कर्जा सापटको वर्गीकरण र सो को नोक्सानीमा कायम गर्नु पर्ने प्रोभिजन सम्बन्धी व्यवस्था : वाणिज्य बैंकहरुको कर्जा तथा विल्स खरीदलाई असल, कमसल, शंकास्पद र खराव गरी चार वर्गमा वर्गीकरण गरिएको छ । यसरी वर्गीकरण गरिएका कर्जा सापट तथा विल्स खरीदहरुको लागि बक्यौता रकमको आधारमा वाणिज्य बैंकहरुले असल कर्जाका लागि १ प्रतिशत, कमसल कर्जाका लागि २५ प्रतिशत, शंकास्पद कर्जाका लागि ५० प्रतिशत र खराव कर्जाका लागि १०० प्रतिशत कर्जा नोक्सानी व्यवस्था कायम गर्नु पर्ने ।

(ग) कर्जा सापट र सुविधाको सीमा निर्धारण सम्बन्धी व्यवस्था : यस व्यवस्था अनुसार वाणिज्य बैंकहरुले एकल ग्राहक, फर्म, कम्पनी वा आपसी सम्बन्ध भएका ग्राहकहरुको समूहलाई कोषमा आधारित कर्जा सापट आफ्नो प्राथमिक पूँजीको बढीमा २५ प्रतिशतसम्म र प्रतितपत्र, जमानत, स्वीकारपत्र, बचनबद्धता जस्ता गैरकोषमा आधारित वासलात बाहिरका सुविधाहरु आफ्नो प्राथमिक पूँजीको बढीमा ५० प्रतिशतसम्म प्रदान गर्न सक्ने । निर्देशन लागू हुनु पूर्व प्रदान भैसकेको कोष तथा गैरकोषमा आधारित कर्जा सापट वा सुविधाहरुलाई भने २०५९ आषाढ मसान्तभित्र कोषमा आधारित कर्जा सीमा प्राथमिक पूँजीको बढीमा ४० प्रतिशत तथा गैरकोषमा आधारित सुविधा सीमा प्राथमिक पूँजीको बढीमा ७५ प्रतिशत र २०६० आषाढ मसान्त भित्र त्यस्तो कर्जा सुविधा प्राथमिक पूँजीको बढीमा क्रमशः २५ र ५० प्रतिशत सीमा भित्र ल्याउनु पर्ने ।

(घ) लेखा नीति तथा वित्तीय विवरणहरुको ढांचा सम्बन्धी व्यवस्था : वाणिज्य बैंकहरुले वित्तीय विवरणको लेखा राख्ने ढाँचा, बैंकले अपनाउनु पर्ने लेखा नीति, वार्षिक लेखा विवरणहरुसंग प्रकाशित गर्नुपर्ने लेखा सम्बन्धी टिप्पणीहरु, बैंकको वासलात, नाफा नोक्सान हिसाव र नाफा नोक्सान बाँडफाँड हिसाव सम्बन्धी शीर्षकहरुको संक्षिप्त व्याख्याको व्यवस्था गरिएको ।

(ङ) जोखिम न्यूनिकरण गर्न गरिएको व्यवस्था : वाणिज्य बैंकहरुले बैंकिङ्ग कारोवार गर्दा उत्पन्न हुने तरलता, ब्याजदर, विदेशी विनिमय तथा कर्जा सम्बन्धी जोखिमहरुलाई यथासम्भव न्यूनिकरण गर्नु पर्ने ।

(च) संस्थागत सुशासन सम्बन्धी व्यवस्था : बैंकलाई व्यवसायिक रुपमा संचालन गर्न र वित्तीय रुपमा स्वस्थ एवं सुरक्षित राख्न बैंक संचालनमा संलग्न संचालक तथा कर्मचारीहरु उच्च नैतिकवान हुनु पर्ने र बैंकिङ्ग व्यवसायमा देखा परेका विविधता एवं जटिलतासंग मुकाविला गर्न सक्षम हुनु पर्ने । यस सन्दर्भमा संचालकले पालना गर्नुपर्ने आचरण, संचालकको कर्तव्य र उत्तरदायित्व, प्रमुख कार्यकारीको नियुक्ति, बैंकका कर्मचारीहरुले पालना गर्नुपर्ने आचरण, लेखापरीक्षण समिति र कर्जा प्रदान गर्नमा वन्देज जस्ता व्यवस्था उल्लेख गरिएको ।

(छ) निर्देशनहरु लागू गर्ने कार्य तालिका सम्बन्धी व्यवस्था : वाणिज्य बैंकको निरीक्षण तथा सुपरिवेक्षणको क्रममा देखिएका कैफियत, दिइएका निर्देशन आदि विषयका सम्वन्धमा निर्देशन मुताविक कार्यान्वयन भए नभएको, कैफियत सुधार भए नभएको, निर्देशन कार्यान्वयन गर्ने कार्य योजना आदि कुराको जानकारी सम्बन्धित वाणिज्य बैंकहरुले दिने समयावधि बारे निर्देशनमा उल्लेख गरिएको ।

(ज) शेयर तथा सुरक्षणपत्रमा गर्ने लगानी सम्बन्धी व्यवस्था : बैंकले सर्वसाधारणबाट संकलित निक्षेप लगायतका वित्तीय स्रोतहरुलाई परिचालन गरी प्रतिफलयुक्त सम्पत्तिहरु (Earning Assets) मा लगानी गर्दा त्यस्ता सम्पत्तिहरुमा अन्तरनिहित जोखिमलाई न्यूनीकरण गर्नु पर्ने ।

(झ) तथ्याङ्क विवरण सम्बन्धी व्यवस्था : नेपाल राष्ट्र बैंक ऐन, वाणिज्य बैंक ऐन, अन्तर्राष्ट्रिय लेखा प्रणाली, वाणिज्य बैंकहरुको कारोवार प्रकृति, नेपाल राष्ट्र बैंकबाट जारी गरिएका निर्देशनहरु, मुद्रा तथा बैंक सम्बन्धी अन्तर्राष्ट्रिय मुद्रा कोषले तयार पारेको Monetary and Financial Statistics Manual, 2000 आदिलाई आधार मानी वाणिज्य बैंकहरुले तथ्याङ्क विवरण पठाउनु पर्ने ।

(ञ) बैंकको संस्थापन शेयर नामसारी वा विक्री सम्बन्धी व्यवस्था : २०५८ चैत्र ५ गते देखि

लागू हुने गरी वाणिज्य बैंकहरुको संस्थापक शेयर नामसारी वा विक्री सम्बन्धी निर्देशन जारी । संस्थापक तथा संस्थापक समूहको शेयर लिने व्यक्ति वा संस्थाले आफ्नो स्वामित्वमा रहेको शेयर नामसारी वा विक्री गर्नु पूर्व नेपाल राष्ट्र बैंकको स्वीकृति लिनु पर्ने, संस्थापक समूहको शेयर नामसारी वा खरीद गरी लिने व्यक्ति वा संस्थाले जुन समूहबाट त्यस्तो शेयर नामसारी वा खरीद गरी लिएको हो सोही समूहमा समावेश हुने ।

४.५ नेपाल राष्ट्र बैंकको निर्देशनको नेपाल बैंक लि. र लुम्बिनी बैंक लि. को संचालक समितिले पटकपटक उल्लंघन गरेको, निक्षेपकर्ताको अहित हुने कार्य गरेको, बैंक राम्रोसंग संचालन नगरेको र बैंकले पूरा गर्नुपर्ने दायित्व पूरा गर्न नसकेको देखिएकोले लगानीकर्ता र निक्षेपकर्ताको हितलाई दृष्टिगत गरी नेपाल राष्ट्र बैंक ऐन, २०५८ को दफा ८६ को उपदफा (१) बमोजिम नेपाल बैंक लिमिटेडको संचालक समितिलाई २०५८।१२।१ मा र लुम्बिनी बैंक लि० को संचालक समितिलाई २०५८।१२।७ मा निलम्बन गरी बैंकको संचालक समितिबाट गर्नु पर्ने कार्य संचालन गर्न र बैंकको कारोवार चलाउन प्रत्येक बैंकमा तीन सदस्यीय व्यवस्थापन समिति गठन गरिएको छ ।

४.६ काठमाडौं महानगरपालिकामा केन्द्रीय कार्यालय रहने र अधिराज्यभर कारोवार गर्ने गरी अधिकृत पूँजी रु १ अर्ब र जारी तथा चुक्ता पूँजी रु ५० करोड प्रस्ताव गरिएको "सिद्धार्थ बैंक लिमिटेड" र पर्सा जिल्लाको वीरगञ्ज उप-महानगरपालिकामा प्रधान कार्यालय र काठमाडौं उपत्यका बाहेक अधिराज्यभर कारोवार गर्नेगरी अधिकृत पूँजी रु २४ करोड र जारी तथा चुक्ता पूँजी रु १२ करोड प्रस्ताव गरिएको "लक्ष्मी बैंक लिमिटेड" लाई मिति २०५८।५।९ को निर्णयानुसार बैंक स्थापना गर्न सहमति प्रदान गरिएको छ । लक्ष्मी बैंक लिमिटेडलाई मिति २०५८।१२।२८ देखि लागू हुने गरी बैंकिङ्ग कारोवार गर्ने इजाजतपत्र समेत प्रदान गरिएको छ ।

## विकास बैंकतर्फ

४.७ मिति २०५७ चैत्रदेखि २०५८ फाल्गुणसम्म ७ वटा विकास बैंकहरुले वित्तीय कारोवार गर्ने इजाजतपत्र प्राप्त गरेका छन् । यस अवधिमा नेपाल घरेलु तथा साना उद्योग विकास बैंक लि., काठमाडौं र साना किसान विकास बैंक लि., काठमाडौले राष्ट्रिय स्तरको विकास बैंकका रुपमा वित्तीय कारोवार गर्ने गरी इजाजत प्राप्त गरेका छन् । यूनाइटेड विकास बैंक लि., बारा, नारायणी औद्योगिक विकास बैंक, रत्ननगर, चितवन, डिप्रोक्स विकास बैंक लि., रत्ननगर, चितवन, छिमेक विकास बैंक लि., हेटौडा र स्वावलम्वन विकास बैंक लि., जनकपुरले जिल्लास्तरीय विकास बैंकको रुपमा न्यूनतम १ जिल्लादेखि बढीमा १० जिल्लासम्म कार्य क्षेत्र रहने गरी वित्तीय कारोबारको इजाजतपत्र प्राप्त गरेका छन् । यी विकास बैंकहरुमध्ये डिप्रोक्स, छिमेक र

स्वाबलम्वन विकास बैंकहरु लघु वित्त विकास बैंकको रुपमा र साना किसान विकास बैंक लि. साना किसानहरुको विकासको लागि थोक र पुनर्कर्जा प्रदान गर्ने विकास बैंकको रुपमा स्थापना भएका छन् ।

४.८ विकास बैंक ऐन, २०५२ अन्तर्गत स्थापना भएका विकास बैंकहरुलाई जारी भएका निर्देशनमा केही दफाहरु संशोधन गरिएका छन् । विकास बैंकहरुको तरलतासम्बन्धी गणना अवधिमा संशोधन गरी साप्ताहिक रुपमा कायम हुन आउने औषत तरल मौज्दातलाई तरल सम्पत्तिको रुपमा गणना गर्नुपर्ने र प्राथमिक पूँजीकोषको तोकिएको सीमाभन्दा बढी निक्षेप संकलन गरिरहेका बैंकले उक्त सीमाभित्र नआएसम्म लाभाँश वितरण गर्न नपाउने व्यवस्था गरिएको छ । यस अतिरिक्त कृषि विकास बैंक, नेपाल औद्योगिक विकास निगम, विकास बैंकहरु र लघु वित्त विकास बैंकहरुको लागि नयाँ निर्देशनहरुको तर्जुमा कार्य प्रारम्भ भइसकेको छ ।

## ग्रामीण विकास बैंक तर्फ

४.९ ग्रामीण विकास बैंकहरुमा विभिन्न संरचनात्मक सुधार कार्यक्रमहरु क्रमशः लागू गर्दै लैजाने निर्णय गरिए अनुरुप ग्रामीण विकास बैंक सम्बन्धी नीतिगत संयोजन र समन्वयको कार्यका लागि नेपाल राष्ट्र बैंकका डेपुटी गभर्नरको अध्यक्षतामा एक "ग्रामीण विकास बैंक(उच्चस्तरीय समन्वय तथा निर्देशन समिति" गठन गरिएको छ । कर्मचारी एवं शाखागत उत्पादकत्व क्रमशः वृद्धि गर्दै लगी आगामी ५ वर्षभित्रमा ग्रामीण बैंकहरुलाई लाभ-हानी पार विन्दुमा पुऱ्याउने उच्चस्तरीय समन्वय तथा निर्देशन समितिबाट तर्जुमा भएको उत्पादकत्व सम्बन्धी मापदण्ड (productivity norms) लागू गर्ने निर्देशन ५ वटै ग्रामीण बैंकहरुलाई जारी गरिएको छ । यो मापदण्ड हासिल गर्ने उद्देश्यले व्यावसायिक कार्ययोजना बनाएर मात्र कार्यक्रम संचालन गर्नु पर्ने, उत्पादकत्वको मापदण्डलाई आधार मानेर कार्य योजना तर्जुमा हुनुपर्ने र यस्तो योजना संचालक समितिबाट स्वीकृत गराई उच्चस्तरीय समन्वय समितिमा पेश गर्नुपर्ने व्यवस्था गरिएको छ । पाँच वटै ग्रामीण बैंकहरुको विद्यमान नियमावलीहरुमा कर्मचारीहरुको सेवा, शर्त, सुविधा सम्बन्धी विषयहरुमा एकरुपता ल्याउने उद्देश्यले एक समिति गठन गरिएको छ । ग्रामीण विकास बैंकहरुको कार्यकारी निर्देशकको छनौट एवं नियुक्ति खुला प्रतिस्पर्धाबाट गर्ने सम्बन्धमा आवश्यक प्रक्रियाहरुको थालनी गर्न उच्चस्तरीय समन्वय समितिबाट सम्बन्धित बैंकहरुलाई निर्देशन दिइएको छ । आगामी आषाढसम्ममा यस्तो छनौट कार्य सम्पन्न गर्ने लक्ष्य रहेको छ ।

४.१० ग्रामीण विकास बैंकहरुको आर्थिक वर्ष २०५७।५८ सम्मको कुल संचिति नोक्सानी रु. १६ करोड २८ लाखमध्ये एक पटकलाई पूँजीगत अनुदानको रुपमा श्री ५ को सरकारले रु. ५ करोड (३० प्रतिशत) र नेपाल राष्ट्र बैंकले रु. ११ करोड २८ लाख (७० प्रतिशत) व्यहोर्ने निर्णय भए अनुसार बैंकहरुलाई पूँजी उपलब्ध गराईएको छ । ग्रामीण विकास बैंकहरुको २०५८ आषाढसम्मको संचित नोक्सानी व्यहोरी सकेपछि ग्रामीण विकास बैंकहरुलाई थोक कर्जा वितरण गर्ने कामको तत्काल थालनी गर्न २०५८ मंसीरमा Rural Micro Finance Development Center (RMDC) लाई

निर्देशन दिइएको छ । सुदूर-पश्चिमाञ्चल ग्रामीण विकास बैंक लि. मा अधिक संख्यामा रहेका कर्मचारीहरुलाई Golden Handshake योजना अन्तर्गत यसै आर्थिक वर्षभित्र अवकाश दिने योजना रहेको छ । यसको लागि लाग्ने खर्च श्री ५ को सरकारले ३० प्रतिशत र नेपाल राष्ट्र बैंकले ७० प्रतिशतको अनुपातमा व्यहोर्ने सहमति भएको छ । हाल नोक्सानमा नरहेको बैंकबाट परीक्षणका रुपमा निजीकरण प्रक्रिया अगाडि बढाउने उद्देश्यले पश्चिमाञ्चल ग्रामीण विकास बैंक लि. मा नेपाल राष्ट्र बैंकको स्वामित्वमा रहेको शेयरमध्ये ४४.५ प्रतिशत शेयरको यही आषाढ भित्रमा निजीकरण प्रक्रिया शुरु गर्ने गरी काम भइरहेको छ ।

**वित्त कम्पनीतर्फ :**

४.११ वित्त कम्पनी ऐन, २०४२ अन्तर्गत वित्तीय कारोवार गर्न इजाजत प्राप्त वित्त कम्पनीको संख्या ५२ पुगेको छ । २०५७ चैत्रदेखि २०५८ फाल्गुणसम्मको अवधिमा ४ वटा वित्त कम्पनीलाई वित्तीय कारोवार इजाजत पत्र प्रदान गरिएको छ । ती हुनः वर्ल्ड मर्चेण्ट बैंक एण्ड फाइनान्स लि., हेटौंडा, क्यापिटल मर्चेण्ट बैंक एण्ड फाइनान्स लि., काठमाडौं, क्रिष्टल फाइनान्स लि., काठमाडौं र रोयल मर्चेण्ट बैंकिङ्ग एण्ड फाइनान्स लि., काठमाडौं । उपरोक्त चारैवटा वित्त कम्पनीहरु सञ्चालनमा आइसकेका छन् ।

मञ्जुषा ४ (५)

वित्त कम्पनीहरूको नियमन व्यवस्था

२०५८ माघ १ गते देखि लागू हुने गरी वित्त कम्पनीहरुलाई नियमन गर्न निम्न अनुसारको नयाँ निर्देशनहरु जारी गरिएको छ :

(क) पूँजी कोष : वित्त कम्पनीहरुलाई आफ्नो कुल जोखिम भारित सम्पत्तिको आधारमा आर्थिक वर्ष २०५८।५९ को लागि न्यूनतम प्राथमिक पूँजीकोष ५ प्रतिशत र कुल पूँजीकोष १० प्रतिशत, आर्थिक वर्ष २०५९।६० को लागि न्यूनतम प्राथमिक पूँजीकोष ५.५ प्रतिशत र कुल पूँजीकोष ११ प्रतिशत तथा आर्थिक वर्ष २०६०।६१ को लागि न्यूनतम प्राथमिक पूँजीकोष र कुल पूँजीकोष क्रमशः ६ र १२ प्रतिशत कायम राख्न निर्देशन दिइएको छ ।

(ख) वित्तीय श्रोत संकलन तथा तरल सम्पत्ति : वित्तीय श्रोत संकलनतर्फ वित्त कम्पनीहरुले आफ्नो प्राथमिक पूँजीकोषको बढीमा १० गुणासम्म वित्तीय श्रोत (निक्षेप र सापटी) संकलन गर्न सक्नेछन् । संकलित वित्तीय श्रोतमध्ये २५ प्रतिशतमा नबढ्ने गरी वित्त कम्पनीलाई बचत निक्षेप परिचालन गर्नसक्ने अनुमति प्रदान गरिएको छ । कम्पनीहरुले आफ्नो कुल निक्षेप दायित्वको न्यूनतम ८ प्रतिशत तरल सम्पत्तिको रुपमा मौज्दात कायम राख्नुपर्नेछ । यसरी कायम राख्नुपर्ने न्यूनतम तरल सम्पत्तिमध्ये न्यूनतम ३ प्रतिशत नगद मौज्दातको रुपमा आफ्नो ढुकुटी वा नेपाल राष्ट्र बैंकमा वा वाणिज्य बैंकको चल्ती खातामा जम्मा गर्नु पर्नेछ । बाँकी ५ प्रतिशत तरल सम्पत्ति सरकारी ऋणपत्रमा वा राष्ट्र बैंक ऋणपत्रमा लगानी गर्न वा वाणिज्य बैंकको मुद्दती खातामा राख्न सकिनेछ ।

| | |
|---|---|
| (ग) | कर्जा वर्गीकरण र नोक्सानी व्यवस्था : कर्जा तथा सापट र पट्टा सम्पत्तिको वर्गीकरण तथा कर्जा नोक्सानी व्यवस्था अन्तर्गत साँवा रकमको भुक्तानी अवधि (ageing) को आधारमा प्रत्येक आर्थिक वर्षको पौष र आषाढ मसान्तमा असूल गर्न बाँकी कर्जा तथा सापट र पट्टा सम्पत्तिलाई असल, कमसल, शंकास्पद र खराव कर्जा गरी ४ वर्गमा वर्गीकरण गरी सोही अनुरुप क्रमशः १ प्रतिशत, २५ प्रतिशत, ५० प्रतिशत र १०० प्रतिशत नोक्सानी व्यवस्था गर्नु पर्नेछ। |
| (घ) | प्रति ग्राहक कर्जा तथा सुविधा : कोषमा आधारित कर्जा तथा सापट र पट्टा लगानी भएमा २५ प्रतिशत सम्म एवम् गैर-कोषमा आधारित सुविधा भएमा ५० प्रतिशतसम्म प्रतिग्राहक कर्जा सीमा कायम गरिएको छ। कम्पनीले कुनै एक मूल क्षेत्रमा आफ्नो कुल कर्जा तथा सापट र पट्टा लगानीको निर्धारित प्रतिशतभन्दा बढी प्रवाह गर्न र लगानी गर्न नपाउने व्यवस्था गरिएको छ। |
| (ङ) | व्याजदर : वित्त कम्पनीहरुले निक्षेपमा दिने र कर्जा तथा सापटमा लिने व्याज दर स्वयम् निर्धारण गर्न सक्नेछन् तर कर्जा तथा सापटमा समदर (flat rate) मा व्याज दर तोक्न पाउने छैनन्। |
| (च) | लेखा परीक्षण : कम्पनीले आर्थिक वर्ष समाप्त भएको ५ महिना भित्र आफ्नो वासलात तथा लाभहानीको हरहिसावको लेखा परीक्षण सम्पन्न गराई लेखा परीक्षण भएको वासलात तथा लाभहानीको हर-हिसाव र सम्बन्धित अनुसूचीहरु कम्पनीको वार्षिक साधारण सभा वस्ने मितिको कम्तिमा एक महिना पूर्व नेपाल राष्ट्र बैंकमा पेश गर्नु पर्ने व्यवस्था भएको छ। साथै, कम्पनीले अर्धवार्षिक रुपमा आफ्नो वित्तीय कारोवार तथा हर-हिसाबको आन्तरिक लेखा परीक्षण सम्पन्न गराई कम्पनीको सञ्चालक समितिबाट अनुमोदन भएको आन्तरिक लेखा परीक्षण प्रतिवेदन अर्धवार्षिक अवधि समाप्त भएको ३ महिना भित्र नेपाल राष्ट्र बैंकमा पेश गर्नु पर्ने व्यवस्था गरिएको छ। |
| (छ) | संस्थागत सुशासन : सञ्चालक समितिमा एकाघर परिवारबाट १ जना मात्र सञ्चालक निर्वाचित वा नियुक्त हुनसक्ने तथा सञ्चालक समितिको कुल सदस्यहरुमध्ये कम्तीमा ५० प्रतिशत सदस्यहरुको शैक्षिक योग्यता न्यूनतम स्नातक तह हुनुपर्ने व्यवस्था गरिएको छ। सञ्चालक समितिको कर्तव्य र उत्तरदायित्व किटान हुनुका साथै सञ्चालकले पालना गर्नुपर्ने आचरणसम्बन्धी व्यवस्था निर्धारण गरिएको छ। कार्यकारी प्रमुखको नियुक्तिमा योग्यताको निर्धारणका साथै वित्त कम्पनीको कर्मचारीहरुले पालना गर्नुपर्ने आचरण सम्बन्धी व्यवस्था गरिएको छ। |
| (ज) | शाखा विस्तार, खुद मुनाफा तथा लाभांश र संस्थापक शेयर विक्री : शाखा विस्तार, खुद मुनाफा वांडफांड तथा लाभाँश वितरण र संस्थापक शेयर विक्री व्यवस्था सम्वन्धमा पनि निर्देशनमा स्पष्ट व्यवस्था गरिएको छ। साथै, वित्त कम्पनीहरुको कार्य प्रक्रियालाई अझ स्पष्ट तथा पारदर्शी बनाउने आवश्यकता देखिए अनुरुप वित्त कम्पनी नियमावलीको मस्यौदा तयार भई अन्तिम चरणमा पुगेको छ। |

**<u>सहकारी संस्थातर्फः</u>**

४.१२ सहकारी ऐन, २०४८ अन्तर्गत रहने गरी श्री ५ को सरकार, सहकारी विभाग/कार्यालयमा दर्ता भएका वचत तथा ऋण सहकारी संस्थाहरुमध्ये

३४ वटालाई मात्र नेपाल राष्ट्र बैंकले सीमित बैंकिङ्ग कारोवार गर्ने इजाजत प्रदान गरेको छ । २०५६ चैत्र महिना पश्चात् कुनैपनि वित्तीय सहकारी संस्थाहरुलाई यस बैंकले इजाजतपत्र प्रदान गरेको छैन । यस बैंकबाट सीमित बैंकिङ्ग कारोवार गर्ने गरी इजाजत प्राप्त गरेका सहकारी संस्थाहरुको शेयर पूँजी रु २४ करोड रहेको छ भने कुल निक्षेप रु १ अर्ब ४७ करोड र कुल कर्जा रु १ अर्ब २७ करोड रहेको छ । उल्लेखित ३४ वटा सहकारी संस्थाहरुमध्ये ११ वटा साना किसान सहकारी संस्थाहरुको रुपमा ग्रामीण क्षेत्रमा कार्यरत छन् भने अन्य २३ वटा शहरी तथा अर्ध-शहरी क्षेत्रमा कार्यरत छन् ।

४.१३ संस्था दर्ता ऐन, २०३४ अन्तर्गत स्थापना भई लघु कर्जा कारोवार गर्ने उद्देश्य लिई वित्तीय मध्यस्थता ऐन, २०५५ अनुसार लघु कर्जा कारोवार गर्न इजाजतको लागि निवेदन दिने संस्थाहरुमध्ये २०५८ आषाढ देखि २०५८ फाल्गुणसम्ममा नेपाल वातावरण तथा प्रदुषण उन्मूलन युनेस्को क्लब, काठमाडौं, विकासको लागि स्थानीय स्वयं सेवकहरुको प्रयास (सल्भ नेपाल), धनकुटा र नेपाल महिला उद्यमी संघ, ललितपुरलाई लघु कर्जा कारोबार गर्न स्वीकृति प्रदान गरिएको छ । यसरी लघु कर्जा कारोवार गर्न स्वीकृति प्राप्त गैर-सरकारी संस्थाहरुको कुल संख्या १६ पुगेको छ ।

## मौद्रिक स्थिति

४.१४ विस्तृत मुद्रा प्रदाय चालु आर्थिक वर्षको प्रथम आठ महिनामा ३.६ प्रतिशतले वृद्धि भएको छ । गत वर्षको सोही अवधिमा यस्तो वृद्धि ९.६ प्रतिशत रहेको थियो । खुद बैदेशिक सम्पत्तिमा ह्रास भएकोले विस्तृत मुद्रा प्रदाय समीक्षा अवधिमा कम दरले वढेको हो । संकुचित मुद्रा प्रदाय चालु आर्थिक वर्षको प्रथम आठ महिनामा ९.७ प्रतिशतले वढेको छ । गत आर्थिक वर्षको समीक्षा अवधिमा सो मुद्रा १०.२ प्रतिशतले वढेको थियो । संकुचित मुद्रामा विस्तारक प्रभाव पार्ने कारक खुद बैदेशिक सम्पत्ति घटेतापनि संकुचक प्रभाव पार्ने कारक आवधिक निक्षेपको वृद्धिदर नगण्य रहेको तथा खुद अवर्गीकृत दायित्व घट्न गएकोले समीक्षा अवधिमा संकुचित मुद्रा प्रदायको वृद्धिदर गत वर्षको हाराहारीमा रहन गएको हो । संकुचित मुद्रा प्रदायका दुई अंशहरुमध्ये मुद्रा गत आर्थिक वर्षको समीक्षा अवधिमा ९.४ प्रतिशतले वढेको तुलनामा यस वर्षको सोही अवधिमा १४.५ प्रतिशतले वढेको छ । शान्ति सुरक्षाको कमीले कतिपय वैंक शाखाहरु वन्द रहेको, स्थानान्तरण भएको तथा गाभिन गएकोले सर्वसाधारणले आफैसंग नगद राख्ने प्रवृत्ति वढ्दै गएकोले मुद्राको वृद्धिदर गत वर्षको भन्दा समीक्षा अवधिमा वढी रहन गएको हो । संकुचित मुद्रा प्रदायको अर्को अंश चल्ती निक्षेप भने गत वर्षको ११.७ प्रतिशत वृद्धिको विपरित यस वर्ष ०.८ प्रतिशतले ह्रास हुन गएको छ ।

४.१५ मुद्रा प्रदायमा विस्तारकारी प्रभाव पार्ने कारकहरुमध्ये मौद्रिक क्षेत्रको खुद बैदेशिक सम्पत्ति चालु आर्थिक वर्षको प्रथम आठ महिनामा २.१ प्रतिशतले ह्रास भएको छ । गत वर्षको सोही अवधिमा वृद्धिदर १४.४ प्रतिशत रहेको थियो । निर्यात, खुद सेवा तथा पुँजी कारोवारहरुबाट हुने विदेशी विनिमय आप्रवाहमा कमी हुन गएकोले खुद बैदेशिक सम्पत्तिमा उल्लेख्य ह्रास आएको हो । मुद्रा प्रदायमा विस्तारकारी प्रभाव पार्ने अर्को कारक कुल आन्तरिक कर्जा गत वर्षको प्रथम आठ महिनामा ८.३ प्रतिशतले वृद्धि भएकोमा यस वर्षको समीक्षा अवधिमा ३.८ प्रतिशतले वृद्धि भई २०५८ फाल्गुण मसान्तमा रु १ खर्व ९४ अर्व ५० करोड पुगेको छ । मौद्रिक क्षेत्रको सरकारी संस्थान एवं निजी क्षेत्र माथिको दावीको वृद्धिमा कमी आएको कारणले गर्दा समीक्षा अवधिमा कुल आन्तरिक कर्जा कम दरले वढेको हो ।

४.१६ कुल आन्तरिक कर्जामध्ये मौद्रिक क्षेत्रवाट श्री ५ को सरकारलाई जाने खुद कर्जा समीक्षा अवधिमा २.० प्रतिशतले वृद्धि भई २०५८ फाल्गुणमा रु ४९ अर्व ६३ करोड पुगेको छ । गत वर्षको सोही अवधिमा यस्तो वृद्धि ०.५ प्रतिशत रहेको थियो । समीक्षा अवधिमा श्री ५ को सरकारले नेपाल राष्ट्र बैंकवाट रु ७९ करोड अधिविकर्ष उपयोग गरेका कारण मौद्रिक क्षेत्रवाट श्री ५ को सरकारमा जाने कर्जाको वृद्धि दर गत वर्षको भन्दा समीक्षा अवधिमा केही उच्च रहन गएको हो । कुल आन्तरिक कर्जामा महत्वपूर्ण स्थान ओगट्ने निजी क्षेत्रमाथिको दावी गत वर्षको प्रथम आठ महिनामा १०.९ प्रतिशतले वृद्धि भएकोमा यस वर्षको समीक्षा अवधिमा ४.८ प्रतिशतले मात्र वृद्धि भई चालु आर्थिक वर्षको फाल्गुण मसान्तमा रु १ खर्व ३२ अर्व ८९ करोड पुगेको छ । वाह्य एवं आन्तरिक कारणले गर्दा निर्यात, आयात, पर्यटन एवं औद्योगिक क्षेत्रमा हुने कर्जाको मागमा आएको कमीको कारणले समीक्षा अवधीमा निजी क्षेत्रमाथिको दावी कम दरले वढेको हो ।

४.१७ गत वर्षको समीक्षा अवधिमा सरकारी संस्थानमाथिको दावी १०.४ प्रतिशतले वढेकोमा यस वर्षको सोही अवधिमा ०.५ प्रतिशत (रु ६ करोड) ले मात्र वृद्धि भएको छ । नेपाल औद्योगिक विकास निगमले नेपाल राष्ट्र बैंकसंग रहेको डिवेन्चर मध्ये केही चुक्ता गरेको, कृषि विकास बैंकका वैंकिङ्ग कारोवार गर्ने शाखाहरुले आफ्नो केन्द्रीय कार्यालयमा जम्मा गर्ने रकममा कमी आएको र गैर वित्तीय संस्थाहरुले आफ्नो केही कर्जा चुक्ता गरेकोले वैंकिङ क्षेत्रको सरकारी संस्थानमाथिको दावी समीक्षा अवधिमा सीमान्त रुपले मात्र वढेको हो । कुल आन्तरिक कर्जामध्ये सरकारी संस्थान र निजी क्षेत्रलाई जाने कर्जा विस्तारमा कमी आएको हुनाले मौद्रिक क्षेत्रवाट श्री ५ को सरकारलाई जाने कर्जाको अनुपात यस आर्थिक वर्षको प्रथम आठ महिनामा वृद्धि हुन गएको छ । गत वर्षको फाल्गुण महिनासम्ममा बैकिंग क्षेत्रवाट गएको कुल आन्तरिक कर्जामध्ये श्री ५ को सरकार, सरकारी संस्थान र निजी क्षेत्रलाई गएको कर्जाको हिस्सा क्रमशः २२.५ प्रतिशत, ६.६ प्रतिशत र ७०.९ प्रतिशत रहेकोमा यस वर्षको फाल्गुण महिनासम्ममा त्यस्तो हिस्सा क्रमशः २५.५ प्रतिशत, ६.२ प्रतिशत र ६८.३ प्रतिशत रहेको छ ।

४.१८ विस्तृत मुद्रा प्रदायको महत्वपूर्ण अंश आवधिक निक्षेप यस आर्थिक वर्षको प्रथम आठ महिनामा ०.६ प्रतिशत (रु ८४ करोड) ले मात्र वृद्धि भइ २०५८ फाल्गुण मसान्तमा

रु. १ खर्व ४४ अर्व ७१ करोड पुगेको छ । गत वर्षको समीक्षा अवधिमा यस्तो निक्षेप ९.३ प्रतिशत (रु ११ अर्व ६९ करोड) ले वढेको थियो । वाणिज्य बैंकहरुले निक्षेपमा दिने व्याजदर कम गर्दै लगेको, ग्रामीण भेगका बैंक शाखाहरु केही वन्द भएका, केही स्थानान्तरण एवं गाभिदै गएका, देशको आर्थिक वृद्धि दर कम रहेको, स्वयं कर घोषणा कार्यक्रमको र सम्पत्ति जांचवुझ आयोगको गठन जस्ता कारणहरुले गर्दा आवधिक निक्षेपको वृद्धिदर समीक्षा अवधिमा सीमान्त मात्र रहन गएको हो ।

४.१९ खुद अमौद्रिक दायित्व गत वर्षको प्रथम आठ महिनामा १३.१ प्रतिशतले वृद्धि भएकोमा यस आर्थिक वर्षको सोही अवधिमा ३.९ प्रतिशतले ह्रास भएको छ । कुल आन्तरिक कर्जा यस वर्षको समीक्षा अवधिमा गत वर्षको सोही अवधिको तुलनामा कम दरले वृद्धि भएतापनि खुद अमौद्रिक दायित्वमा गत वर्ष वृद्धि भएकोमा यस वर्ष कमी आएको कारण खुद आन्तरिक सम्पत्ति गत वर्ष ६.० प्रतिशतले वृद्धि भएकोमा यस वर्ष ७.५ प्रतिशतले वृद्धि भएको छ ।

## वाणिज्य बैंकहरुको साधन र श्रोत तथा उपयोगको स्थिति

४.२० वाणिज्य बैंकहरुको समग्र साधन तथा श्रोत चालु आर्थिक वर्षको प्रथम आठ महिनामा १.६ प्रतिशतले घट्न गई २०५८ फाल्गुण मसान्तमा रु २ खर्व ८ अर्व २० करोड पुगेको छ । गत वर्षको सोही अवधिमा यस्तो साधन तथा श्रोत ११.३ प्रतिशतले वढेको थियो । चल्ती तथा मुद्दती निक्षेप दायित्वमा ह्रास एवं वचत निक्षेपको वृद्धि दर कम रहन गएको तथा खुद अन्य श्रोत घट्न गएको कारण समीक्षा अवधिमा समग्र साधनको वृद्धि दर ऋणात्मक भएको हो । यसै गरी साधनको उपयोग तर्फ तरल सम्पत्तिमध्येको नेपाल राष्ट्र बैंकमा राखेको मौज्दात र विदेशी बैंक मौज्दातमा कमी आई तरल सम्पत्ति घट्न गएको र कर्जा तथा लगानी अन्तरगतको निजी क्षेत्र माथिको दावी सिमान्तरुपले मात्र वृद्धि भएका कारण समीक्षा अवधिमा कुल उपयोग कम दरले वढेको हो ।

४.२१ वाणिज्य बैंकहरुको दायित्वमध्ये कुल निक्षेप गत वर्षको प्रथम आठ महिनामा १०.९ प्रतिशतले वढेकोमा चालु वर्षको यसै अवधिमा ०.४ प्रतिशतले मात्र वृद्धि भएको छ । कुल निक्षेप मध्ये चल्ती निक्षेप गत वर्षको प्रथम आठ महिनामा १४.४ प्रतिशतले वृद्धि भएकोमा यस वर्षको सोही अवधिमा २.१ प्रतिशतले घटेको छ । यसैगरी चालु आर्थिक वर्षको प्रथम आठ महिनामा वचत निक्षेपको वृद्धिदर २.९ प्रतिशत रहेको छ । गत वर्षको यसै अवधिमा वचत निक्षेपको वृद्धिदर १३.४ प्रतिशत रहेको थियो । चालु आर्थिक वर्षको प्रथम आठ महिनामा मुद्दती निक्षेप २.२ प्रतिशतले ऋणात्मक रहेको छ । गत वर्षको सोही अवधिमा मुद्दती निक्षेपको वृद्धिदर ७.२ प्रतिशत रहेको थियो । नेपाल राष्ट्र बैंकवाट वाणिज्य बैंकहरुले लिएको कर्जा यस आर्थिक वर्षको फाल्गुण मसान्तमा रु ५५ लाख रहेको छ । वाणिज्य बैंकहरुको खुद अन्य दायित्व गत वर्षको प्रथम आठ महिनामा ११.३ प्रतिशतले वृद्धि भएकोमा यस वर्षको सोही अवधिमा १.६ प्रतिशतले ह्रास आएको छ । वाह्य तथा आन्तरिक कारणहरुले गर्दा आर्थिक गतिविधिमा शिथिलता आई कर्जा असूली तथा लगानीमा प्रतिकूल असर परेकोले

वाणिज्य बैंकको मुनाफा स्थिति अनुकूल रहन नसक्ने आधारमा खुद अन्य दायित्वको वृद्धि समीक्षा अवधिमा घट्न गएको छ ।

४.२२ साधनको उपयोग तर्फ वाणिज्य बैंकहरुको कुल तरल सम्पत्ति समीक्षा अवधिमा २२.६ प्रतिशतले ऋणात्मक रहेको छ । यस्तो सम्पत्ति गत वर्षको सोही अवधिमा भने १७.६ प्रतिशतले वढेको थियो । तरल सम्पत्ति मध्येको नेपाल राष्ट्र बैंकमा रहेको मौज्दात र विदेशमा रहेको मौज्दात समीक्षा अवधिमा क्रमशः २९.२ प्रतिशत र २३.० प्रतिशतले ह्रास भएको छ । त्यस्तै, वैंकहरुसंग रहेको नगद मौज्दात र विदेशी मुद्रा मौज्दातमा भने क्रमशः ०.८ प्रतिशत र ३१.६ प्रतिशतले वृद्धि भएको छ । गत वर्षको सोही अवधिमा राष्ट्र बैंकमा रहेको मौज्दात, विदेशमा रहेको मौज्दात, बैंक नगद मौज्दात र विदेशी मुद्रा मौज्दातमा क्रमशः ३०.३ प्रतिशत, १०.१ प्रतिशत, ४०.३ प्रतिशत, १८.५ प्रतिशत र ११.१ प्रतिशतले वृद्धि भएको थियो ।

४.२३ यस आर्थिक वर्षको प्रथम आठ महिनामा कुल कर्जा तथा लगानी ५.० प्रतिशतले वढेकोमा गत वर्षको सोही अवधिमा ९.२ प्रतिशतले वढेको थियो । कुल कर्जा तथा लगानीमध्ये वाणिज्य बैंकहरुवाट श्री ५ को सरकारलाई गएको कर्जा चालु आर्थिक वर्षको समीक्षा अवधिमा ४.६ प्रतिशतले वढेको छ । गत वर्षको सोही अवधिमा यस्तो कर्जा ४.४ प्रतिशतले घटेको थियो । वाणिज्य बैंकहरुवाट सरकारी संस्थानलाई गएको कर्जा गत वर्षको प्रथम आठ महिनामा १३.० प्रतिशतले वृद्धि भएको तुलनामा चालु आर्थिक वर्षको सोही अवधिमा भने ०.९ प्रतिशतले मात्र वढेको छ । चालु आर्थिक वर्षको प्रथम आठ महिनामा वाणिज्य बैंकहरुको कुल कर्जा तथा लगानीमध्ये निजी क्षेत्र तर्फ प्रवाहित कर्जा ५.९ प्रतिशतले वृद्धि भएको छ जुन गत वर्षको सोही अवधिमा १०.९ प्रतिशतले वढेको थियो । आयात तथा निर्यात व्यापार, पर्यटन, उद्योग जस्ता क्षेत्रमा निजी क्षेत्रको कर्जाको मागमा कमी आएकोले यो कर्जाको वृद्धिदर घट्न गएको हो । वाणिज्य बैंकहरुले खरीद गरेको विदेशी विल गत वर्षको प्रथम आठ महिनामा २३.८ प्रतिशतले वृद्धि भएकोमा यस आर्थिक वर्षको सोही अवधिमा २४.७ प्रतिशतले घटेको छ । विदेशी मुद्रा बजार कारोवारतर्फ चालु वर्षको प्रथम आठ महिनासम्ममा विदेशी मुद्रा बजारमा १२ पटक हस्तक्षेप गरिएकोमा ६ पटकमा बजारमा अधिक भएको रु ५ अर्व १ करोड वरावरको विदेशी मुद्रा खरीद गरियो भने ६ पटकमा बजारमा अभाव भएको रु ७ अर्व ४ करोड वरावरको विदेशी मुद्रा विक्री गरियो ।

## वाणिज्य बैंकहरुको शाखा विस्तार

४.२४ देशमा विद्यमान सुरक्षाको स्थितिलाई ध्यानमा राखी केही वर्ष यता वाणिज्य बैंकहरुको शाखा गाभ्ने, स्थानान्तरण एवं वन्द गर्ने सन्दर्भमा अझ वढी लचिलो नीति अवलम्वन गरिदै आए अनुसार २०५८ आषाढ मसान्तसम्ममा वाणिज्य बैंकको कुल शाखा संख्या ४३० कायम रहेकोमा २०५८ पौष मसान्तसम्ममा ३१ शाखा वन्द एवं स्थानान्तरण भए भने ४ बैंक शाखा थपिन गई कुल शाखा संख्या ४०३ रहेको छ । कुल शाखा संख्या मध्ये हाल सुरक्षाको स्थितिवाट सबैभन्दा वढी असर परेका राष्ट्रिय वाणिज्य बैंक र नेपाल बैंक लिमिटेडको २०५८ आषाढ मसान्त सम्मको क्रमशः १८० र १५४ शाखा मध्ये ६ महिना भित्रमा क्रमशः १८ र १३ शाखाहरु स्थानान्तरण, वन्द एवं गाभिन गई

२०५८ पौष मसान्तमा क्रमशः १६२ र १४१ शाखाहरु कायम हुन आएका छन् । सोही अवधिमा नेपाल अरव बैंक लिमिटेड, एभरेष्ट बैंक लिमिटेड, लुम्बिनी बैंक लिमिटेड र माछापुछ्रे बैंक लिमिटेडले १/१ शाखाहरु थप गरेका छन् । यसरी २०५८ पौष मसान्तसम्ममा बैंकगत संचालनमा रहेका शाखा संख्या नेपाल बंगलादेश बैंक लि. १५, नेपाल अरव बैंक लि. १४, एभरेष्ट बैंक लिमिटेड र हिमालयन बैंक लि. ११/११, नेपाल एस.वि.आइ. बैंक लिमिटेड ८, स्ट्याण्डर्ड चार्टर्ड बैंक नेपाल लि. ९, नेपाल बैंक अफ सिलोन लिमिटेड र बैंक अफ काठमाण्डौं लि. ७/७, नेपाल इण्डोस्वेज बैंक लि. ६, नेपाल इण्डष्ट्रियल एण्ड कमर्सियल बैंक लि. ५, लुम्बिनी बैंक लि. ४, माछापुछ्रे बैंक लि. २ र कुमारी बैंक लिमिटेड १ रहेका छन् ।

## अन्य बैंक तथा वित्तीय संस्थाहरु

४.२५ कृषि विकास वैंक, नेपाल औद्योगिक विकास निगम र कर्मचारी संचय कोषको कुल कर्जा लगानी आर्थिक वर्ष २०५७/५८ को प्रथम ८ महिनामा १.१ प्रतिशतले ऋणात्मक रहेकोमा चालु आर्थिक वर्षको सोही अवधिमा वृद्धिदर १७.६ प्रतिशत रही कुल कर्जा लगानी रु. ५ अर्व ५२ करोड पुगेको छ । यो कुल कर्जा लगानीमा कृषि विकास बैंक, नेपाल औद्योगिक विकास निगम र कर्मचारी संचय कोषको अनुपात २०५७ फाल्गुणमा क्रमशः ६८.८ प्रतिशत, १.० प्रतिशत र ३०.२ प्रतिशत रहेकोमा २०५८ फाल्गुणमा ६०.३ प्रतिशत, १.० प्रतिशत र ३८.७ प्रतिशत रहेको छ । यी तीन संस्थानहरुको कुल साँवा असूली गत आर्थिक वर्षको प्रथम ८ महिनामा १४.० प्रतिशतले घट्न गएकोमा चालु आर्थिक वर्षको सोही अवधिमा १०.५ प्रतिशतले वढ्न गई रु. २ अर्व ९२ करोड पुगेको छ । यसरी खुद कर्जा वितरण गत आर्थिक वर्षको प्रथम ८ महिनामा २२.८ प्रतिशतले वढ्न गएकोमा चालु आर्थिक वर्षको यसै अवधिमा २६.९ प्रतिशतले वढ्न गई रु. २ अर्व ५९ करोड रहेको छ । उठाउन वांकी कर्जा गत आर्थिक वर्षको प्रथम ८ महिनामा १७.० प्रतिशतले बढेकोमा चालु आर्थिक वर्षको सोही अवधिमा २०.७ प्रतिशतले बढ्न गई कुल उठाउन वांकी कर्जा रु. २६ अर्व १ करोड पुगेको छ । कुल उठाउन वांकी कर्जामा कृषि विकास वैंक, नेपाल औद्योगिक विकास निगम र कर्मचारी संचय कोषको अनुपात २०५७ फाल्गुणको क्रमशः ६४.८ प्रतिशत, ९.२ प्रतिशत र २६.० प्रतिशतबाट २०५८ फाल्गुणमा ६०.५ प्रतिशत, ७.८ प्रतिशत र ३१.७ प्रतिशत पुगेको छ ।

४.२६ कृषि विकास वैंकको कर्जा वितरण गत आर्थिक वर्षको प्रथम ८ महिनामा १६.९ प्रतिशतले घटेकोमा चालु आर्थिक वर्षको सोही अवधिमा ३.१ प्रतिशतले बढी रु. ३ अर्व ३३ करोड पुगेको छ । गत आर्थिक वर्षको प्रथम ८ महिनामा नेपाल औद्योगिक विकास निगमको कर्जा वितरण ३८.० प्रतिशतले घटेकोमा चालु आर्थिक वर्षको सोही अवधिमा २०.५ प्रतिशतले बढी रु. ६ करोड पुगेको छ । त्यस्तै, कर्मचारी संचयकोषको कर्जा वितरण गत आर्थिक वर्षको प्रथम ८ महिनामा ८०.९ प्रतिशतले बढेकोमा चालु आर्थिक वर्षको सोही अवधिमा ५०.७ प्रतिशतले बढ्न गई रु. २ अर्व १३ करोड पुगेको छ ।

४.२७ कृषि विकास बैंकको साँवा असुली गत आर्थिक वर्षको प्रथम ८ महिनामा १९.५ प्रतिशतले घटेकोमा चालु आर्थिक वर्षको सोही अवधिमा १३.६ प्रतिशतले बढ्न गई रु. २ अर्व ४६ करोड पुगेको छ । गत आर्थिक वर्षको प्रथम ८ महिनामा नेपाल औद्योगिक विकास निगमको साँवा असुली ४४.६ प्रतिशतले घटेकोमा चालु आर्थिक वर्षको सोही अवधिमा ३९.७ प्रतिशतले घट्न गई रु. ५ करोड साँवा असुली भएको छ । कर्मचारी संचयकोषमा गत आर्थिक वर्षको प्रथम ८ महिनामा ६८.२ प्रतिशतले साँवा असुली बढेकोमा चालु आर्थिक वर्षको सोही अवधिमा ३.८ प्रतिशतले मात्र बढी रु. ४१ करोड साँवा असुली भएको छ ।

४.२८ मिति २०५७ फाल्गुणमा २०५६ फाल्गुणको तुलनामा उठाउन वांकी कर्जा कृषि विकास वैंकमा १३.७ प्रतिशतले वृद्धि भएकोमा २०५८ फाल्गुणमा १२.७ प्रतिशतले वृद्धि भई रु. १५ अर्व ७४ करोड पुगेको छ । नेपाल औद्योगिक विकास निगममा उठाउन वांकी कर्जा २०५७ फाल्गुणमा १५.७ प्रतिशतले घट्न गएकोमा २०५८ फाल्गुणमा २.२ प्रतिशतले बढ्न गई रु. २ अर्व ३ करोड पुगेको छ । कर्मचारी संचय कोषमा उठाउन वांकी कर्जा २०५७ फाल्गुणमा ४८.६ प्रतिशतले बढ्न गएकोमा २०५८ फाल्गुणमा ४७.२ प्रतिशतले बढ्न गई रु. ८ अर्व २४ करोड पुगेको छ ।

४.२९ ग्रामीण क्षेत्रका विपन्न जनता खास गरी विपन्न महिलाहरुलाई उनीहरुको घर दैलोमा गई समूहमा आबद्ध गरी आयमूलक क्रियाकलाप सञ्चालन गर्नका लागि बिना धितो कर्जा प्रदान गर्ने उद्देश्यले पाँचैवटा विकास क्षेत्रमा १।१ वटा ग्रामीण विकास बैंकहरु स्थापना भएका छन् । यी बैंकहरुले २०५८ पौष मसान्तसम्ममा अधिराज्यका ४२ जिल्लाका ९४७ गाउँ विकास समितिहरुमा ४,५६३ केन्द्र मार्फत ३१,७७६ समूहका १,५८,७४० सदस्यहरुलाई विभिन्न कार्यकमहरु मार्फत प्रत्यक्ष्य रुपमा फाइदा पुऱ्याएका छन् । समूहमा आबद्ध सदस्यहरु मध्ये १,४५,१२० सदस्यहरुलाई बैंकहरु सञ्चालनमा आएदेखि २०५८ पौष मसान्तसम्ममा जम्मा रु ५ अर्ब ३३ करोड कर्जा वितरण गरेका छन् । यसरी वितरण गरिएको कर्जा मध्ये उक्त मितिसम्ममा रु ४ अर्ब ४२ करोड असुली भई जम्मा रु ९१ करोड उठाउन बाँकी देखिन्छ । २०५८ पौष मसान्तसम्ममा बैंकहरुमा सामुहिक बचततर्फ रु. २९ करोड र व्यक्तिगत बचततर्फ रु २ करोड गरी जम्मा रु ३१ करोड बचत निक्षेप जम्मा भई सकेको छ । यी पाँचैवटा बैंक अन्तर्गत विभिन्न कार्यालयहरुमा १,१६३ कर्मचारीहरु कार्यरत छन् । प्रत्येक ग्रामीण विकास बैंकको विस्तृत क्रियाकलाप निम्न तालिकामा समेटिएको छ :

तालिका ४ (क) : ग्रामीण विकास बैंकहरुको क्रियाकलाप (२०५८ पौष मसान्त)

| क. सं | विवरण | पूर्वाञ्चल ग्रा.वि. वैंक | मध्यमाञ्चल ग्रा.वि.बै. | पश्चिमाञ्चल ग्रा.वि.बै. | मध्यपश्चिमाञ्चल ग्रा.वि.बै. | सुदूर पश्चिमाञ्चल ग्रा.वि.बै. | कुल |
|---|---|---|---|---|---|---|---|
| १. | समेटिएका जिल्ला | झापा, मोरंग, सुनसरी, सप्तरी, | धनुषा, महोत्तरी, रौतहट, वारा, | रुपन्देही, नवलपरासी, कपिलवस्तु, पाल्पा, | बांके, वर्दिया, दाङ र सुर्खेत | कैलाली, कञ्चनपुर, डडेलधुरा | ४२ |

| | | सिराहा, उदयपुर, इलाम र धनकुटा (८) | पर्सा, चितवन, ललितपुर, सर्लाही, मकवानपुर, नुवाकोट, काभ्रे र धादिङ्ग (१२) | स्याङ्गजा, तनहूं, कास्की, गुल्मी, पर्वत, वाग्लुङ्ग, लमजुङ्ग, गोरखा र अर्घाखांची (१३) | (४) | , अछाम र डोटी (५) | |
|---|---|---|---|---|---|---|---|
| २. | गा.वि.स. संख्या | २५९ | २४६ | २६१ | १०१ | ८० | ९४७ |
| ३. | केन्द्र संख्या | १३३४ | १०४४ | १०७५ | ५३४ | ५७६ | ४५६३ |
| ४. | समूह संख्या | १०५८५ | ६६३२ | ७५५९ | ३६९५ | ३३०५ | ३१७७६ |
| ५. | सदस्य संख्या | ५०२८४ | ३२४९१ | ३९०७१ | १८४७५ | १८४१९ | १५८७४० |
| ६. | ऋणी सदस्य संख्या | ४६९२२ | ३१२७६ | ३८८४७ | १६२८९ | ११७८६ | १४५१२० |
| ७. | जम्मा वितरित कर्जा (रु. हजार) | २४३३३३१ | ६६७९३५ | ११२९९१४ | ४८४७२५ | ६१६२३४ | ५३३२१३९ |
| ८. | जम्मा कर्जा असूली (रु. हजार) | २११७९४६ | ४८८९९९ | ८९९७५७ | ३९८४३७ | ५१८३६८ | ४४२३५०७ |
| ९. | उठाउन वाँकी कर्जा (रु. हजार) | ३१५३८५ | १७८९३६ | २३०१५७ | ८६२८८ | ९७८६६ | ९०८६३२ |
| १० | सामूहिक वचत रकम (रु. हजार) | १०७६१६ | ४०४५३ | ६६१०१ | ३१८९८ | ४२५१६ | २८८५८४ |
| ११ | व्यक्तिगत वचत रकम (रु. हजार) | ६७६१ | ६५७८ | ६७७७ | २३२० | १४९८ | २३९३४ |
| १२ | जम्मा वचत रकम (रु. हजार) | ११४३७७ | ४७०३१ | ७२८७८ | ३५४३१ | ४४०१४ | ३१२५१८ |
| १३ | कार्यरत कर्मचारी संख्या | ३४४ | २७२ | २४६ | १४० | १६१ | ११६३ |

४.३० विकास बैंक ऐन, २०५३ अन्तर्गत स्थापित अन्य विकास बैंकहरुको संख्या चालु आर्थिक वर्षको पौष मसान्तसम्ममा २ ले वृद्धि भई ११ पुगेको छ । यी बैंकहरुको समष्टिगत साधन चालु आर्थिक वर्षको प्रथम ६ महिनामा गत वर्षको सोही अवधिको तुलनामा ३७.५ प्रतिशतले उल्लेखनीय वृद्धि भई रु ४ अर्ब २४ करोड पुगेको छ । विकास बैंकहरुको पूँजी कोष गत वर्षको प्रथम ६ महिनाको तुलनामा यस अवधिमा २२.५ प्रतिशतले वृद्धि भई रु ५२ करोड पुगेको छ । त्यस्तै गत आर्थिक वर्षको प्रथम ६ महिनाको तुलनामा चालु आर्थिक वर्षको सोही अवधिमा यी बैंकहरुको कुल निक्षेप ४३.३ प्रतिशतले वृद्धि भई रु ३ अर्ब २२ करोड पुगेको छ । साधनको उपयोगतर्फ गत वर्षको पहिलो ६ महिनाको दाँजोमा चालु आर्थिक वर्षको सोही अवधिमा कर्जा तथा सापटी ३१.३ प्रतिशतले वृद्धि भई रु २ अर्ब ६८ करोड र कुल तरल सम्पत्ति ६४.२ प्रतिशतले वृद्धि भई रु १ अर्ब ४ करोड पुगेको छ ।

४.३१ गत २०५७ पौष मसान्तको तुलनामा २०५८ पौष मसान्तमा वित्त कम्पनीहरुको वित्तीय साधनमा उल्लेखनीय वृद्धि भएको छ । २०५७ पौष मसान्तमा वित्त कम्पनीहरुको संख्या ४८ थियो भने २०५८ पौषमा यो संख्या ४९ पुगेको छ । २०५८ पौषमा वित्त कम्पनीहरुको कुल साधन २०५७ पौषको तुलनामा १८.७ प्रतिशतले वृद्धि भई रु १७

अर्ब ३ करोड पुगेको छ । वित्त कम्पनीहरुको साधनको प्रमुख स्रोत निक्षेप २०५७ पौषको तुलनामा २१.० प्रतिशतले वृद्धि भई २०५८ पौषमा रु १२ अर्ब ७४ करोड पुगेको छ भने पूँजी कोष सोही अवधिमा २५.३ प्रतिशतले वृद्धि भई रु. २ अर्ब ४५ करोड पुगेको छ । साधनको उपयोगतर्फ लगानीमा रहिरहेको कर्जा अघिल्लो वर्षको तुलनामा २०५८ पौषमा १६.८ प्रतिशतले वृद्धि भई रु ११ अर्ब ९८ करोड पुगेको छ । २०५७ पौषको तुलनामा २०५८ पौषमा वित्त कम्पनीहरुको लगानी १६.६ प्रतिशतले वृद्धि भई रु १ अर्ब ३८ करोड पुगेको छ । त्यस्तै, वित्त कम्पनीहरुको तरल सम्पत्ति २८.८ प्रतिशतले वृद्धि भई २०५८ पौषमा रु १ अर्ब ८३ करोड पुगेको छ । सरकारी सुरक्षणपत्रमा भएको लगानीलाई समेत तरल सम्पत्तिमा समावेश गर्दा २०५८ पौषमा वित्त कम्पनीहरुको समष्टिगत तरलता निक्षेप अनुपात २१.० प्रतिशत रहेको छ । २०५७ पौषमा यो अनुपात २१.७ प्रतिशत थियो ।

४.३२ नेपाल राष्ट्र बैंकबाट सीमित बैंकिङ्ग कारोवार गर्न स्वीकृति पाएका वित्तीय सहकारी संस्थाहरुको संख्या हालसम्म ३४ पुगेको छ । गत आर्थिक वर्षको प्रथम ६ महिनाको दाँजोमा चालु आर्थिक वर्षको सोही अवधिमा यी सहकारी संस्थाहरुको कुल साधनमा १८.१ प्रतिशतले वृद्धि भई रु २ अर्ब १५ करोड, पूँजी कोषमा ३१.६ प्रतिशतले वृद्धि भई रु. २४ करोड र यी संस्थाहरुको साधनको मुख्य स्रोत निक्षेप १५.२ प्रतिशतले वृद्धि भई रु १ अर्ब ४७ करोड पुगेको छ । त्यस्तै, ऋण सापटी ६६.५ प्रतिशतले उल्लेख्य वृद्धि भई रु ९ करोड, लगानीमा रहिरहेको कर्जा २०.८ प्रतिशतले वृद्धि भई रु १ अर्ब २७ करोड र लगानी ७.६ प्रतिशतले वृद्धि भई रु २० करोड पुगेको छ । गत आर्थिक वर्षको प्रथम ६ महिनासम्ममा नेपाल राष्ट्र बैंकबाट सीमित बैंकिङ्ग कारोवार गर्न स्वीकृति पाएका गैरसरकारी संस्थाहरुको संख्या १३ रहेकोमा चालु आर्थिक वर्षको सोही अवधिमा सो संख्या १६ पुगेको छ । यी संस्थाहरुको कुल साधन अघिल्लो आर्थिक वर्षको प्रथम ६ महिनाको तुलनामा चालु आर्थिक वर्षको सोही अवधिमा ७७.४ प्रतिशतले उल्लेख्य वृद्धि भई रु २ करोड ७५ लाख पुगेको छ ।

४.३३ राष्ट्रिय बीमा संस्थान र निक्षेप बीमा तथा कर्जा सुरक्षण निगम लगायत १७ वटा बीमा कम्पनीहरु मध्ये राष्ट्रिय बीमा संस्थान र नेशनल लाइफ एण्ड जनरल इन्स्योरेन्स कम्पनी लिमिटेडले निर्जीवन र जीवन दुबैखाले बीमा व्यवसाय सञ्चालन गरेका छन् भने बाँकी १५ वटा कम्पनीहरु मध्ये ३ वटा कम्पनीहरुले जीवन बीमा व्यवसाय मात्र र ११ वटा कम्पनीहरुले निर्जीवन बीमा व्यवसाय मात्र गर्दै आएका छन् । निक्षेप बीमा तथा कर्जा सुरक्षण निगम प्रा.लि. ले कर्जा सुरक्षण र पशु बीमा व्यवसाय मात्र गर्दै आएको तथा निक्षेप बीमाको कार्य भने हालसम्म शुरु गर्न सकेको छैन । गत आर्थिक वर्षको तुलनामा चालु आर्थिक वर्षमा बीमा कम्पनीहरुको समष्टिगत प्रिमियम संकलन २९.६ प्रतिशतले वृद्धि भई रु २ अर्ब ७९ करोड पुग्ने अनुमान छ । उक्त रकम मध्ये निर्जीवन बीमाबाट ६६.९ प्रतिशत र जीवन बीमाबाट ३३.१ प्रतिशत संकलन हुने अनुमान छ । गत आर्थिक वर्षमा निर्जीवन बीमाको अंश ७४.१ प्रतिशत र जीवन बीमाको अंश २५.९ प्रतिशत रहेको थियो । बीमा कम्पनीहरुको समष्टिगत साधन गत वर्षको तुलनामा चालु आर्थिक वर्षमा २४.० प्रतिशतले वृद्धि भई रु १२ अर्ब १९ करोड पुग्ने अनुमान छ । गत आर्थिक वर्षको तुलनामा चालु आर्थिक वर्षमा बीमा कम्पनीहरुको कुल लगानी १६.७ प्रतिशतले वृद्धि भई रु ९ अर्ब ८० करोड पुग्ने तथा

बीमा कम्पनीहरुको लगानीबाट गत आर्थिक वर्षमा रु ७२ करोड आय आर्जन भएकोमा चालु आर्थिक वर्षमा रु ७८ करोड आय आर्जन हुने अनुमान छ ।

४.३४ चालु आर्थिक वर्षको प्रथम ६ महिनामा कर्मचारी सञ्चय कोषको कुल कर्जा लगानी गत वर्षको सोही अवधिको तुलनामा ५३.८ प्रतिशतले उल्लेख्य वृद्धि भई रु १ अर्ब ३० करोड पुगेको छ । गत वर्षको प्रथम ६ महिनाको तुलनामा चालु वर्षको सोही अवधिमा सञ्चयकर्तातर्फको कर्जा १८.७ प्रतिशतले वृद्धि भई रु ७३ करोड पुगेको छ भने उद्योग व्यवसायतर्फको कर्जा प्रवाह १.५ गुणाले वृद्धि भई रु ५७ करोड पुगेको छ । साँवा असूलीतर्फ गत आर्थिक वर्षको पहिलो ६ महिनामा रु ३० करोड असुली भएकोमा चालु आर्थिक वर्षको सोही अवधिमा ४.७ प्रतिशत ले वृद्धि भई रु ३२ करोड असूली भएको छ । २०५७ पौष मसान्तमा कोषको उठाउन बाँकी कर्जा रु ४ अर्ब ५८ करोड रहेकोमा २०५८ पौष मसान्तमा उठाउन बाँकी कर्जा रु ७ अर्ब ५० करोड पुगेको छ ।

४.३५ गत आर्थिक वर्षको तुलनामा चालु आर्थिक वर्षमा नागरिक लगानी कोषको कुल साधनमा ६९.५ प्रतिशतले उल्लेखनीय वृद्धि हुने अनुमान छ । गत आर्थिक वर्षको तुलनामा चालु आर्थिक वर्षमा पूँजी कोष १२.७ प्रतिशतले वृद्धि भई रु. ५ करोड, कोष संकलन ७३.५ प्रतिशतले उल्लेख्य वृद्धि भई रु. १ अर्ब ७३ करोड र लगानी ३८.५ प्रतिशतले वृद्धि भई रु. १ अर्ब २० करोड पुग्ने अनुमान छ । यो लगानी मध्ये सरकारी ऋणपत्रमा ७७.० प्रतिशत, मुद्दती खातामा ६.२ प्रतिशत शेयर तथा डिबेन्चरमा १६.८ प्रतिशत अंश लगानी हुने अनुमान छ । चालु आर्थिक वर्षमा कोषको कर्जा तथा सापटी २.५ गुणाले वृद्धि भई रु ५६ करोड र बैंक तथा नगद मौज्दात ३३.५ प्रतिशतले वृद्धि भई रु २ करोड पुग्ने अनुमान छ ।

## चुनौतीहरु

४.३६ समष्टिगत आर्थिक स्थायित्वको वातावरण कायम रहदा लचिलो मौद्रिक नीतिले देशको आर्थिक गतिविधि विस्तार गर्ने भएतापनि सो नीतिको प्रभाव अपेक्षित हुन सकेको छैन । निजी क्षेत्र तर्फ प्रवाहित भएको वैंकिंग क्षेत्रको कर्जा तथा संकुचित र विस्तृत मुद्रा प्रदायको वृद्धि प्रवृत्ति सुस्त रहेको सन्दर्भमा आर्थिक स्थायित्वमा प्रतिकूल प्रभाव नपार्ने गरी मौद्रिक नीतिमा थप परिवर्तन गर्नु पर्ने अवस्था रहेको छ । त्यस्तै, निर्धारण गरिएका मौद्रिक लक्ष्यहरु हासिल गर्ने गरी मौद्रिक नीतिका उपकरणहरुलाई कार्यान्वयन गर्नु पर्ने चुनौती विद्यमान रहेको छ ।

४.३७ निजी क्षेत्रलाई उपयुक्त लागत र परिमाणमा वित्तीय श्रोत उपलव्ध गराउन तथा साधन श्रोतको अधिकतम उपयोगद्वारा आर्थिक वृद्धि र विकासका लक्ष्यहरु हासिल गर्ने गरी आर्थिक नीतिको कार्यान्वयन र वित्तीय व्यवस्थापन संचालन गर्नु पर्ने चुनौती रहेको छ ।

४.३८ वैंक तथा वित्तीय संस्थाहरुलाई विभिन्न Prudential नियमनहरु जारी भएतापनि ती संस्थाहरुबाट सो नियमनहरुको पूर्ण पालना नभएको स्थितिमा देशको वैंकिंग र वित्तीय क्षेत्रलाई स्वस्थ, सक्षम र सुदृढ वनाई निक्षेपकर्ताको अत्युत्तम हित कायम गर्दै

उत्पादनशील लगानी एवं आर्थिक गतिविधि अभिवृद्धि गर्ने लक्ष्य पूरा गर्न आवश्यक वातावरण सुनिश्चित गर्नु पर्ने चुनौती विद्यमानै छ ।

४.३९ देशका प्रमुख वैंक तथा वित्तीय संस्थाहरुमा संस्थागत सुशासन, व्यवस्थापकीय सक्षमता र संगठनात्मक विकास तथा सुधारको पक्ष पछि पर्दै गएको अवस्थामा खास गरी सरकारी स्वामित्वमा रहेका यस्ता संस्थाहरुमा उच्च प्राथमिकताका साथ पुनर्संरचना, सुधार र सुदृढीकरणको कार्यलाई अगाडि वढाउनु पर्ने चुनौती छ ।

४.४० सरकारी क्षेत्रको स्वामित्वमा रहेका वैंक तथा वित्तीय संस्थाहरुका साथै अन्य सम्पूर्ण वैंक तथा वित्तीय संस्थाहरुमा रहेको कमसल कर्जाको अनुपातलाई घटाउंदै लगी कुल वाँकी कर्जामा यस्तो कमसल कर्जाको अनुपातलाई कम गरी मौद्रिक र वित्तीय नीतिको तर्जुमा र कार्यान्वयन गर्नु पर्ने चुनौती छ ।

४.४१ गरीवी निवारणका लागि ग्रामीण विकास वैंकहरुका पुनर्संरचना तथा सुदृढीकरणका लागि उच्च प्राथमिकता दिनु पर्ने अवस्था रहेको छ । देशको गरीवी तथा वेरोजगारी कम गर्न तथा महिला वर्गको उत्थानको लागि पर्याप्त साधन र श्रोतको व्यवस्था गरी ग्रामीण वैंकिंग प्रणालीलाई सक्षम रुपमा देशभर फैलाउनु पर्ने चुनौती छ । साथै शान्ति सुरक्षाको कमजोर स्थितिका कारण ग्रामीण इलाकामा ग्रामीण विकास वैंकिंग प्रणालीको संस्थागत तथा संगठनात्मक विकास र विस्तारका लागि श्री ५ को सरकारले आवश्यक साधन र श्रोत प्रवाहित गर्नु पर्ने चुनौती गहिरो हुंदै गएको छ ।

# ५. पूँजी तथा मुद्रा बजार

## ५.१ प्राथमिक बजार

आर्थिक वर्ष द्दण्छड।छढ को प्रथम नौ महिनामा धितोपत्रको प्राथमिक बजार मार्फत ड वद्घा संगठ्ठित संस्थाहरुले सार्वजनिक र हकप्रद शेयर निष्काशन गरी जम्मा रु. ठड करोड घघ लाख बरावरको पु¤जी परिचालन गर्न अनूमति लिएका ५न् । गत आर्थिक वर्षमा ढ वद्घा संगठ्ठित संस्थाहरुले सार्वजनिक र हकप्रद शेयर निष्काशन गरी जम्मा रु. टघ करोड द्धघ लाख वरावरको पु¤जी परिचालन गर्न अनूमति लिएका थिए । यसरी संगठ्ठित संस्थाहरुले आर्थिक वर्ष द्दण्छड।छढ को प्रथम नौ महिनामा गत आर्थिक वर्षको पु¤जी निष्काशन अनूमति लिएको रकम भन्दा द्दघ.छ प्रतिशत बŔी पु¤जी निष्काशन गर्न अनूमति लिएका ५न् । यस आर्थिक वर्षको बा¤की तीन महिनामा अरु छ वद्घा संगठ्ठित संस्थाहरुले थप रु. छठ करोड ठघ लाख बरावरको पु¤जी निष्काशन अनूमति लिने अनूमान रहेको ५ ।

## तालिका छ (क) : प्राथमिक बजारको प्रबृत्ति

(रु. करोडमा)

| | शीर्षक | आर्थिक वर्ष | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| | | द्ण्छघाछद्ध | द्ण्छद्धाछछ | द्ण्छछाछट | द्ण्छटाछठ | ण्छठाछड | प्रथम नौ महिना | |
| | | | | | | | द्ण्छठाछड | द्ण्छडाछढ |
| ज्ञ | पु¤जी परिचालन अनूमति | घघ.द्द | द्धट.द्द्ध | द्द्छ.डण | छघ.ठज्ञ | टघ.द्धघ | द्दघ.घज्ञ | ठड.घघ |
| | (क) साधार0f शेयर | छ.ठण | ज्ञज्ञ.ढद्ध | ज्ञद्ध.डण | द्धज्ञ.द्दछ | द्दट.डछ | द्दद्द.ण्छ | द्धघ.छछ |
| | (ख) हकप्रद शेयर | द्दठ.छद्द | द्दछ.ण्ण | घ.ण्ण | ज्ञद्द.द्धट | घट.छड | ज्ञ.द्दट | घद्ध.ठढ |
| | (ग) अग्राधिकार शेयर | - | - | ड.ण्ण | - | - | - | - |
| | (३) िडवेञ्चर | - | ढ.घण | - | - | - | - | - |
| द्द | पु¤जी परिचालनकर्ता संगठित संस्थाहरुको संख्या | छ | ज्ञद्द | छ | ढ | ढ | ट | ड |

## ५.२ दोश्रो बजार

आर्थिक वर्ष द्ण्छडाछढ को प्रथम आ७ महिनासम्मको अवधिमा गत आर्थिक वर्षको तूलनामा थप चार व६ा संगठित संस्थाहरु सुचीकृत भई कूल सुचीकृत संगठित संस्थाहरुको संख्या ज्ञज्ञढ पूगेको ५ । यस्तै आर्थिक वर्ष द्ण्छडाछढ को प्रथम आ७ महिनामा गत आर्थिक वर्षको बजार पु¤जीकर0f रु. द्धट अर्व घद्ध करोड ढद्ध लाख रहेको तूलनामा घठ.द्ध प्रतिशतले कमी आई रु. द्दड अर्व ढढ करोड कायम भएको ५ । गत आर्थिक वर्षको प्रथम आ७ महिनामा सुचीकृत धितोपत्रहरुको बजार पु¤जीकर0f रु. छण अर्व द्दघ करोड कायम भएको थियो ।

आर्थिक वर्ष द्ण्छडाछढ को प्रथम आ७ महिनामा धितोपत्र कारोवारमा गत आर्थिक वर्षको तूलनामा ठण.ड प्रतिशतले कमी आई रु. टड करोड द्धण लाख (द्दघछट.घठ हजार कित्ता) मुल्य बरावरको धितोपत्र कारोवार भएको ५ । गत आर्थिक वर्षको प्रथम आ७ महिनामा रु. ज्ञ अर्व डछ करोड (ज्ञछद्धज्ञ.डट हजार कित्ता) मुल्य बरावरको धितोपत्र कारोवार भएको थियो।

आर्थिक वर्ष द्ण्छडाछढ को प्रथम आ७ महिनाको अन्तमा नेप्से परिसुचकमा गत आर्थिक वर्षको अन्तको तूलनामा ज्ञछद्ध.ट विन्दूले ह्रास आई ज्ञढघ.ड विन्दू कायम हून पूगेको ५ । गत आर्थिक वर्षको प्रथम आ७ महिनाको अन्तमा नेप्से परिसुचक घढछ.ड विन्दू कायम रहेको थियो ।

धितोपत्र सुचीकर0f विनियमावली, द्ण्छघ मा भएको व्यवस्था अनूरुप नेपाल धितोपत्र विनिमय बजार लि. द्वारा चालू आर्थिक वर्षमा ज्ञज्ञढ व६ा सुचीकृत कम्पनीहरु मध्ये घज्ञ व६ा कम्पनीहरुलाई "क" वर्गमा र बा¤की कम्पनीहरुलाई "ख" वर्गमा वर्गीकर0f गरिएको ५ । गत आर्थिक वर्षमा ज्ञज्ञद्द व६ा सुचीकृत कम्पनीहरु मध्ये द्दट व६ा सुचीकृत कम्पनीहरु मात्र "क" वर्गमा परेका थिए।

### तालिका छ (ख) : दोश्रो बजारको प्रबृत्ति

(रु.करोडमा)

| शीर्षक | आर्थिक वर्ष | | | | | | |
|---|---|---|---|---|---|---|---|
| | द्ण्छघाछद्ध | द्ण्छद्धाछछ | द्ण्छछाछट | द्ण्छटाछठ | द्ण्छठाछड | प्रथम आ७ महिना | |
| | | | | | | द्ण्छठाछड | द्ण्छडाछढ |
| धितोपत्र कारोवार | द्धज्ञ.टद्द | द्दण.द्दट | ज्ञछण.ण्ण | ज्ञज्ञछ.छण | द्दघद्ध.द्धद्द | ज्ञडछ.डछ | टड.द्धण |
| कारोवार शेयर संख्या (हजारमा) | ढद्धद्धघ | ज्ञज्ञढछ | द्धडछठ | ठटठद्ध | द्धढडढ | द्दद्धडघ.द्धढ | द्दघछट.घठ |
| कारोवार भएको कम्पनी संख्या | टठ | टड | टढ | टढ | टठ | टद्ध | टठ |
| कारोवार संख्या | ज्ञद्दद्धद्दड | ज्ञटज्ञण्द्ध | ज्ञछडज्ञद्ध | द्दढज्ञघट | द्धटण्ढछ | घज्ञण्द्धद्द | द्दछद्धद्धछ |
| बजार पु¤जीकर0f | ज्ञद्दटढ.डण | ज्ञद्धद्दड.ढण | द्दघछण.डण | द्धघज्ञद्द.घघ | द्धटघद्ध.ढद्ध | छण्द्दद्द.ढठ | द्दडढढ.द्धट |
| बजार पु¤जीकर0f मुल्यमा कारोवारको प्रतिशत | घ.घ | ज्ञ.द्ध | ट.द्ध | द्द.ठ | छ.ज्ञ | ण.घठ | द्द.द्ध |
| कुल गार्हस्थ्य उत्पादनमा बजार पु¤जीकर0f मुल्यको प्रतिशत | द्ध.ठ | द्ध.ढ | ठ.ज्ञ | ज्ञज्ञ.ड | ज्ञज्ञ.ड | | ठ.ज्ञ |
| सुचीकृत धितोपत्रको चूक्ता मुल्य | द्धद्धठ.टछ | द्धढछ.ढड | टद्धड.ठद्ध | ठद्धड.द्दद्द | डज्ञट.छद्द | ठठठण.टछ | ढण्द्द.ज्ञट |
| सुचीकृत संगठित संस्थाहरुको संख्या | ढछ | ज्ञण्ज्ञ | ज्ञण्ठ | ज्ञज्ञण | ज्ञज्ञछ | ज्ञज्ञद्द | ज्ञज्ञढ |
| नेप्से परिसुचक (विन्दूमा) | ज्ञठट.घ | ज्ञटघ.घ | द्दज्ञट.ढ | घटण.ठ | घद्धड.द्ध | घढछ.डछ | ज्ञढघ.ड |

## ५.३ धितोपत्र बोर्ड

बोर्डले आर्थिक वर्ष २०५८।५९ को प्रथम नौं महिनामा संगठित संस्थाहरुले निष्काशन गर्न लागेको साधारण र हकप्रद शेयरको दर्ता गरी निष्काशन अनुमति दिनुका अतिरिक्त बजारलाई पारदर्शी, विश्वसनीय र दक्ष बनाउने क्रममा आर्थिक विवरण र सूचना प्रवाहको स्थितिमा सुधार ल्याउन जोड दिनुको साथै कानूनी पूर्वाधार तयार गर्न विभिन्न प्रयासहरु गरेको छ ।

बोर्डले धितोपत्र दलाल सम्वन्धी व्यवसायलाई विश्वसनीय, पारदर्शी तथा बढी मर्यादित बनाउन धितोपत्र दलाल व्यवसायीका लागि धितोपत्र दलाल व्यवसायीहरुको व्यवसायिक मर्यादा सम्वन्धी निर्देशिका, २०५८ बनाई मिति २०५८।५।२५ देखी लागू गरेको छ ।

नेपाल धितोपत्र विनिमय बजार लि., धितोपत्र दलाल व्यवसायीहरु र संगठित संस्थाहरुले प्रवाहित गर्नुपर्ने आर्थिक विवरणहरुमा एकरुपता, स्तरियता र पारदर्शिता ल्याउन बोर्डद्वारा विकसित विवरणका ढाँचाहरु चालु वर्षमा लागू गरिएको छ ।

लगानीकर्ताहरुको हीतको सम्बर्४न र बजार विकासका लागि आवश्यक कानुनी पुर्वाधारहरु तयार गर्दै जाने बोर्डको नीति अनूरुप बजार अनूगमन तथा सूपरिवेक्ष्ँ० क्षमतालाई सूदृ९ गर्न र धितोपत्र कारोवारको नियमन व्यवस्थालाई अरु प्रभावकारी बनाउन नया¤ धितोपत्र सम्वन्धी ऐन हाल विधायन प्रक्रियामा रहेको ५ ।

यस्तै बोनस शेयर निष्काशन सम्वन्धी व्यवस्था तथा प्रकृयाहरुलाई सरल र पारदर्शी गराउने क्रममा बोर्डले बोनस शेयर सम्वन्धी निर्देशिका, द्दण्छड जारी गरी कार्यान्वयनमा ल्याएको ५ । साथै बोर्डले हकप्रद शेयर निष्काशन सम्वन्धी व्यवस्था तथा प्रकृयाहरुलाई समेत सरल र पारदर्शी गराउन मस्यौदा गरिएको हकप्रद शेयर दर्ता तथा निष्काशन निर्देशिका यहि आर्थिक वर्षको अन्तसम्ममा लागु गर्ने अनूमान ५ ।

**मञ्जूषा ५ (१)**

| **धितोपत्र निष्काशन व्यवस्थामा सुधार** |
|---|
| • बोनस शेयर निष्काशन सम्बन्धी निर्देशिका, २०५८ र यसमा रहेका मुख्य व्यवस्थाहरु:<br>बोनस शेयर जारी गर्न शेयरको अंकित मूल्य बरावरको रकम चुक्ता भैसकेको हुनुपर्ने,<br>विगत तीन वर्ष लगातार रुपमा मुनाफा आर्जन गरेको हुनुपर्ने तथा नियमन गर्ने निकायले खडा गर्न भनि तोकेको जगेडा/कोषहरु कटाई शेयरवालाहरुको दावी रहन सक्ने गरी श्रृजना गरिएका स्वतन्त्र जगेडा तथा नगदमा प्राप्त शेयर प्रिमियम रकमलाई पूँजीकरण गरी निष्काशन गर्न सक्ने,<br>कुनै स्थिर सम्पत्तिलाई पुनर्मूल्यांकन वा बिक्री गरी सिर्जित बचत वा जगेडा कोषबाट बोनस शेयर जारी गर्न नसक्ने र प्रचलित कानून अनुसार लाभांश बाँड्नमा बन्देज लगाइएको हुन नहुने ।<br><br>• धितोपत्र दर्ता तथा निष्काशन अनुमति निर्देशिका, २०५७ र यसमा रहेका मुख्य व्यवस्थाहरु:<br><br>कम्तिमा एक वर्ष सञ्चालन अवधि पूरा गरिसकेको संगठित संस्थामात्र सार्वजनिक निष्काशनमा जान सक्ने,<br>प्रिमियम मूल्य थप गरी शेयर निष्काशन गर्न सक्ने आधार उल्लेख हुनुपर्ने,<br>विवरणपत्रमा प्रक्षेपित वित्तीय विवरण तयार गर्ने विशेषज्ञ वा विशेषज्ञ संस्थाको आफूले तयार गरेको विवरणको सम्बन्धमा व्यवसायिक (Professional) जवाफदेहिता रहने,<br>पर्यटन, यातायात, व्यापारिक र औद्योगिक व्यवसाय गर्न स्थापित संगठित संस्थाले साधारण शेयर निष्काशन गर्दा प्रचलित कानून बमोजिम अनुमति प्राप्त गरेका धितोपत्र व्यवसायीबाट प्रत्याभूति गराएर मात्र धितोपत्र निष्काशन गर्नुपर्ने; र<br>संस्थापकहरुले लिएको शेयर कम्पनीको विवरणपत्र प्रकाशन गरेको मिति वा कारोवार सञ्चालन भएको मितिबाट तीन वर्ष जुन पछि हुन्छ सो अवधि पूरा नभई बिक्री गर्न नपाउने । |

## ५.४ नेपाल धितोपत्र विनिमय बजार लि.

नेपाल धितोपत्र विनिमय बजार लि. बा६ श्री छ को सरकारले आर्थिक वर्ष द्दण्छड।छढ को बजे६ वक्तव्यमा उल्लेखित पु¤जीगत लाभकरको व्यवस्था अनूसार आर्थिक वर्ष द्दण्छड।छढ को प्रथम आ७ महिनामा कम्प्यु६र प्रविधिको प्रयोग गरी धितोपत्र कारोवारको श्रोतबा६ रु. ढ लाख छढ हजार ठ सय द्धद्ध कर संकलन भएको ५ ।

नेपाल धितोपत्र विनिमय बजार लि. ले आर्थिक वर्ष २०५८।५९ को बजेट बक्तव्यमा उल्लेखित विगत २ वर्ष देखि विवरण प्रवाह नगरेका सूचीकृत कम्पनीहरुको सूचीकरण खारेज गर्ने कार्य लाई अगाडि बढाउने क्रममा प्रथम चरणमा २५ वटा त्यस्ता कम्पनीहरुको नाम सार्वजनिक गर्नुका साथै प्रकाशित सूचना उपर कुनै प्रतिक्रिया

नआएपछि त्यस्ता कम्पनीहरुको केन्द्रीय कार्यालय रहेको ठेगानामा निरीक्षणका लागि कर्मचारी पठाउँदा समेत कम्पनीको वारेमा जानकारी प्राप्त नभएको हुँदा सूचीकरण खारेजीको प्रकृया अगाडि बढाएको छ ।

**छ.छ धितोपत्र व्यवसायीहरु**

धितोपत्र कारोवार ऐन, २०४० मा भएको व्यवस्था अनुसार धितोपत्र व्यवसायमा संलग्न व्यवसायीहरु मध्ये आर्थिक वर्ष २०५८।५९ को प्रथम नौ महिनामा २७ वटा धितोपत्र दलाल व्यवसायी, ९ वटा धितोपत्र निष्काशन तथा बिक्री प्रबन्धक व्यवसायी र २ वटा धितोपत्र व्यापारी (डिलर) व्यवसायी कम्पनीहरुले आफ्नो प्रमाणपत्र नवीकरण गराएका छन् । गत आर्थिक वर्षको सोही अवधिमा २७ वटा धितोपत्र दलाल व्यवसायी, १० वटा धितोपत्र निष्काशन तथा बिक्री प्रबन्धक व्यवसायी, २ वटा धितोपत्र व्यापारी (डिलर) व्यवसायी कम्पनी र १ वटा बजार निर्माता व्यवसायीका रुपमा कारोवारमा संलग्न रहेका थिए ।

## ५.६ सामूहिक कोष तथा एकांक योजना

पूँजी बजारमा प्रवेश गर्ने वचत र लगानीकर्ताहरुलाई बैकल्पिक लगानीका उपकरण प्रदान गर्ने नीति अनुरुप नागरिक लगानी कोषको प्रबन्धकत्वमा संचालन गर्न दिइएको नागरिक एकांक योजनाका साथै यसले संचालन गरेको अन्य सामुहिक वचत कार्यक्रमहरु अन्तर्गत आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा थप रु. १९ करोड ७० लाख वचत पूँजी परिचालन भई जम्मा संकलित कोष रकम रु. १ अर्व १६ करोड ७ लाख पुगेको छ । यसरी संकलित कूल रकममध्ये नागरिक एकांक योजनामा ३३.९ प्रतिशत, कर्मचारी वचत बृद्धि कार्यक्रममा ५०.९ प्रतिशत, लगानीकर्ता हिसाव योजनामा ८.३ प्रतिशत र उपदान कोषमा ६.८ प्रतिशत रहेको छ । कोषबाट परिचालित भएको उक्त रकम मध्ये ५३ प्रतिशत सरकारी ऋणपत्रमा, ३० प्रतिशत निश्चित ब्याज प्राप्त हुने बैंक तथा वित्त कम्पनीको मुद्दती निक्षेपमा, १४ प्रतिशत समयकालिन कर्जामा र बाँकी ३ प्रतिशत संगठित संस्थाहरुको शेयरमा लगानी भएको छ ।

त्यस्तै नेपाल औद्योगिक विकास निगमको व्यवस्थापनमा संचालन हुदै आएको एन सी एम म्यूच्यूअल फण्डको समयावधी समाप्त भएको छ । धितोपत्र बजारमा संस्थागत लगानीकर्ताको खाँचोलाई हेरी उक्त फण्डलाई पुनर्संरचना गरी निरन्तरता दिने कार्य अन्तिम चरणमा रहेको छ । आर्थिक वर्ष २०५८।५९ को अन्तसम्ममा रु. १० करोड अंकित मुल्य बरावरको एन.सी.एम. म्यूच्यूअल फण्ड बजारमा उपलव्ध हुने अनुमान छ ।

बजारमा यस प्रकारको उपकरणको आवश्यकता रहेको तर ट्रष्ट ऐन नभएको हालको स्थितिलाई हेरी धितोपत्र कारोवार ऐन अनुसार धितोपत्र बोर्डले निजी क्षेत्रका वित्त कम्पनीहरुको प्रबन्धकत्व र जिम्मेवारीमा अरु म्यूच्यूअल फण्ड संचालन समेत गर्न दिने नीति लिएको छ । यसलाई कार्यान्वयनमा ल्याउने क्रममा म्यूच्यूअल फण्ड संचालन सम्बन्धी निर्देशिकाको मस्यौदा तयार भईसकेको छ । चालु आर्थिक वर्षको अन्तसम्ममा यो कार्यान्वयनमा आउने अनुमान छ ।

## ५.७ दीर्घकालीन सरकारी ऋणपत्र

आथिक वर्ष द्दण्छडाछढ को प्रथम आ७ महिनामा कायम रहेको दीर्ईकालीन सरकारी ऋृ०ापत्र गत आर्थिक वर्षको दा¤जोमा ज्ञद्द.ट प्रतिशतले ह्रास भई रु. द्दड अर्व घघ करोड्ड घण लाख पूगेको ५ । आर्थिक वर्ष द्दण्छटाछठ को तूलनामा आर्थिक वर्ष द्दण्छठाछड मा कायम रहेको दीर्ईकालीन सरकारी ऋृ०ापत्रमा द्द.टढ प्रतिशतले ह्रास भई रु. घद्द अर्व द्धघ करोड्ड द्दढ लाख पूगेको थियो । चालू आर्थिक वर्षको प्रथम आ७ महिनामा कायम रहेको दीर्ईकालीन सरकारी ऋृ०ापत्रहरु मध्ये राष्ड्रिय बचतपत्र अग्रस्थानमा रही रु. ज्ञद्द अर्व घठ करोड्ड टद्ध लाख (द्धघ.ठ प्रतिशत), विकास ऋृ०ापत्र रु. ट अर्व डण करोड्ड ठ लाख (द्दद्ध.ण प्रतिशत), विशेष ऋृ०ापत्र रु. ड अर्व ठघ करोड्ड डण लाख (घण.ड प्रतिशत) र नागरिक वचतपत्र रु.द्धज्ञ करोड्ड ठढ लाख (ज्ञ.छ प्रतिशत) रहेको ५ । उक्त अवधीमा कायम रहेको सरकारी ऋृ०ापत्रको स्वामित्वमा नेपाल राष्ड्र बैंकको अंश ज्ञट.द्द प्रतिशत, वित्तीय एवं अन्य संस्थानका अंश छद्ध.ज्ञ प्रतिशत र व्यक्ति तथा अन्य निजी क्षेत्रको अंश द्दढ.ठ प्रतिशत रहेको ५।

आर्थिक वर्ष द्दण्छडाछढ को प्रथम आ७ महिनामा आर्थिक वर्ष द्दण्छठाछड को तूलनामा दीर्ईकालीन सरकारी ऋृ०ापत्रको दोश्रो बजारको कारोवारमा सम्लग्न बजार निर्माता मार्फत हूने गरेको खरिद बिक्री कारोवारमा द्दढ.घ

प्रतिशतले कमी आई रु. घद्ध करोड बरावर भएको ५ । आर्थिक वर्ष द्गण्छठा।छड मा दीईकालीन सरकारी ऋ0ापत्रको दोश्रो बजारमा बजार निर्माता मार्फत रु. द्धड करोड ज्ञद्द लाख बरावरको खरिद बिक्री करोवार भएको थियो । यसै गरी आर्थिक वर्ष द्गण्छड।छढ को प्रथम आ७ महिनामा आर्थिक वर्ष द्गण्छठा।छड को तूलनामा नेपाल राष्ट्र बैंकले दोश्रो बजारमा गरेको दीईकालीन सरकारी ऋ0ापत्रको खरिद बिक्री कारोवारमा टद्ध.ढ प्रतिशतले कमी आई रु. द्धछ करोड ज्ञट लाख बरावर भएको ५ । आर्थिक वर्ष द्गण्छठा।छड मा नेपाल राष्ट्र बैंकले दीईकालीन सरकारी ऋ0ापत्रको रु. ज्ञ अर्व द्दड करोड ठट लाख बरावरको खरिद बिक्री कारोवार गरेको थियो ।

## ५.८ ट्रेजरी विल

आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा रहेको ट्रेजरी विल गत आर्थिक वर्षको तुलनामा ४८.९ प्रतिशतले बृद्धि भई रु. ४१ अर्व १० करोड ६६ लाख पुगेको छ । आर्थिक वर्ष २०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा ट्रेजरी विलमा ३१.३ प्रतिशतले बृद्धि भई रु. २७ अर्व ६१ करोड ८ लाख पुगको थियो । चालु आर्थिक वर्षको प्रथम आठ महिनामा कायम रहेको ट्रेजरी विलको स्वामित्वमा नेपाल राष्ट्र बैंकको अंश ३५.३ प्रतिशत अर्थात रु. १४ अर्व ४९ करोड ८१ लाख र वित्तीय एवं अन्य संस्थानहरुको अंश ६४.७ प्रतिशत अर्थात रु. २६ अर्व ६० करोड ८४ लाख पुगेको छ । आर्थिक वर्ष २०५८।५९ को फाल्गुण मसान्तमा ट्रेजरी विलको भारित औषत व्याजदर ५.४ प्रतिशत रहेको छ ।

आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा आर्थिक वर्ष २०५७।५८ को तुलनामा नेपाल राष्ट्र बैंकले गरेको ट्रेजरी विलको रिपो (repo) र आउटराइट (outright) खरिदतर्फ १५.५ प्रतिशतले ह्रास आई रु. ४९ अर्व ९४ करोड ४६ लाख वरावर भएको छ भने बिक्री तर्फ २.८ प्रतिशतले बृद्धि भई रु. ३० अर्व २३ करोड ६२ लाख बरावर भएको छ । आर्थिक वर्ष २०५७।५८ मा ट्रेजरी विलको दोश्रो बजारमा नेपाल राष्ट्र बैंकले रिपो (repo) र आउटराइट (outright) खरिद गरी रु. ५७ अर्व १० करोड ६९ लाख बरावरको ट्रेजरी विल खरिद तथा रु. २९ अर्व ४१ करोड २० लाख बरावरको ट्रेजरी विल बिक्री गरेको थियो ।

## ५.९ अन्तर बैंक कर्जा

आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा गत आर्थिक वर्षको तुलनामा अन्तर बैंक कर्जामा ३५.९ प्रतिशतले कमी आई रु. १ अर्व २३ करोड ७ लाख कायम भएको छ । आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा विदेशी बैंकबाट लिईएको कर्जा रकम रु. ८ करोड ३३ लाख पुगेको छ । अन्तर बैंक कर्जाको व्याजदर आर्थिक वर्ष २०५७।५८ मा ४.३ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा यसमा बृद्धि भई ४.५ प्रतिशत पुगेको छ ।

नेपाल राष्ट्र बैंकले बाणिज्य बैंकहरुको तरलतामा बृद्धि गर्न यस अवधिमा अनिवार्य नगद मौज्दातको प्रतिशतलाई चल्ती र वचत निक्षेप दायित्वमा १ प्रतिशत विन्दु कम गरी ८ प्रतिशतबाट ७ प्रतिशत र मुद्दती निक्षेप दायित्वमा १.५ प्रतिशत विन्दु कम गरी ६ प्रतिशतबाट ४.५ प्रतिशत कायम गर्‍यो । परिणाम स्वरुप बाणिज्य बैंकहरुको तरलतामा करीव रु. २ अर्वले बृद्धि भएको छ ।

संक्षेपमा नवौं योजना अवधिमा धितोपत्र बोर्डको भूमिका र जिम्मेवारीलाई केन्द्रीय नियमन निकायको रुपमा र धितोपत्र विनिमय बजार लि. लाई अग्रपङ्तिको नियमन निकायको रुपमा विकसित गर्ने प्रकृयालाई अगाडि बढाइएको छ । योजना अवधिमा धितोपत्र बोर्डसँग धितोपत्र व्यवसायीहरुको प्रत्यक्ष सम्बन्ध स्थापित गर्ने नीति कार्यान्वयनमा ल्याइयो साथै व्यक्तिगत रुपमा रहेका धितोपत्र दलाल व्यवसायीहरुलाई संस्थागत रुपमा परिणत गरियो । धितोपत्र निष्काशन व्यवस्थालाई अरु सरल र पारदर्शी बनाउन संस्थागत क्षेत्रबाट बजारमा प्रवाहित हुनुपर्ने जानकारी र आर्थिक विवरणहरुमा निरन्तरता, एकरुपता र स्तरियता बृद्धि गर्न विवरणहरुको नयाँ ढाँचा विकसित गरी लागू गरियो । संस्थागत क्षेत्रमा लेखा र लेखा परीक्षणको स्तर अन्तर्राष्ट्रिय माप दण्ड अनुरुप बनाउन आवश्यक कानूनी तथा संस्थागत पूर्वाधार निर्माण गर्ने क्रम शुरु गरी नेपाल चार्टर्ड एकाउन्टेन्ट संस्था ऐनमा समेत सुधार गरियो । धितोपत्र व्यवसायीको कार्यलाई मर्यादित र विश्वसनीय बनाउन धितोपत्र दलाल व्यवसायी र निष्काशन तथा बिक्री प्रबन्धकहरुको व्यवसायीक मर्यादा सम्बन्धी निर्देशिकाहरु लागू गरियो । ऐन नियम र यस अर्न्तगतका व्यवस्थाहरुको पालना प्रति सजग गराउन तथा धितोपत्र बजार

प्रतिको चेतना अभिबृद्धि गराउन चेतना मुलक कार्यक्रमहरु समेत संचालन गरिएको थियो ।

## ५.१० चुनौतीहरु

पूँजी र मुद्रा बजारका प्रमुख चुनौतिहरु देहाय अनुसार रहेका छन्:

- संस्थागत लगानीकर्ताको कमी, न्यून आन्तरिक बचत तथा लगानीको स्तर तथा कर्जामुखी लगानी प्रबृत्तिले गर्दा धितोपत्र बजारको स्तर र दायरा फराकिलो र गतिशील बनाउदै जाने ।
- पूँजी बजारमा सूचना तथा जानकारीको प्रवाहमा सूधार ल्याई बजारलाई विश्वसनीय बनाउन पूँजी बजार सम्वन्धी कानूनी संरचनाहरुलाई सुदृढ गर्ने ।
- पूँजी बजारको स्थिरता र गतिशिलताका लागी महत्वपुर्ण भूमिका निर्वाह गर्न सक्ने बजार निर्माता तथा अन्य धितोपत्र व्यवसायीहरुको प्रवेश तथा वहिर्गमन प्रकृयालाई सरल बनाउने ।
- नेप्से परिसूचकमा हुने गरेको अस्वभाविक उतार चढावलाई न्यून गर्न धितोपत्रको दोश्रो बजारमा हुने गरेको कारोवारलाई बढी प्रतिस्पर्धी र पारदर्शी गराउने ।
- बजारमा साधारण शेयरको बाहुल्यता रही अन्य प्रकृतिका धितोपत्र औजारको कमीले गर्दा जोखिम प्रति विभिन्न धारणा राख्ने लगानीकर्ताहरु अनुकूल बजार विकास गर्दै जाने ।
- धितोपत्र कारोवार पद्धतीको समय सापेक्ष यान्त्रीकरण गर्दै जाने ।
- संस्थागत ऋणपत्र बजारको अविकसित अवस्थामा सुधार ल्याउने ।
- पूँजी बजारमा सहभागी भएका तथा इच्छुक अन्य लगानीकर्ताहरुमा लगानी सम्वन्धी सचेतता अभिवृद्धि गरी सु-सूचित निर्णय गर्न सक्षम बनाउदै जाने ।
- मुद्रा बजारमा विविध प्रकृतिका अल्पकालीन ऋणपत्र उपकरणहरु प्रयोगमा ल्याई गैर बैंकिङ्ग क्षेत्रमा साधनको लेनदेन अझ सरल र पारदर्शी बनाउदै जाने ।
- दीर्घकालीन सरकारी ऋणपत्रहरुको प्रतिफल दर भुक्तानी अवधि अनुसार फरक हुने गरी ऋणपत्र बजार विकसित गराउँदै जाने र

- बैंकिङ्ग क्षेत्रको तरलतामा हाल निकै चाप परेको हुँदा सो चाप हटाउने ।

# ६. वैदेशिक व्यापार तथा भुक्तानी

६.१ विगतका केही वर्षहरुमा अन्तर्राष्ट्रिय व्यापार तथा भुक्तानी स्थिति उत्साहजनक रहेको भएपनि चालु आर्थिक वर्षको सुरुवात संगै निर्यात तथा आयात दुबैमा शिथिलताका संकेतहरु प्रष्ट रुपमा देखिन थाल्यो । नेपालका सिमित मुख्य व्यापारिक साझेदार मुलुकहरुमा आएको आर्थिक मन्दीबाट नेपालको तेश्रो मुलुकतर्फको निर्यातमा देखिएको ह्रासोन्मुख प्रवृत्तिमा सेप्टेम्वर ११ मा अमेरिकामा भएको आतङ्ककारी आक्रमणले थप गति पुग्न गयो । यसको अलावा केही वर्ष पहिले देखि देशमा शान्ति सुरक्षाको स्थिति नाजुक भएको कारण आन्तरिक आर्थिक गतिविधिहरुमा आएको शिथिलताबाट पनि नेपालको बाह्र्य क्षेत्रको क्रियाकलाप (Performance) मा प्रतिकूल प्रभाव पर्न गएको छ ।

## <u>निर्यात</u>

६.२ गत आर्थिक वर्षको आठ महिनासम्ममा २०.२ प्रतिशतले बढेको कुल निर्यात चालु आर्थिक वर्षको शुरुदेखि नै आन्तरिक तथा वाह्य परिस्थितिहरु अनुकूल हुन नसक्दा चालु आर्थिक वर्षको समीक्षा अवधिमा ७.८ प्रतिशतले ह्रास भई रु. ३४ अर्ब ९३ करोड पुगेको छ । निर्यातलाई अमेरिकी डलरमा गणना गरेर हेर्दा गत वर्षको १२.५ प्रतिशत वृद्धिको तुलनामा यस वर्ष ११.३ प्रतिशतले घटेको देखिन्छ । अन्य मुलुकतर्फको निर्यातमा उल्लेख्य कमी आएको तर भारततर्फको निर्यातमा वृद्धि हुने क्रम कायमै रहेको कारण यस अवधिको कुल निर्यातमा भारतको अंश ६३.१ प्रतिशत रहेको छ जुन गत वर्षको यसै अवधिमा ४४.४ प्रतिशत रहेको थियो । निर्यात/आयात अनुपाततर्फ समीक्षा अवधिको कुल निर्यातले कुल आयातको ५०.० प्रतिशत अंश खाम्न सकेको छ जुन गत आर्थिक वर्षको यसै अवधिमा ४९.६ प्रतिशत रहेको थियो । यस अवधिमा निर्यातको तुलनामा आयातमा बढी ह्रास आएको कारण निर्यात/आयात अनुपातमा सीमान्त रुपमै भएपनि सुधार भएको हो ।

६.३ देशगत रुपले हेर्दा समीक्षा अवधिमा भारततर्फको निर्यात गत वर्षको सोही अवधिको २८.३ प्रतिशत वृद्धिको तुलनामा ३१.० प्रतिशतले बढी रु. २२ अर्ब ६ करोड पुगेको छ । भारततर्फको निर्यातमा वृद्धि भएका प्राथमिक वस्तुहरुमा औषधिजन्य जडिबुटी, सुठो, अदुवा, दाल, दालचिनी, वेसार, फलफूल, तरकारी, खयर, ढुङ्गा तथा बालुवा, कच्चा जुट, फापर, छाला, जुटका सामानहरु, अलैची आदि रहेका छन् । निर्यात उत्साहप्रद रुपमा वृद्धि भएका औद्योगिक वस्तुहरुमा बनस्पति घ्यू २२५.६ प्रतिशतले, चाउचाउ ३५.८ प्रतिशतले तथा पोलिष्टर यार्न ४८.३ प्रतिशतले वृद्धि भएको छ । नयाँ औद्योगिक वस्तुहरु जस्तै च्यवनप्राश, एम.एस. पाइप, पी.पी. फेब्रिक, प्लाष्टिकका सामान, तामाको तार, वाटिका केश तेल, सपिङ्ग व्याग, लेख्ने छाप्ने कागज, डिस्पोजेबल ग्लास, नरिवल तेल र रासायनिक पदार्थ जस्ता वस्तुको निर्यात पनि वृद्धि

भएको छ । तथापि गत वर्ष भारततर्फको निर्यातमा प्रथम स्थान ओगट्न सफल रहेको पश्मिनाको निर्यात समीक्षा अवधिमा ७९.३ प्रतिशतले घटेको छ । साथै, यस अवधिमा

दन्तमञ्जन, विस्कुट, गाईवस्तुको दाना, जिङ्क अक्साइड, मैनबत्ती, कपडा, चिनी, हस्तकलाका सामान, प्राक्टिकल बोर्ड, धागो तथा सावुन जस्ता वस्तुहरुको निर्यातमा

> **मञ्जुषा ६ (१)**
> **नवीकृत नेपाल-भारत व्यापार सन्धिमा पुनरावलोकन गरिएका नयां व्यवस्थाहरु**
>
> सन् १९९६ मा सम्पन्न नेपाल-भारत वीचको व्यापार सन्धि द्विपक्षीय व्यापार अभिवृद्धि गर्न अत्यन्त उदार रहेको भए पनि कुनै एक पक्षले सन्धि पुनरावलोकन गर्न लिखित जानकारी गराएमा सन्धि स्वतः नवीकृत नहुने व्यवस्था उक्त सन्धिमा गरिएको थियो । नेपालबाट केही वस्तुहरुको अधिक निर्यात (Export Surge) भएको कारण देखाई उक्त सन्धिको पुनरावलोकन गर्ने कुरा भारतीय पक्षले उठाएपछि द्विपक्षीय छलफलको विभिन्न चरण पश्चात सन्धिको मूल खण्डमा कुनै परिवर्तन नगरिएको भएतापनि प्रोटोकलमा केही परिवर्तन तथा थप प्रावधान सहित २०५८ फाल्गुण १८ मा सन्धि नवीकरण गरिएको छ । नवीकृत सन्धिको प्रोटोकलमा गरिएका नयाँ व्यवस्थाहरु निम्नानुसार छन् :
>
> नेपालमा उत्पादन हुने वस्तुहरु कुनै किसिमको परिमाणात्मक बन्देज तथा भन्सार महसुल विना भारतमा निकासीको प्रत्याभूति सन् १९९६ मा सम्पन्न सन्धिको धारा पाँच र सम्वन्धित प्रोटोकलमा रहेकोमा उल्लेखित व्यवस्था खारेज गरी यसको स्थानमा नयाँ व्यवस्था गरिएको छ । जसअनुसार महसुल तथा कोटा रहित सुविधाको लागि २०५८ फागुण २२ गते देखि २०५९ फागुण २१ सम्मको लागि भारत निर्यात हुने नेपाली उत्पादनमा तेश्रो मुलुकबाट आयातीय कच्चा पदार्थको संमिश्रण बढीमा ७५ प्रतिशतसम्म हुन सक्ने बाध्यात्मक व्यवस्था गरिएको छ । त्यसैगरी २०५९ फागुण २२ गते पछिको लागि तेश्रो मुलुकबाट आयातीत कच्चा पदार्थको संमिश्रण बढीमा ७० प्रतिशतसम्म रहेका नेपाली उत्पादनहरुले मात्र यस्तो सुविधा पाउने व्यवस्था गरिएको छ ।
>
> भारतीय पक्षले अधिक निर्यात (Export Surge) भएको भनी प्रश्न उठाएका चार प्रमुख वस्तुहरु वनस्पति घ्यू, एक्रेलिक यार्न, तामाजन्य उत्पादनहरु र जिंक अक्साइडको सहुलियतपूर्ण भारत निर्यातको लागि क्रमशः १००,००० मेट्रिक टन, १०,००० मेट्रिक टन, ७,५०० मेट्रिक टन र २,५०० मेट्रिक टनको परिमाणात्मक बन्देज लगाइएको छ । तोकिएको सीमाभन्दा बढीको निकासी भएमा अति सौविध्य राष्ट्र (Most Favored Nation) को सिद्धान्त अनुसार व्यवहार गरिने व्यवस्था भएको छ ।
>
> सन् १९९६ मा सम्पन्न सन्धिको नवौं धारामा सार्वजनिक नैतिकता (Public Morals) मानव, जनावर तथा वनस्पति र राष्ट्रिय बहुमूल्य सम्पदा संरक्षण, सुन तथा चाँदीको आयात तथा निर्यात सम्वन्धी कानून र दुई पक्षले मञ्जुर गरेका अन्य लाभका विषयहरुको संरक्षणको लागि निश्चित बन्देजहरु कायम गर्न सक्ने व्यवस्था रहेकोमा, नवीकृत सन्धिले घरेलु उद्योगहरुलाई आघात (Injury) पुग्ने गरी वस्तुहरुको कुनै देशमा आयात वृद्धि भई छोटो अवधिमै आय, उत्पादन तथा रोजगारीमा धान्नै नसक्ने स्थितिको सिर्जना भएमा आयात वृद्धि भएको देशले त्यस्तो स्थिति नियन्त्रण गर्न उपयुक्त उपायहरु सम्वन्धमा दुई देशका सरकारहरुद्वारा गठित समिति समक्ष अनुरोध गर्नसक्ने र उक्त कमिटिले ६० दिनभित्रमा समस्या समाधान गर्न नसकेमा यस्तो अनुरोध गर्ने देशले उपयुक्त उपायहरु अवलम्वन गर्न सक्ने व्यवस्था पनि थप गरिएको छ । यस स्थितिमा अवलम्वन गरिएका उपायहरुको सम्वन्धमा नेपाल भारत अन्तर सरकारी समितिले पुनरावलोकन गर्ने व्यवस्था गरिएको छ ।

कमी आएको छ ।[१]

---

१ चालु आर्थिक वर्षको प्रथम आठ महिनामा भारततर्फको निर्यात ३१.० प्रतिशतले वढेको भएतापनि हालै नवीकृत द्वि-पक्षीय व्यापार सन्धिका केही संरक्षणवादी प्रावधानहरुले गर्दा त्यसतर्फ निर्यात हुने केही प्रमुख वस्तुहरुको निर्यात निरुत्साहित भई भारतसंगको व्यापार घाटा वढ्न जाने अनुमान छ ।

६.४ समीक्षा अवधिमा तेश्रो मुलुकतर्फको निर्यात गत वर्षको यसै अवधिको १४.४ प्रतिशत वृद्धिको विपरित ३८.९ प्रतिशतले घटेर रु. १२ अर्ब ८८ करोडमा ओर्लेको छ । बिगत केही वर्षदेखि अन्य मुलुकतर्फको निर्यातमा प्रमुख स्थान ओगट्दै आएका अधिकांश निर्यातयोग्य वस्तुहरुको निर्यातमा उल्लेख्य कमी आएको कारण अन्य मुलुकतर्फको निर्यात यसरी तीब्र रुपमा घट्न गएको हो । यस अवधिमा तयारी पोशाकको निर्यातमा गत वर्षको यसै अवधिको तुलनामा ४२.१ प्रतिशतले गिरावट आई रु. ५ अर्ब ३९ करोड रहेको छ । ऊनी गलैंचाको निर्यात गत वर्षको यसै अवधिको तुलनामा २६.५ प्रतिशतले घटी रु. ४ अर्ब २६ करोड रहेको र पश्मिनाको निर्यात ७४.२ प्रतिशतले घट्न गई रु. ९५ करोडमा सिमित रहेको छ । त्यसतर्फ निर्यात हुने अन्य वस्तुहरु जस्तै हस्तकलाका सामानहरु, छाला, दाल, चिया तथा जडिवुटीको निर्यातमा पनि उल्लेख्य रुपले कमी आएको छ ।

## आयात

६.५ आर्थिक वर्ष २०५४।५५ र आर्थिक वर्ष २०५५।५६ मा आन्तरिक आर्थिक गतिविधिहरुमा आएको शिथिलताले गर्दा आयात व्यापारमा गिरावट आएको भएतापनि आर्थिक वर्ष २०५६।५७ को शुरुवातसंगै यस्तो प्रबृत्तिमा परिवर्तन भई आयात वृद्धि हुने क्रम शुरु भएको थियो । चालु आर्थिक वर्षको शुरुसंगै आन्तरिक तथा वाह्य कारणहरुले गर्दा आर्थिक गतिविधिहरुमा पुनः शिथिलता आउन थालेपछि निर्यात संगै आयात पनि घट्ने क्रम शुरु भएको छ । चालु आर्थिक वर्षको प्रथम ८ महिनामा कुल आयात ८.५ प्रतिशतले घट्न गई रु. ६९ अर्ब ८४ करोड भएको छ । कुल आयात मध्ये भारतर्फको अंश ४१.२ प्रतिशत र तेश्रो मुलुकतर्फको अंश ५८.८ प्रतिशत रहेको छ । गत आर्थिक वर्षको यसै अवधिमा कुल आयात ८.९ प्रतिशतले बढी रु. ७६ अर्ब ३५ करोड पुगेकोमा कुल आयातमा भारत र तेश्रो मुलुकको अंश क्रमशः ३७.८ प्रतिशत र ६२.२ प्रतिशत रहेको थियो । अमेरिकी डलरमा गणना गरेर हेर्दा चालु आर्थिक वर्षको यस अवधिमा भएको आयात गत वर्षको १.९ प्रतिशत वृद्धिको तुलनामा १२.० प्रतिशतले घट्न गएको छ ।

६.६ भारतबाट हुने आयात गत वर्षको यसै अवधिमा १३.३ प्रतिशतले बढेको तुलनामा समीक्षा अवधिमा ०.४ प्रतिशतले घट्न गई रु. २८ अर्ब ७९ करोड रहेको छ । भारतबाट आयातीत वस्तुहरुको संरचनालाई हेर्दा पेट्रोलियम समूह बाहेक अन्य सबै किसिमका समूहगत वस्तुहरुको आयातमा कमी आएको देखिन्छ । परिवर्त्य विदेशी मुद्रा तिरेर केही औद्योगिक कच्चा पदार्थ तथा निर्माण सामग्रीहरु आयात गर्न पाइने व्यवस्था भएपछि यस्ता वस्तुहरुमा आयात वृद्धिको क्रम जारी रहेकोमा समीक्षा अवधिमा यस्तो आयातमा समेत केही कमी आएको छ । चालु आर्थिक वर्षको प्रथम आठ महिनासम्ममा यस्ता वस्तुहरुको आयात ४.१ प्रतिशतले कमी भई रु. ५ अर्ब १३ करोड रहेको छ । यो परिमाण भारतबाट भएको कुल आयातको १७.८ प्रतिशत हुन आउँछ । गत वर्षको यसै अवधिमा यी वस्तुहरुको आयात ११.१ प्रतिशतले वृद्धि भएको र भारतबाट भएको कुल आयातमा यो आयातको अंश १८.५ प्रतिशत रहेको थियो । परिवर्त्य विदेशी मुद्रा भुक्तानी गरी आयात गर्न पाइने वस्तुहरुमध्ये मुख्यतया मेशिनरी सामान, एम.एस. विलेट, एम.एस. वायर रड, हट रोल्ड सिट, कोल्ड रोल्ड सिट,

कार्बन ब्लक, काष्टिक सोडा, सिमेण्ट, बिद्युतीय जेनेरेटर र यातायातका साधनहरुको आयातमा वृद्धि भएको छ भने स्टिल सिट, आल्मुनियम विलेट/रड, औद्योगिक रसायनहरु, जी.आई. वायर, टेक्स्टाइल, धागो, बिजुलीका सामान, पोलिष्टर फाइबर आदिको आयातमा कमी आएको छ । भारतबाट परम्परागत रुपमा आयात हुने वस्तुहरुमध्ये यातायातका सामान तथा पार्टपूर्जा, रासायनिक मल, रासायनिक पदार्थहरु, धागो, कपडा, प्लाष्टिकका सामान, कृषि उपकरणहरु, फलफूल, तरकारी, दुग्ध पदार्थहरु, जीवित जनावर, सूर्ती, सिमेन्ट, तयारी पोशाक, अन्य मेसिनरी तथा पूर्जाहरुको आयातमा कमी आएको छ भने नून, दाल, पेट्रोलियम, टायर तथा ट्यूब, विद्युत सम्बन्धी सामान तथा उपकरणहरु, औषधि, कस्मेटिक्स, रेडियो, टेलिभिजन, ड्राइसेल ब्याट्री, चिनी, कोइला जस्ता वस्तुको आयातमा वृद्धि भएको छ ।

६.७ तेश्रो मुलुकबाट हुने आयात समीक्षा अवधिमा १३.५ प्रतिशतले घटी रु. ४१ अर्ब ५ करोड पुगेको छ जुन गत वर्षको सोही अवधिमा ६.३ प्रतिशतले वढेको थियो । अन्य मुलुकबाट हुने आयातमा यसरी संकुचन देखिनुमा खाद्य समूह अन्तर्गतका धुलो दूध, खाद्य तेल, मरीच, सुपारी, निर्माण सामग्रीहरु अन्तर्गतका स्टील वायर, पाईप तथा पाईप फिटिङ्गस्, अलकत्रा, औद्योगिक कच्चा पदार्थहरुमा कच्चा ऊन, पाम तेल, कपास, वोसो, प्याराफिन वेक्स, पि.भी.सी. कम्पाउन्ड, टेक्स्टाइल डाइ, सिगरेट पेपर, धागो, जिङ्क इन्गट, कपर वायर रड र अन्यमा टायर तथा ट्यूव, कम्प्यूटर पार्टस्, स्टोरेज ब्याट्री, टेलिभिजन, डेक तथा पार्ट, यातायातका सामान तथा पूर्जा, एयर-क्राफ्ट स्पेयर पार्टस्, टेक्स्टाइल, तयारी पोशाक, अन्य मेसिनरी तथा पूर्जाहरु तथा सुनको आयातमा कमी आउनु मुख्य कारण रहेको छ । समीक्षा अवधिमा त्यस तर्फबाट आयात वृद्धि भएका केही प्रमुख वस्तुहरुमा पेट्रोलियम पदार्थ, प्लाष्टिक दाना, रासायनिक मल, ड्राइसेल व्याट्री, सोयाविन तेल, बिद्युतीय उपकरण तथा सामान र औषधि तथा चिकित्सा सम्बन्धी उपकरण रहेका छन् ।

## व्यापार सन्तुलन

६.८ निर्यातको तुलनामा आयातको आयतन निकै ठूलो रहेको भएपनि गत आर्थिक वर्षको प्रथम आठ महिनामा निर्यातको वृद्धिदर आयातको भन्दा निकै उच्च रहेको कारण व्यापार घाटामा ०.४ प्रतिशतले संकुचन हुन गएको थियो । चालु आर्थिक वर्षको प्रथम आठ महिनाको तथ्याङ्कलाई हेर्दा निर्यात तथा आयात दुबैमा ह्रास आए पनि निर्यातको तुलनामा आयातमा अधिक ह्रास आएको फलस्वरुप व्यापार घाटा ९.२ प्रतिशतले घट्न गई घाटा रकम रु. ३४ अर्ब ९१ करोडमा झरेको छ । समीक्षा अवधिको कुल व्यापार घाटालाई क्षेत्रगत रुपमा हेर्दा भारततर्फको अंश १९.३ प्रतिशत र अन्य मुलुकतर्फको अंश ८०.७ प्रतिशत रहेको छ । गत वर्ष भने यस्तो घाटामा भारत र अन्य मुलुकतर्फको अंश क्रमशः ३१.३ प्रतिशत र ६८.७ प्रतिशत रहेको थियो । नेपालको निर्यात तथा आयातको आयतनमा क्रमिक वृद्धि हुँदै गएकाले वार्षिक रुपमा कुल अन्तर्राष्ट्रिय व्यापारमा समेत वृद्धि हुंदै गएकोमा चालु आर्थिक वर्षको यस अवधिमा निर्यात र आयात दुबैमा कमी आएको कारण कुल वैदेशिक व्यापारमा समेत कमी आएको छ ।

## शोधनान्तर स्थिति

६.९ चालु आर्थिक वर्षको प्रथम ६ महिनाको शोधनान्तर तथ्याङ्क अनुसार व्यापार घाटामा आएको कमी र खुद ट्रान्सफर आयमा भएको वृद्धिको वावजुद खुद सेवा आयमा तीब्र कमी आएको कारण चालु खाता घाटामा २२.५ प्रतिशतले वृद्धि भएको छ । त्यसै गरी वैदेशिक ऋणको आप्रवाहमा आएको ठूलो गिरावटको साथै विविध पूँजी आप्रवाहमा समेत कमी आएको कारण समीक्षा अवधिमा शोधनान्तर स्थिति ठूलो गतिले प्रतिकूल वन्न पुगेको छ । चालु आर्थिक वर्षको प्रथम ६ महिनामा कुल निर्यात ६.१ प्रतिशतले ह्रास भई रु. २६ अर्ब ३७ करोड र कुल आयात ७.९ प्रतिशतले ह्रास भई रु. ५२ अर्ब ५१ करोड पुगेको छ । यसरी आयातको घट्ने गति वढी हुन जाँदा व्यापार घाटा गत वर्षको यसै अवधिको रु. २८ अर्ब ९६ करोडबाट ९.७ प्रतिशतले घट्न गई चालु वर्ष रु. २६ अर्ब १४ करोड भएको छ । चालु आर्थिक वर्षको प्रथम ६ महिनामा अन्तर्राष्ट्रिय कारोवारको अर्को महत्वपूर्ण क्षेत्र सेवातर्फ थप शिथिलता देखिएको छ । यस अवधिमा पर्यटनतर्फको आयमा १८.० प्रतिशतले, यातायात सेवाबाट प्राप्त हुने आयमा ३२.० प्रतिशतले, लगानीबाट प्राप्त हुने आयमा ९.२ प्रतिशतले र अन्य सेवा अन्तर्गतको आयमा ६४.१ प्रतिशतले ह्रास आएको छ भने अन्यत्र नपरेको सरकारी आयमा १९.६ प्रतिशतले वृद्धि भएको छ । यसरी कुल सेवा आय गत वर्षको सोही अवधिको तुलनामा २७.८ प्रतिशतले कम भई रु. १४ अर्ब १८ करोडमा सिमित भएको छ । सेवा अन्तर्गतको भुक्तानीतर्फ यातायात खर्च, अन्यत्र नपरेको सरकारी खर्च, यात्रा खर्च र लगानीतर्फको भुक्तानीमा वृद्धि भएको कारण कुल सेवा अन्तर्गतको भुक्तानी गत वर्षको सोही अवधिको तुलनामा १३.० प्रतिशतले वृद्धि भई रु. ९ अर्ब ६६ करोड पुगेको छ । सेवा क्षेत्रबाट प्राप्त हुने आयमा कमी आउने र भुक्तानी भने वृद्धि हुँदा खुद सेवा आयमा ५९.२ प्रतिशतले गिरावट आएको हो । ट्रान्सफरतर्फको आयमा मुख्य भूमिका निर्वाह गर्दै आएको निजी क्षेत्रको रेमिट्यान्स चालु आर्थिक वर्षको प्रथम ६ महिनामा गत आर्थिक वर्षको सोही अवधिको तुलनामा २८.६ प्रतिशतले वृद्धि भई रु. ९ अर्ब ४० करोड पुगेको छ । यस अवधिमा सरकारलाई प्राप्त हुने अनुदानमा १२.६ प्रतिशतले र भारतीय अन्तःशुल्क फिर्ता रकममा १४.३ प्रतिशतले वृद्धि भएको छ । यस अवधिमा खुद ट्रान्सफर आय गत वर्षको सोही अवधिको तुलनामा २०.१ प्रतिशतले वृद्धि भई रु. १३ अर्ब ८९ करोड पुगेको छ ।

६.१० चालु आर्थिक वर्षको प्रथम ६ महिनामा चालु खाता घाटा गत आर्थिक वर्षको सोही अवधिको तुलनामा २२.५ प्रतिशतले विस्तार भई रु. ७ अर्ब ७३ करोड पुगेको छ । पूँजी खातातर्फ वैदेशिक ऋणको आप्रवाहमा गत वर्षको सोही अवधिको तुलनामा २६.४ प्रतिशतले ह्रास भई रु. ४ अर्ब ५७ करोड र खुद विविध पूँजी आप्रवाह ३९.७ प्रतिशतले घट्न गई रु. ३ अर्ब ७४ करोड रहेको छ । वाह्य ऋणको भुक्तानी यस अवधिमा गत वर्षको सोही अवधिको तुलनामा ४.६ प्रतिशतले वढी रु. २ अर्ब ३२ करोड रहेको छ । यसरी चालु आर्थिक वर्षको प्रथम ६ महिनामा रु. १ अर्ब ७४ करोडको शोधनान्तर घाटा भएको छ । गत वर्षको यसै अवधिमा रु. ३ अर्ब ८० करोडको शोधनान्तर वचत भएको थियो ।

## विदेशी मुद्राको संचिति

६.११ गत वर्षको प्रथम आठ महिनासम्म विदेशी विनिमयको संचितिमा वृद्धि हुने क्रम जारी रहेको भएपनि त्यसपछिको अवधिमा मिश्रित प्रवृत्ति देखिएको छ । गत आर्थिक वर्षको आषाढदेखि फाल्गुणसम्मको अवधिमा विदेशी विनिमय संचिति १४.६ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षको सोही अवधिमा यस्तो संचितिमा १.२ प्रतिशतले कमी भई कुल संचिति रु. १०३ अर्ब ९० करोडमा झरेको छ । उक्त संचितिमा नेपाल राष्ट्र बैंक र वाणिज्य बैंकहरुको हिस्सा क्रमशः ७७.४ प्रतिशत र २२.६ प्रतिशत रहेको छ । कुल संचितिमा परिवर्त्य मुद्राको अंश ७३.३ प्रतिशत र अपरिवर्त्य मुद्राको अंश २७.७ प्रतिशत रहेको छ । नेपाल राष्ट्र बैंकसँग रहेको रु. ८० अर्ब ४४ करोड बराबरको विदेशी विनिमय संचितिमा परिवर्त्य र अपरिवर्त्य मुद्राको अंश क्रमशः ६७.७ प्रतिशत र ३२.३ प्रतिशत रहेको छ भने वाणिज्य बैंकहरुसँग रहेको रु. २३ अर्ब ४५ करोडको विदेशी विनिमय संचितिमा परिवर्त्य र अपरिवर्त्य मुद्राको अंश क्रमशः ८८.० प्रतिशत र १२.० प्रतिशत रहेको छ । कुल संचितिले हालको आयात प्रवृत्तिको आधारमा करीब एक वर्षको आयात धान्न सक्ने देखिन्छ । गत वर्षको फाल्गुण मसान्तमा बैंकिङ्ग क्षेत्रसँग रहेको संचिति सोही वर्षकै आयात प्रवृत्तिको आधारमा करीब साढे एघार महिनाको आयात धान्न सक्ने स्तरमा रहेको थियो । साथै, २०५८ आषाढ मसान्तको तुलनामा २०५८ फाल्गुण मसान्तमा बैकिंङ्ग क्षेत्रको वैदेशिक सम्पत्ति १.२ प्रतिशतले घटी रु. १०४ अर्ब ९५ करोड रहेको छ भने वैदेशिक दायित्व ३.४ प्रतिशतले वृद्धि भई रु. १९ अर्ब ३ करोड पुगेको छ । गत आर्थिक वर्षको यसै अवधिमा वैदेशिक सम्पत्ति तथा दायित्व क्रमशः १५.३ प्रतिशत र २०.५ प्रतिशतले बढेको थियो । यसरी २०५८ फाल्गुणमा खुद वैदेशिक सम्पत्ति गत वर्षको सोही अवधिको १४.४ प्रतिशत वृद्धिको तुलनामा २.१ प्रतिशतले ह्रास भई रु. ८५ अर्ब ९३ करोड रहेको छ ।

## विनिमय दर

६.१२ गत आर्थिक वर्षमा जस्तै चालु आर्थिक वर्षमा पनि नेपाली रुपैयाँ मुख्य अन्तर्राष्ट्रिय मुद्राहरुसंग केही अवमूल्यन भएको छ । २०५८ आषाढको तुलनामा फाल्गुणमा नेपाली मुद्रा अमेरिकी डलरसँग ३.५ प्रतिशतले अवमूल्यन भएको छ जुन गत आर्थिक वर्षको सोही अवधिमा ४.४ प्रतिशतले अवमूल्यन भएको थियो । यसै अवधिमा नेपाली रुपैयाँ स्टर्लिङ्ग पाउण्डको तुलनामा ४.७ प्रतिशतले, यूरोसँग ५.६ प्रतिशतले र स्वीस फ्र्याङ्कसँग ८.३ प्रतिशतले अवमूल्यन भएको छ । जापानी येनसँगको विनिमय दरमा भने गत आर्थिक वर्षको जस्तै यस अवधिमा पनि २.७ प्रतिशतले पुनर्मूल्यन भएको छ ।

## चुनौतीहरु

६.१३ परिवर्त्य विदेशी विनिमय संचितिमा देखिएको क्रमिक ह्रासलाई दृष्टिगत गर्दा परिवर्त्य मुद्राको आर्जन वढाउन तेश्रो मुलुकतर्फको निर्यात, पर्यटन तथा अन्य सेवा र ट्रान्सफर आर्जन तथा अनुदान रकम वढाउनु पर्ने चुनौती वढ्न गएको छ ।

६.१४ समष्टिगत आर्थिक स्थायित्वलाई कायम राख्दै दिगो आर्थिक विकासको लक्ष्य पूर्तिमा ठोस योगदान पुग्ने गरी देशको आन्तरिक उत्पादन, औद्योगीकरण, वस्तु र सेवाको निर्यात तथा आयात र लगानीको प्रवर्द्धन गर्ने तर्फ राष्ट्रिय आर्थिक नीतिहरुको प्रभावकारी कार्यान्वयन गर्नु चुनौतीपूर्ण रहेको छ ।

६.१५ विश्व व्यापार संगठनमा नेपालको प्रवेशको सन्दर्भमा देशको औद्योगीकरण, राष्ट्रिय साधन-श्रोत-उत्पादन र क्षमता, अन्तर्राष्ट्रिय व्यापार र भुक्तानी तथा लगानी अभिवृद्धि जस्ता पक्षहरुमा अनुकूल प्रभाव पर्ने गरी राष्ट्रिय आर्थिक नीति, निर्णय र क्रियाकलापहरु अगाडि बढाउनु पर्ने चुनौती छ ।

# ७. गरीवी निवारण र रोजगारी

## गरीवी निवारण

७.१ नवौं योजनाले गरीवीको रेखामुनी रहेका ४२ प्रतिशत जनसंख्यालाई १० प्रतिशत विन्दुले घटाई ३२ प्रतिशतमा झार्ने लक्ष्य निर्धारण गरेको थियो । यसै अनुरुप गरीवी घटाउने उद्देश्य लिई विभिन्न आर्थिक तथा सामाजिक विकास कार्यक्रमहरु यस आर्थिक वर्ष २०५८।५९ मा पनि संचालनको क्रममा रह्यो ।

७.२ यस अनुरुप चालु आर्थिक वर्षमा आर्थिक सुधार कार्यक्रमहरु मार्फत आर्थिक बृद्धिदर बढाउने, कृषि क्षेत्रको सघनता, विविधिकरण र व्यावसायिकरणमा जोड दिने र उद्योग, पर्यटन, निर्माण, यातायात तथा सेवा जस्ता आर्थिक क्षेत्रहरुमा रोजगार एवं स्वरोजगारका आधारहरुको सिर्जना गर्ने प्रयासहरु गरिएका छन् । यस्तै दुर्गम क्षेत्र तथा कमजोर एवं उपेक्षित वर्गको लागि शिक्षा, स्वास्थ्य र खानेपानीसंग सम्वन्धित लक्षित कार्यक्रमहरु, सामाजिक परिचालन कार्यक्रमहरु, बिशेष क्षेत्र कार्यक्रमहरु, पिछडिएका महिलाहरुको सवलीकरण, जनसंख्याको बृद्धिदरलाई नियन्त्रण गर्ने जस्ता गरीवी निवारण उन्मुख कार्यक्रमहरु पनि कार्यान्वयनको विभिन्न चरणमा रहेका छन् ।

७.३ गरीवी निवारणको लागि श्री ५ को सरकारले आफ्नै स्रोत एवं वैदेशिक नियोग तथा संस्थाहरुको सहयोगमा विभिन्न लक्षित कार्यक्रमहरु जस्तै ग्रामीण पूर्वाधार विकास, लक्षित समूह (कमैया उत्थान), सहभागीतात्मक जिल्ला विकास कार्यक्रम, स्थानिय शासन कार्यक्रम, गाउँ नगर साझेदारी कार्यक्रम आदि कार्यक्रमहरु संचालन गरेको छ । गरीवी घटाउने तर्फ लक्षित गरिएका कार्यक्रमहरुलाई एकिकृत रुपमा संचालन गरी तिनीहरुको अनुगमन एवं मूल्यांकन कार्य समेतको लागि गरीवी निवारण कोषको व्यवस्था गरीएको छ । गरीवी निवारण कोष संचालन सम्वन्धी ऐनको मस्यौदा अन्तिम चरणमा रहेको छ ।

मन्जुषा ७ (१)

**गरीवी निवारणकोषको स्थापना**

श्री ५ को सरकारले गरीवी निवारण कोषको स्थापना गरेको छ। उक्त कोषको उद्देश्यहरु निम्नानुसार छन् :

१) गरीव व्यक्ति, परिवार वा समुदायलाई लक्षित गरी तिनीहरुको आर्थिक तथा सामाजिक स्तर उठाउन सामाजिक परिचालनका माध्यमबाट आवश्यक सेवा सुविधामा पहुँच बढाई उपयोग गर्न सक्ने र स्थानीय विकासको निर्णय प्रक्रियामा सक्रिय गराई आफ्नो अधिकार प्रयोग गर्न सक्ने क्षमता अभिवृद्धि गराउने,

२) आर्थिक तथा सामाजिक रुपले पिछडिएका र गरीवीको रेखामुनी रहेका व्यक्ति, परिवार तथा समुदायको पहिचान गरी तिनहरुको आर्थिक तथा सामाजिक स्तर माथि उठाउन क्षमता अभिवृद्धि तथा आर्थिक, सामाजिक र भौतिक पूर्वाधारका कार्यक्रम संचालन गर्ने/गराउने,

३) गरीवी निवारणका लागि राष्ट्रिय तथा अन्तर्राष्ट्रिय श्रोत समन्वयात्मक रुपमा गरीवी निवारणसंग सम्वन्धित निकायमार्फत परिचालन गराउने ।

७.४ गरीवी निवारण कार्यक्रमको एक प्रभावकारी माध्यमको रुपमा सामाजिक सशक्तिकरणबाट विपन्न वर्गका जनताको क्षमता बढाउनुका साथै आय आर्जनका कार्यक्रमहरुमा उनीहरुको संलग्नता बढाउन विभिन्न कार्यक्रमहरु संचालित छन् । महिला विकास कार्यक्रम अन्तर्गत महिलाहरुको समूह बनाई त्यसको संस्थागत विकास गर्ने, सामुहिक बचत र कर्जा लगानी गर्ने, सामुदायिक विकास, सामाजिक जागरणमा तिव्रता ल्याउने, विभिन्न आयमूलक व्यवसायिक एवं सीपमूलक तालिमहरु संचालन गर्ने, नेतृत्व विकास र प्रजनन् स्वास्थ्यमा सुधार ल्याउने कृयाकलापहरु संचालित हुँदै आएको छ ।

७.५ ग्रामीण सामुदायिक पूर्वाधार विकास कार्यक्रम अन्तर्गत खाद्य सुरक्षा कार्यक्रमवाट दाङ, बाँके, वर्दिया, कैलाली र कन्चनपुर जिल्लाहरुमा मुक्त कमैया परिवारहरुको खाद्यान्न पहुँच स्थितिमा सुधार ल्याउन मुक्त कमैयाहरुको संलग्नतामा पूर्वाधारजन्य आयोजनाहरु संचालन भईरहेका छन् । मुक्त कमैया पुनर्स्थापना कार्यक्रम अन्तर्गत ५ जिल्लाका करीव ९ हजार घरबार विहीन मुक्त कमैयाहरुले ५ कट्ठा सम्म जग्गा र रु. १० हजार रकम प्राप्त गरी घर निर्माण प्रारम्भ गरेका छन् । अन्य सामाजिक परिचालन कार्यक्रमहरु संचालित छन् । यस कार्यक्रम अन्तर्गत चालु आर्थिक वर्षको प्रथम आठ महिनाको अबधिमा ग्रामीण सडक निर्माण तथा पुनः निर्माण समेत गरी २०८ कि.मी., घोडेटो वाटो १४.७ कि.मी., साना सिंचाई ८.६५ कि.मी., नदी नियन्त्रण तर्फ १.६५ कि.मी. र माछा पोखरी १२.५ हेक्टरमा सम्पन्न भएको छ ।

७.६ दुर्गम क्षेत्र एवं विशेष क्षेत्र विकास कार्यक्रम अन्तर्गत अधिराज्यको विभिन्न दुर्गम जिल्लाहरुमा खानेपानी, साना सिंचाई, झोलुंगे पुल, विद्युतीकरण, घोडेटो, मोटर वाटो तथा विभिन्न प्राविधिक, आय बृद्धि, स्तर बृद्धि कार्यक्रमहरु संचालन भएका छन् । चालु आर्थिक वर्षको समीक्षा अवधिमा घोडेटो/मोटर वाटो ३० कि.मी. को कार्य सम्पन्न भएको छ भने ६ वटा खानेपानी योजना, १५ वटा झोलुंगे पुल र ६ वटा सिंचाईको निर्माण कार्य अधिकांश सम्पन्न अवस्थामा छ । पश्चिम तराईका नवलपरासी, रुपन्देही, कपिलबस्तु, दाङ, बाँके, वर्दिया, कैलाली र कन्चनपुर गरी ८ जिल्लाहरुमा संचालित पश्चिम तराई गरीवी निवारण परियोजना अन्तर्गत जिल्ला स्तरमा कृषि, पशुसेवा विकास र सीपमूलक तालिम, सामुदायिक विकास कार्यक्रम, कर्जा सेवा र समूहगत स्यालो ट्युववेल कार्यक्रमहरु संचालन गरिएका छन् । ग्रामीण पूर्वाधार विकास कार्यक्रम, ग्रामीण पहुँच कार्यक्रम, स्थानीय विकास निर्माण एवं कृषि सडक कार्यक्रमहरु संचालनमा छन् भने ग्रामीण पर्यटनको विकासद्वारा स्थानीय समुदायको गरीवी निवारणका लागि सशक्तिकरण गर्ने उद्देश्यले ग्रामीण गरीवी निवारणका लागि पर्यटन कार्यक्रम हालै संचालनमा आएको छ ।

७.७ विपन्न वर्गका जनताको क्षमता बृद्धिका साथै आय आर्जनका लागि सामुदायिक वन विकास कार्यक्रम अन्तर्गत २२४ समूह र कबुलियत वन विकास कार्यक्रम अन्तर्गत ४३ समूहहरुको गठन भईसकेको छ । यस्तै सूदुर पश्चिमाञ्चलका ९ जिल्लाहरुमा गरीवी निवारण व्यवसायोन्मुख वाखापालन कार्यक्रम र गरीवी निवारण व्यवसायोन्मुख कुखुरा पालन कार्यक्रम संचालन गरिएका छन् ।

७.८ ग्रामीण क्षेत्रमा रहेका गरीव समुहलाई लक्षित गरी आवश्यकीय आर्थिक स्रोतहरु उपलब्ध गरी आर्थिक कृयाकलापहरु क्रियाशिल गराउनको लागि सरकारी क्षेत्रबाट

साना किसान विकास आयोजना, ग्रामीण विकास वैंक, सघन वैंकिंग कार्यक्रमहरु संचालित छन् । आर्थिक बर्ष २०५७।५८ मा संचालित २४२ साना किसान विकास आयोजनाहरुबाट ४५७ गाउँ विकास समिति क्षेत्रका साना किसानहरुलाई सेवा उपलब्ध गराईएको थियो । यसै गरी कृषि विकास वैंकबाट हस्तान्तरित १०१ साना किसान सहकारी संस्थाले ३१ जिल्लाका १०१ गाउँ विकास समितिमा सेवा पुऱ्याएका थिए । आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा ५ वटा संस्था र अनुशरण कार्यक्रम अन्तर्गत ६ वटा गाउँ विकास समितिमा ६ वटा अनुशरण कार्यक्रम संचालन भएकोले संस्था र अनुशरण कार्यक्रम गरी कुल ११२ गाउँ विकास समितिहरुलाई कार्यक्रमले समेटेको छ । आर्थिक वर्ष २०५७।५८ सम्ममा साना किसान विकास आयोजना र साना किसान सहकारी संस्थाहरुबाट गठन गरिएका ३३ हजार २८८ समूहमा २ लाख २६ हजार ३०५ साना किसानहरु आवद्ध भएका छन् । उक्त आर्थिक वर्षमा साना किसान विकास आयोजनाहरुबाट रु. ४३ करोड २१ लाख लगानी भई रु. ३६ करोड ८१ लाख असूली भएको थियो । यसै गरी उक्त अवधिमा साना किसान सहकारी संस्थाहरुबाट ३९ करोड २३ लाख लगानी र २९ करोड ५२ लाख असूली भएको थियो । चालु आर्थिक वर्षको प्रथम आठ महिनामा साना किसान विकास आयोजनाहरुबाट रु. २२ करोड ६९ लाख लगानी भएको छ भने साना किसान सहकारी संस्थाहरुबाट रु. २३ करोड ४६ लाख लगानी भएको छ । यस्तै ग्रामीण क्षेत्रका विपन्न जनता खास गरी विपन्न महिलाहरुलाई आयमूलक क्रियाकलाप संचालन गर्नका लागि विना धितो कर्जा प्रदान गर्ने उद्देश्यले स्थापित ग्रामीण विकास वैंकहरुले २०५८ पौष मसान्तसम्ममा अधिराज्यका ४२ जिल्लाका ९४७ गाउँ विकास समितिहरुमा ४ हजार ५६३ केन्द्र मार्फत ३१ हजार ७७६ समूहका १ लाख ५८ हजार ७४० सदस्यहरुलाई विभिन्न कार्यक्रमहरु मार्फत प्रत्यक्ष फाइदा पुऱ्याएका छन् । समूहमा आवद्ध सदस्यहरु मध्ये १ लाख ४५ हजार १२० सदस्यहरुलाई २०५८ पौष मसान्तसम्ममा कुल रु. ५३३ करोड २१ लाख कर्जा वितरण गरेको छ ।

७.९ आर्थिक वर्ष २०५७।५८ मा कुल गार्हस्थ्य उत्पादनको (Factor Cost मा) वृद्धि ४.८ प्रतिशत र जनसंख्या वृद्धिदर २.२ प्रतिशत रहन गएको देखिएको हुँदा प्रति व्यक्ति कुल गार्हस्थ्य उत्पादन वृद्धि दर २.६ प्रतिशत रहेको छ । आर्थिक वर्ष २०५८।५९ को प्रारम्भिक अनुमान अनुसार कुल गार्हस्थ्य उत्पादनमा भएको तिव्र ह्रासले गर्दा वृद्धि दर केवल ०.८ प्रतिशत र जनसंख्या वृद्धि दर २.२ प्रतिशत रहन गएको हुँदा प्रति व्यक्ति कुल गार्हस्थ्य उत्पादन दर ऋणात्मक १.४ प्रतिशत रहन जाने देखिएको छ । नवौं योजना अवधिमा कुल गार्हस्थ्य उत्पादन ३.९ प्रतिशतले र जनसंख्याको वृद्धिदर २.२ प्रतिशतले वृद्धि भएको अनुमानको आधारमा प्रतिव्यक्ति आय १.७ प्रतिशतले मात्र वृद्धि हुने अनुमान छ ।

तालिका ७ (क) : कुल गार्हस्थ्य उत्पादन, जनसंख्या वृद्धिदर र प्रतिव्यक्ति आय वृद्धिदर

(प्रतिशतमा)

| | २०५४/५५ | २०५५/५६ | २०५६/५७ | २०५७/५८ | २०५८/५९ | नवौं योजना |
|---|---|---|---|---|---|---|
| कुल गार्हस्थ्य उत्पादन | ३.३ | ४.५ | ६.२ | ४.८ | ०.८ | ३.९ |
| जनसंख्या वृद्धिदर | २.२ | २.२ | २.२ | २.२ | २.२ | २.२ |
| प्रति व्यक्ति कुल गार्हस्थ्य उत्पादन वृद्धि दर | १.१ | २.३ | ४.० | २.६ | -१.४ | १.७ |

७.१० नवौं योजनाको प्रथम तीन वर्षको अवधिमा वार्षिक ०.९७६• प्रतिशतले गरीवी घटेको र प्रति व्यक्ति कुल गार्हस्थ्य उत्पादन २.१३ प्रतिशतले बढेको अनुमानको आधारमा गरीवी लोच -०.४६ प्रतिशत रहेको अनुमान गरिएको थियो । आर्थिक वर्ष २०५७।५८ मा प्रतिव्यक्ति कुल गार्हस्थ्य उत्पादनको वृद्धि दरमा भएको वृद्धि र २०५८।५९ मा प्रतिव्यक्ति कुल गार्हस्थ्य उत्पादनको वृद्धि दरमा आएको ह्रास समेत गणना गर्दा नवौं योजना अवधिमा प्रतिव्यक्ति आयको वार्षिक वृद्धिदर १.७ देखिएको छ । उक्त तथ्यांकको आधारमा नवौं योजना अवधिमा गरीवी घट्ने प्रवृत्ति जारी रहेको भएतापनि कार्यान्वयनमा रहेका कतिपय गरीवी निवारण सम्वन्धी कार्यक्रमहरुको प्रभावकारितामा ह्रास आएको कारणबाट गतवर्ष गरीवी घट्ने दर ०.९७६ प्रतिशतबाट योजना अवधिमा झरी ०.७८ पुग्न गएको अनुमान छ । यसबाट योजनाको अवधिमा गरीवीलाई १० प्रतिशत विन्दुबाट झार्ने लक्ष्य हासिल हुन नसकी गरीवीको संख्या ३८ प्रतिशतकै हाराहारीमा रहेको अनुमान छ ।

**मन्जुषा ७ (२)**

**गरीवी निवारण रणनीति पत्र**

विकासको उपलब्धिमा समान पहुँचको अवसर प्रदान गर्न, गरीवी निवारण र सामाजिक विकासको लागि तर्जुमा भएको गरीवी निवारण रणनीति पत्र मूलतः निम्न बुँदाहरुमा केन्द्रित छ :

- गरीवी अवस्थाको पहिचान
- विकास, आर्थिक स्थायित्व र गरीवी निवारणको लागि उपयुक्त वातावरणको सृजना
- सामाजिक उत्थान र गरीवलाई टेवा पुग्ने क्षेत्रगत नीति तथा कार्यक्रमहरुको तर्जुमा
- गरीवी निवारणको लागि साधनहरुको बाँडफाँट र परिचालन
- गरीवी अनुगमन र मूल्यांकन रणनीति

७.११ गरीवी निवारणको प्रभावकारितामा ह्रास हुनुमा शान्ति सुरक्षा स्थिति विकास अनुकूल हुन नसक्नु, आर्थिक बृद्धिदरमा अपेक्षित रुपमा वृद्धि हुन नसक्नु, सामाजिक तथा आर्थिक पूर्वाधारको न्यून विकास हुनु, गैर कृषि क्षेत्रको आयमा गरीवको पहुँच कम हुनु

• नवौं योजनाको प्रथम तीन वर्षको तथ्यांकको आधारमा गत वर्ष गरीवी घट्नेदर ०.९७६ (प्रतिव्यक्ति वार्षिक आय वृद्धिदर २.१३ प्रतिशत र गरीवी लोचकता ०.४६ को आधारमा (०.४६X२.१३=०.९७६३) रहने अनुमान गरिएको थियो । आर्थिक वर्ष २०५८।५९ मा प्रति व्यक्ति आय १.४४ प्रतिशतले घटेको अनुमानमा गरीवी घटने दर (०.४६X१.७४) ०.७८ मा झरेको अनुमान छ ।

र परम्परागत संस्कार र संस्कृतिमा अनुकूल परिवर्तन नआउनु देखिएका छन् । यसै गरी जनसंख्या बृद्धिदर उच्च हुनु, सुशासन कायम हुन नसक्नु, सार्वजनिक खर्च व्यवस्थापन प्रभावकारी नहुनु, सेवा वितरण प्रणाली सशक्त हुन नसक्नु, लक्षित कार्यक्रमहरु प्रभावकारी हुन नसक्नु आदि अन्य कारणहरु रहेका छन् ।

## रोजगारी

७.१२ गरीवी निवारणको अपेक्षित लक्ष्य हासिल गर्न रोजगारीको अवसरहरुमा वृद्धि गरी पूर्ण वेरोजगार तथा अर्ध वेरोजगार श्रमशक्तिलाई रोजगारी दिलाउनु पर्ने हुन्छ । नवौं योजना अवधिमा पूर्ण वेरोजगार रहेका कुल श्रम शक्तिको ४.९ प्रतिशतलाई ४ प्रतिशतमा र अर्ध वेरोजगारीको स्थितिमा रहेका ४७ प्रतिशतलाई ३२ प्रतिशतमा झार्ने लक्ष्य लिइएको छ ।

७.१३ यस लक्ष्य प्राप्तिको लागि अति गरीव वर्ग केन्द्रित रोजगार कार्यक्रमहरुको संचालन, माग अनुरुप श्रम शक्तिको पहिचान गरी सोही अनुरुप जनशक्तिको विकास, विभिन्न क्षेत्रहरुमा उत्पादनशील रोजगारीका अवसरहरुको श्रृजना तथा पूँजी एवं उत्पादनशील साधनमा श्रमशक्तिको पहुँच वढाई स्वरोजगार प्रवर्द्धन जस्ता कार्यक्रमहरु संचालन गरी रोजगारीको स्थितिमा सुधार ल्याउने प्रयासहरु गरिएका छन् ।

७.१४ गरीव जनतालाई सरकारी तथा गैर सरकारी क्षेत्रका गरीवी निवारण कार्यक्रमहरु मार्फत सुलभ एवं लघुकर्जा वितरण भइरहेको कारण आय आर्जनका अवसरहरु वृद्धि हुँदै गएका छन् भने स्वरोजगारका अवसरहरुमा पनि वृद्धि हुदै गएको अनुमान छ । यस्तै सरकारले अवलम्वन गरेको आर्थिक उदारीकरण नीति अनुरुप निजी क्षेत्रको औद्योगिक, वैंकिङ्ग, वीमा, होटल, सहकारी, स्वास्थ्य, वायुसेवा, शैक्षिक क्षेत्रहरुमा सहभागिता वृद्धि भएकोले रोजगारीका थप अवसरहरु सृजना भएको छ । अर्को तर्फ ग्रामीण क्षेत्रमा ग्रामीण विकास वैंक तथा अन्य वैंकहरुको वैंकिङ्ग सेवा विस्तारबाट वित्तीय साधन उपलव्ध भई स्वरोजगारको लागि उपयुक्त वातावरणको श्रृजना एवं गैर सरकारी संस्थाहरुको गतिविधिबाट पनि वेरोजगारको समस्यालाई केही हदसम्म समाधान गर्न सकिएको छ । फलस्वरुप पूर्ण वेरोजगार र अर्ध वेरोजगारको स्थितिमा सुधार आएको छ ।

७.१५ राष्ट्रिय जनगणना, २०४८ र राष्ट्रिय जनगणना, २०५८ को नतिजा अनुसार रोजगारीको ढाँचामा उल्लेखनीय परिवर्तन आएको छ । आर्थिक रुपले सक्रिय जनशक्तिको तुलनात्मक विश्लेषण गर्दा राष्ट्रिय जनगणना, २०४८ को नतिजा अनुसार कृषि, मत्स्यपालन तथा वन क्षेत्रमा सक्रिय कुल जनशक्तिको ८१.२ प्रतिशत संलग्न रहेकोमा राष्ट्रिय जनगणना, २०५८ को नतिजा अनुसार यस क्षेत्रमा ६५.७ प्रतिशत संलग्न रहेको देखिएको छ । विभिन्न आर्थिक क्षेत्रमा संलग्न सक्रय जनशक्तिको संलग्नताको विश्लेषण गर्दा उत्पादन उद्योग क्षेत्रमा २.० प्रतिशतवाट वृद्धि भई ८.८ प्रतिशत र व्यापार, रेष्टुराँ तथा होटल क्षेत्रमा ३.५ प्रतिशतवाट वृद्धि भई ९.९ प्रतिशत पुगेकोछ । यसरी नै विद्युत, ग्याँस तथा पानीको क्षेत्र, निर्माणको क्षेत्र, यातायात, संचार तथा भण्डारको क्षेत्र र वित्त तथा घर जग्गाको क्षेत्रमा सक्रिय जनशक्तिको संलग्नतामा वृद्धि भएको छ भने सामुदायिक तथा सामाजिक सेवाहरुमा १०.२ प्रतिशतवाट घटेर ७.८ प्रतिशत पुगेको छ । राष्ट्रिय जनगणना, २०५८ को नतिजा अनुसार ७३ लाख ४०

हजार आर्थिक रुपले सक्रिय जनशक्ति रहेकोमा राष्ट्रिय जनगणना, २०५८ को नतिजा अनुसार ९९ लाख सक्रिय जनशक्ति रहेका छन् । यस अनुसार उक्त अवधिमा सक्रिय जनशक्ति प्रतिवर्ष सालाखाला ३ प्रतिशतका दरले वृद्धि भएको देखिएको छ । यस अनुसार २०४८ को नतिजा अनुसार आर्थिक रुपले सक्रिय जनशक्ति कुल जनसंख्याको ४० प्रतिशत रहेकोमा २०५८ को नतिजा अनुसार उक्त प्रतिशत वृद्धि भई ४३ प्रतिशत पुगेको छ । उक्त अवधिमा यसरी कुल जनसंख्याको वार्षिक वृद्धिदर २.२ प्रतिशत रहेको र आर्थिक दृष्टिले सक्रिय जनसंख्याको वार्षिक वृद्धिदर ३ प्रतिशत रहेको हुंदा श्रम बजारमा रोजगारीको लागि अधिकाधिक चाप परेको स्पष्ट संकेत देखा परेको छ ।

तालिका ७ (ख) : विभिन्न आर्थिक क्षेत्रमा संलग्न आर्थिक रुपले शक्रिय जनशक्तिको अनुपात (प्रतिशत)

| सि. नं. | आर्थिक श्रोतहरु | राष्ट्रिय जनगणना २०४८ को नतिजा अनुसार | | राष्ट्रिय जनगणना २०५८ को नतिजा अनुसार | |
|---|---|---|---|---|---|
| | | शक्रिय जनशक्ति | कुल जनशक्तिको अनुपातमा (%) | शक्रिय जनशक्ति | कुल जनशक्तिको अनुपातमा (%) |
| १ | कृषि, मत्स्यपालन तथा वन | ५९,६१,७८८ | ८१.२ | ६५,०४,६८९ | ६५.७ |
| २ | खानी | २,३६१ | - | १६,०४८ | ०.२ |
| ३ | उत्पादन उद्योग | १,५०,०५१ | २.० | ८,७२,२५३ | ८.८ |
| ४ | विद्युत, ग्याँस तथा पानी | ११,७३४ | ०.२ | १,४८,२१८ | १.५ |
| ५ | निर्माण | ३५,६५८ | ०.५ | २,८६,४१८ | २.९ |
| ६ | व्यापार, रेष्टुराँ तथा होटल | २,५६,०१२ | ३.५ | ९,८४,६६२ | ९.९ |
| ७ | यातायात, सञ्चार तथा भण्डार | ५०,८०८ | ०.७ | १,६१,६३८ | १.६ |
| ८ | वित्त तथा घरजग्गा | २०,८४७ | ०.३ | ७६,६८७ | ०.८ |
| ९ | सामुदायिक तथा सामाजिक सेवाहरु | ७,५२,०१९ | १०.२ | ७,६८,९१६ | ७.८ |
| १० | अन्य | २८,००४ | ०.४ | ५८,२७३ | ०.६ |
| ११ | क्षेत्र नखुलेको | ७०,२९८ | १.० | २२,३९५ | ०.२ |
| | कुल जम्मा : | ७३,३९,५८० | १००.० | ९९,००,१९६ | १०० |

*स्रोत :*

*१. स्ट्याटिष्टिकल पकेट बूक - सन् २०००, केन्द्रीय तथ्यांक विभाग ।*

*२. राष्ट्रिय जनगणना, २०५८ को नतिजा अनुसार ।*

७.१६ नवौं योजनाको मध्यावधि मूल्यांकनबाट आर्थिक वर्ष २०५६।५७ मा पूर्ण वेरोजगार श्रमशक्ति ३.३ प्रतिशत र अर्ध वेरोजगार श्रमशक्ति ४३.४ प्रतिशत रहेको देखिएको छ ।

तालिका ७ (ग) : पूर्ण वेरोजगार तथा अर्ध वेरोजगारको स्थिति

| विवरण | २०५३।५४ | २०५४।५५ | २०५५।५६ | २०५६।५७ |
|---|---|---|---|---|
| क) पूर्ण वेरोजगार संख्या | ३,६५,८७० | ४,१७,४०२ | ३,९७,२३० | ३,३९,९०१ |
| प्रतिशत | ३.७ | ४.२ | ३.९ | ३.३ |
| ख) अर्धवेरोजगार संख्या | ४३,८०,८१४ | ४३,८१,५५३ | ४३,८९,१२३ | ४३,८५,०२८ |
| प्रतिशत | ४६.३ | ४५.६ | ४४.७ | ४३.४ |

*श्रोत : राष्ट्रिय योजना आयोगको सचिवालय, नवौं योजनाको मध्यावधि मूल्यांकन, २०५८*

७.१७ वेरोजगार जनसंख्यामा आएको क्रमिक ह्रासबाट रोजगारीमा पनि क्रमिक वृद्धि भएको स्पष्ट छ । आर्थिक वर्ष २०५४।५५ मा रोजगार श्रमशक्ति ९४ लाख ५२ हजार रहेकोमा आर्थिक वर्ष २०५६।५७ मा ९८ लाख २८ हजार पुगेको छ । यस अनुरुप आर्थिक वर्ष २०५४।५५ को तुलनामा आर्थिक वर्ष २०५६।५७ मा करीव ४.० प्रतिशतले रोजगार श्रमशक्ति वृद्धि भएको देखिन्छ । आर्थिक वर्ष २०५७।५८ र २०५८।५९ मा पूर्ण वेरोजगार तथा अर्ध वेरोजगारको संख्या घटदै जाने प्रवृत्ति रहेको अनुमान छ ।

७.१८ श्री ५ को सरकार मुलुक भित्र तथा वाहिर रोजगारको अवसर सृजना गर्न प्रयत्नशिल रह्यो । मुलुक भित्र रहेको अर्ध वेरोजगार तथा वेरोजगार श्रमशक्तिलाई आवश्यक पर्ने प्रशिक्षण र सीप प्रदान गरी रोजगार तथा स्वरोजगारका अवसरहरु उपलव्ध गराउन श्रम विभाग अन्तर्गत रहेका १४ वटा सीप विकास तालिम केन्द्र तथा दुई वटा व्यावसायिक प्रशिक्षण केन्द्रहरु मार्फत रोजगार एवं स्वरोजगारको लागि उपयुक्त प्रशिक्षणहरु संचालन गरिएका छन् । यसै क्रममा इलेक्ट्रोनिक्स, प्लम्बिङ्ग, वेल्डिङ्ग, कार्पेन्ट्री, अटोमेकानिक्स लगायतका विभिन्न २७ वटा क्षेत्रहरुमा नियमित रुपमा प्रशिक्षण संचालन गरिएका छन् । आर्थिक वर्ष २०५७।५८ मा श्रम बजारमा माग रहेका विभिन्न सीपमूलक तथा व्यवसायिक विषयहरुमा ५ हजार ८३५ जनालाई प्रशिक्षण दिइएको थियो भने चालु आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा विभिन्न २६ वटा सीपयुक्त तथा व्यवसायिक विषयहरुमा ३ हजार १०७ जनालाई प्रशिक्षण दिइएको छ । घरेलु तथा साना उद्योग विकास समितिबाट आर्थिक वर्ष २०५७।५८ मा सीप विकास, उद्यमी विकास र व्यवस्थापन प्रशिक्षण ११ हजार ३८९ जनालाई दिइएको थियो भने आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा ४ हजार ८७१ जनालाई प्रशिक्षण दिइएको छ ।

७.१९ यसरी नै प्राविधिक शिक्षा तथा व्यवसायिक तालिम परिषदले चालु आर्थिक वर्षको प्रथम आठ महिनामा विभिन्न विषयहरुमा ८ हजार ७१ जनालाई व्यवसायिक तथा सीपमूलक प्रशिक्षण दिएको छ भने नेपाल पर्यटन तथा होटल व्यवस्थापन प्रतिष्ठानले समीक्षा अवधिमा ६९६ जनालाई र हालसम्ममा कुल १६ हजार ९९३ जनालाई प्रशिक्षण प्रदान गरिसकेको छ । यस्तै महिला विकास कार्यक्रम अन्तर्गत संस्थागत विकास, अभिलेख व्यवस्थापन, लेखा व्यवस्थापन जस्ता विभिन्न आयमूलक, व्यवसायिक एवं सीपमूलक प्रशिक्षणहरु संचालन गरिएको छ । केन्द्रले चालु आर्थिक वर्षको समीक्षा अवधिमा आर्थिक विपन्नता र निरपेक्ष गरीवीको रेखामुनी रहेका १०३ महिलाहरुलाई सिलाई कटाई तालिम दिएको छ । स्वरोजगारको माध्यमबाट अपांगहरुलाई आत्मनिर्भर वनाउने कार्यको लागि विना धितो ऋण कार्यक्रम अगाडी वढाइएको छ ।

७.२० स्वदेशी तथा वैदेशिक रोजगारका संभावनाहरुलाई समेटेर रोजगारमूलक सीप विकास तथा अन्य प्रवर्द्धनात्मक कार्यक्रमहरुलाई समन्वयात्मक तरिकाले संचालन गर्ने गराउनेमा रोजगार प्रवर्द्धन आयोगले समन्वयकर्ता एवं सहजकर्ताको भूमिका निर्वाह गरी आएको छ । यस आयोगले रोजगारमूलक कार्यक्रमहरुलाई उपलब्धीमूलक तुल्याउनको लागि आर्थिक वर्ष २०५८।५९ को समीक्षा अवधिमा विभिन्न कार्यक्रमहरु संचालन गरेको छ । जसमध्ये रोजगारमूलक सीप विकास सम्वन्धी अध्ययन, सीपमूलक तालिम लिएका व्यक्तिहरुको रोजगारी स्थिति वारे तथ्यांक संकलन, वैदेशिक रोजगार प्रवर्द्धन, श्रम बजार सूचना प्रणाली तथा सूचना प्रविधिमा आधारित मेडिकल ट्रान्सक्रिप्सन तालिम पर्दछ । पश्चिमाञ्चल, मध्यमाञ्चल र पूर्वाञ्चलका १ हजार ३५० वेरोजगारलाई आयोगको सहयोगमा नौ महिना अवधिको ट्रान्सक्रिप्सन तालिम दिइएको छ ।

## बैदेशिक रोजगारी

७.२१ हालका वर्षहरुमा वैदेशिक रोजगारीमा भईरहेको वृद्धिले गर्दा पूर्ण वेरोजगारी र अर्ध वेरोजगारीको स्थितिमा केही सुधारका संकेतहरु देखिएका छन् । आर्थिक वर्ष २०५७।५८ मा संस्थागत रुपमा ५५ हजार २५ जनालाई वैदेशिक रोजगारमा जाने स्विकृति प्रदान गरिएको थियो । चालु आर्थिक वर्षको चैत्र मसान्तसम्ममा ७७ हजार ३८८ जनालाई वैदेशिक रोजगारमा जाने स्वीकृति प्रदान गरिएको छ । वैदेशिक रोजगारको लागि जाने प्रमुख मुलुकहरुमा मलेशिया, साउदी अरेवीया, संयुक्त अरव इमिरेट्स र दक्षिण कोरीया रहेको देखिन्छ । राष्ट्रिय जनगणना २०५८ को नतिजा अनुसार कुल ७ लाख भन्दा बढी नेपालीहरु विभिन्न मुलुकहरुमा जाने गरेको देखिएको छ । यस मध्ये करिव ९६ प्रतिशत रोजगारकै सिलसिलामा विदेशमा रहेको देखिएको छ ।

तालिका ७ (घ) : राष्ट्रिय जनगणना, २०५८ को नतिजा अनुसार विदेश जानेको संख्या
(कुल संख्याको १ प्रतिशत भन्दा माथिको मुलुकहरु मात्र)

| मुलुक | संख्या | प्रतिशत |
|---|---|---|
| भारत | ५,८९,०५० | ७७.३ |
| साउदी अरेवीया | ६७,४६० | ८.८ |
| कतार | २४,३९७ | ३.२ |
| हङकङ | १२,००१ | १.७ |
| संयुक्त अरव इमिरेट्स | १२,५४४ | १.६ |
| अमेरिका, क्यानाडा र मेक्सीको | ९,५५७ | १.२ |
| अन्य मुलुकहरु | ४७,१७२ | ६.२ |
| कुल जम्मा | ७,६२,१८१ | १००.० |

७.२२ व्यवसायिक तथा सीपमूलक तालिमले रोजगारी दिलाउनमा सघाउ पुर्‍याउने भएता पनि तालिम प्राप्त सवैले रोजगारी पाउन भने सकेको देखिंदैन । आर्थिक वर्ष २०५५।५६ देखि आर्थिक वर्ष २०५७।५८ को अवधिमा सरकारी निकायबाट सीपमूलक तालिम लिने कुल प्रशिक्षार्थी ६० हजार ५०० मध्ये २० हजार २५२ जना अर्थात ३३ प्रतिशतले रोजगारीको अवसर पाएको देखिन्छ ।

तालिका ७ (ङ) : सीपमूलक तालिम प्राप्त गरेका व्यक्तिहरुको संख्या र रोजगारीको स्थिति
(आर्थिक वर्ष २०५५।५६-२०५७।५८)

| क्र. सं. | विकास क्षेत्र | कुल प्रशिक्षार्थी संख्या | रोजगारीको संख्या* | कैफियत |
|---|---|---|---|---|
| १. | पूर्वाञ्चल | १४१८३ | ६०७७ | इलाम जिल्लाबाट प्राप्त नभएको, झापाबाट आंशिक प्राप्त भएको |
| २. | मध्यमाञ्चल | २२७४६ | ६३२३ | सबै जिल्लाबाट प्राप्त |
| ३. | पश्चिमाञ्चल | १२६४१ | ४२६२ | स्याङ्जा जिल्लाबाट प्राप्त नभएको |
| ४. | मध्यपश्चिमाञ्चल | ४८७७ | २०३६ | जुम्ला, मुगु र सल्यान जिल्लाबाट प्राप्त नभएको, हुम्ला र बर्दियाबाट आंशिक प्राप्त भएको |
| ५. | सुदूरपश्चिमाञ्चल | ६०५३ | १५५४ | सबै जिल्लाबाट प्राप्त |
| | जम्मा | ६०५०० | २०२५२ | |

*रोजगारी संख्यामा ज्याला रोजगारी तथा स्वरोजगारी संख्यालाई पनि समावेश गरिएको छ ।
श्रोत : रोजगार प्रवर्द्धन आयोग ।

७.२३ संक्षेपमा भन्नु पर्दा गरीवी निवारण तथा रोजगार प्रवर्द्धन सम्वन्धी कार्यक्रमहरुको आधारमा निम्न स्थिति रहेको देखिएको छ :-

क) गरीवी निवारणलाई केन्द्र विन्दु बनाई संचालित कार्यक्रमहरुबाट सहभागिहरुको गरीवी घटाउनमा योगदान पुऱ्याउन सकेको देखिएको छ ।

ख) सामाजिक परिचालनको माध्यमबाट व्यापक जनसहभागिता र जनचेतना अभिवृद्धि हुन गई गरीवी निवारण प्रयासमा सकारात्मक प्रभाव पारेको देखिएको छ ।

ग) रोजगार प्रवर्द्धनका लागि आवश्यक सीप तथा उद्यमशिलता विकासको लागि सरकारी, गैर सरकारी र निजी क्षेत्रबाट समेत सीपमूलक प्रशिक्षण कार्यक्रमहरु संचालन गरिएकोले श्रम बजारमा माग भए अनुरुपको दक्ष तथा अर्ध दक्ष श्रम शक्तिको संख्यामा वृद्धि भई वेरोजगारको संख्यामा क्रमिक ह्रास आएको देखिएको छ ।

घ) स्वरोजगारको लागि स्रोत र साधन, सीप तथा बजार संयन्त्रमा पहुँच बढाउन सके गरीवी निवारणमा अनुकूल प्रभाव पर्ने दृष्टिकोणले संचालित कार्यक्रमहरुलाई सीप, साधन र स्रोतसंग आवद्ध गरी अघि बढाइएबाट स्वरोजगारको संख्यामा वृद्धि भएको अनुमान गरिएको छ ।

## चुनौतीहरु

७.२४ गरीवी निवारणका लक्षित कार्यक्रमहरु दुर्गम एवं विकट हिमाली क्षेत्रमा पर्याप्त संख्यामा पुग्न सकेको देखिंदैन । अति गरीवको संख्या यी नै क्षेत्रमा बढी हुने भएकोले गरीवी निवारण सम्वन्धी लक्षित कार्यक्रमहरुको विस्तार एक चुनौतीको रुपमा रहेको छ ।

७.२५ सरकारी, गैर सरकारी संस्थाहरु र नागरिक समाजको सहभागितामा संचालित कार्यक्रमहरुको प्रतिफलको उपभोग अत्यधिक मात्रामा लक्षित समूहले गर्न नसकेको देखिएको हुँदा ती लक्षित समूहले प्रत्यक्ष रुपले लिन सक्ने गरी आर्थिक तथा सामाजिक विकास कार्यक्रमहरुको लाभ व्यवस्थापन चुनौतीपूर्ण रहेको छ ।

७.२६ स्वरोजगार अभिवृद्धिका लागि लघु कर्जा एक प्रभावकारी संयत्र भएको देखिएको हुँदा लघु कर्जा कार्यक्रमहरु संस्थागत गर्दै विस्तार गर्नु चुनौतीपूर्ण रहेको छ ।

७.२७ रोजगारी अभिवृद्धिको लागि आर्थिक वृद्धि हुनु एक पूर्व शर्त रहेको हुँदा बढ्दो रुपमा रोजगारमूलक आर्थिक गतिविधीहरुले प्रश्रय पाउनु पर्ने र हालको उत्पादकत्व स्तरलाई वृद्धि गर्न सहायक हुने उच्चत्तम रोजगारीको श्रृजना गर्नु चुनौतीपूर्ण रहेको छ ।

७.२८ उत्पादकत्व वृद्धि गर्नमा योगदान पुऱ्याउने गरीवी निवारणमुलक प्रविधिको खोज, पहिचान र उपयोग गरी यस्ता प्रविधिको विस्तार अति बिकट र दुर्गम क्षेत्रसम्म पुऱ्याँउदै रोजगारमुखी आर्थिक वृद्धि गर्नु चुनौतीपूर्ण हुदै आएको छ ।

# ८. कृषि

**<u>उत्पादन स्थिति :</u>**

८.१ आर्थिक वर्ष २०५६।५७ को तुलनामा आर्थिक वर्ष २०५७।५८ मा देशको प्रमुख खाद्यान्न वालीको उत्पादन २.६ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षको उत्पादनमा १.१ प्रतिशतले मात्र वृद्धि भई कुल उत्पादन ७२ लाख ४७ हजार मे. टन पुग्ने अनुमान छ । प्रमुख खाद्यान्न वालीले ढाकेको क्षेत्रफलमा भने गत आर्थिक वर्षको तुलनामा चालु आर्थिक वर्षमा ०.५ प्रतिशतले ह्रास भई ३२ लाख ९६ हजार हेक्टर रहने अनुमान रहेको छ । हिउँदे वालीको लागि मौसम अनुकुल रही रोग किराको प्रकोप नगन्य हुनु तथा कृषि सामाग्रीको सुलभ आपूर्ति एवं उत्पादकत्वमा भएको सुधारले गर्दा क्षेत्रफलमा कमी आउँदा समेत उत्पादनमा वृद्धि हुन गएको छ ।

८.२ प्रमुख नगदे वालीको उत्पादन अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा ७.३ प्रतिशतले वृद्धि भएको छ । चालु आर्थिक वर्षमा प्रमुख नगदे वालीको उत्पादनमा २.८ प्रतिशतले वृद्धि भई ३७ लाख ८३ हजार मे. टन उत्पादन हुने तथा नगदे वालीले ढाकेको क्षेत्रफलमा ०.३ प्रतिशतले मात्र वृद्धि भई ३ लाख ९३ हजार हेक्टर पुग्ने प्रारम्भिक अनुमान रहेको छ ।

८.३ कृषि उत्पादनमा महत्वपूर्ण योगदान दिने दलहन, फलफूल एवं तरकारी जस्ता अन्य वालीहरुको उत्पादन अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा ९.६ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षमा ३.२ प्रतिशतले मात्र उत्पादन वृद्धि भइ २४ लाख ५९ हजार मे. टन पुग्ने अनुमान रहेको छ ।

८.४ आर्थिक वर्ष २०५७।५८ मा मुख्य कृषि वालीहरुको उत्पादनमा खाद्यान्न वालीहरुको अंश ६६.१ प्रतिशत र नगदे वालीहरुको अंश ३३.९ प्रतिशत रहेकोमा चालु आर्थिक वर्षमा खाद्यान्न वालीको अंश ६५.६ प्रतिशत तथा नगदे वालीको अंश ३४.४ प्रतिशत रहने अनुमान छ । त्यस्तै कुल वाली लगाइएको क्षेत्रफल मध्ये आर्थिक वर्ष २०५७।५८ मा खाद्यान्न वालीले ढाकेको क्षेत्रफलको अंश ८९.४ प्रतिशत तथा नगदे वालीले

ढाकेको क्षेत्रफलको अंश १०.६ प्रतिशत रहेकोमा चालु आर्थिक वर्षमा उक्त वालीले ढाकेको क्षेत्रफल यथावत रहेको अनुमान छ ।

८.५ चालु आर्थिक वर्षमा कृषि सघनता (Cropping intensity) १६८ प्रतिशत रहने अनुमान रहेको छ ।

८.६ आर्थिक वर्ष २०५६।५७ मा ४३ लाख ८३ हजार ४४३ मे. टन खाद्यान्नको आवश्यकता भई ४४ लाख ५१ हजार ९३९ मे. टन खाद्यान्न आपूर्ति भएकोमा आर्थिक वर्ष २०५७।५८ मा ४४ लाख ३० हजार १२८ मे. टन खाद्यान्नको आवश्यकता भई ४५ लाख १३ हजार १७९ मे. टन खाद्यान्न आपूर्ति भएको अनुमान छ ।

८.७ आर्थिक वर्ष २०५६।५७ मा प्रतिव्यक्ति तरकारीको उपभोग ५५ के.जी. भएकोमा ०५७।५८ मा ५९ के.जी. रहेको अनुमान छ ।

## मुख्य खाद्यान्न वालीको उत्पादन स्थिति :

८.८ धान : अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा धानको उत्पादन ४.६ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षमा धानको उत्पादनमा १.२ प्रतिशतले कमि आई ४१ लाख ६५ हजार मे. टन मात्र उत्पादन हुने पूर्वानुमान रहेको छ । उत्पादकत्व गतसालको तुलनामा १.५ प्रतिशतले वृद्धि भई प्रति हेक्टर उत्पादकत्व २.७४ मे. टन पुग्ने अनुमान छ । धानवाली लगाइएको क्षेत्रफलमा भने गत सालको तुलनामा चालु आर्थिक वर्षमा २.७ प्रतिशतले कमि आउने पूर्वानुमान रहेको छ । २०५८ जेष्ठ, असार तथा श्रावण महिनामा पर्याप्त मात्रामा वर्षा नभएको कारणले पूर्वाञ्चलका केही क्षेत्रफलमा धान रोपाइं हुन नसक्नुका साथै लगाई सकेको धानवालीको उत्पादकत्वमा पनि ह्रास आएकोले समग्रमा धानको उत्पादनमा कमी आएको अनुमान छ ।

८.९ मकै : अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा मकैको उत्पादन २.७ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षको मकैको उत्पादनमा १.८ प्रतिशतले वृद्धि भई १५ लाख ११ हजार मे. टन उत्पादन हुने अनुमान रहेको छ । उत्पादकत्वमा पनि गत सालको तुलनामा १.७ प्रतिशतले वृद्धि भई चालु आर्थिक वर्षमा १.८३ मे. टन प्रति हेक्टर उत्पादन पुग्ने अनुमान रहेको छ । मकैवाली लगाइएको क्षेत्रफलमा भने गत सालको तुलनामा ०.२ प्रतिशतले मात्र वृद्धि हुने अनुमान रहेको छ ।

८.१० गहुँ : अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा गहुँको उत्पादनमा २.२ प्रतिशतले कमी आएकोमा चालु आर्थिक वर्षको उत्पादनमा ८.६ प्रतिशतले वृद्धि भई १२ लाख ५८ हजार मे. टन गहुँ उत्पादन हुने अनुमान रहेको छ । उत्पाकत्वमा गत सालको तुलनामा ४.४ प्रतिशतले वृद्धि भई १.८८ मे. टन प्रति हेक्टर उत्पादन रहने अनुमान छ । वाली लगाइएको क्षेत्रफल पनि गत सालको तुलनामा ४.१ प्रतिशतले वृद्धि भई ६ लाख ६७ हजार हेक्टर पुग्ने अनुमान रहेको छ । हिउँदे मौसमको अनुकुलताको कारण चालु आर्थिक वर्षमा गहुँको उत्पादनमा उल्लेख्य सुधार आउने अनुमान छ ।

८.११ जौ : अघिल्लो वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा जौ को उत्पादनमा ३.२ प्रतिशतले ह्रास आएकोमा चालु आर्थिक वर्षमा जौ को उत्पादनमा ३.३ प्रतिशतले वृद्धि

भई ३१ हजार मे. टन उत्पादन हुने अनुमान रहेको छ। जौ लगाइएको क्षेत्रफलमा भने परिर्वतन नहुने तथा उत्पादकत्वमा केही सुधार आउने अनुमान छ। तराईका जौ वाली लगाइएका क्षेत्रमा विविध नगदे वाली लगाइनाले कृषकहरु जौ वालीमा उत्साहित नभएको पाइएको छ।

८.१२ कोदो : अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा कोदोको उत्पादनमा ४.० प्रतिशतले ह्रास आएकोमा चालु आर्थिक वर्षको उत्पादनमा समेत ०.३ प्रतिशतले ह्रास आइ २ लाख ८२ हजार मे. टन मात्र कोदो उत्पादन हुने अनुमान छ। कोदो लगाएको क्षेत्रफलमा पनि गत सालको तुलनामा ०.८ प्रतिशतले कमि आउने अनुमान रहेको छ। क्षेत्रफल घट्ने क्रम तराई क्षेत्रमा तिव्र देखिन्छ।

## नगदे वालीको उत्पादन स्थिति

८.१३ उखु : अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा उखुको उत्पादन ५.२ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षमा १.६ प्रतिशतले मात्र वृद्धि भई उखुको उत्पादन २२ लाख ४८ हजार मे. टन पुग्ने प्रारम्भिक अनुमान छ। उखु वाली लगाइएको गत आर्थिक वर्षको क्षेत्रफलमा परिवर्तन नआउने तर उत्पादकत्वमा भने १.६ प्रतिशतले वृद्धि भई ३८.१ मे. टन प्रति हेक्टर रहने अनुमान छ।

८.१४ तेलहन : आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो वर्षको तुलनामा तेलहनको उत्पादनमा ७.३ प्रतिशतले वृद्धि भएको छ भने चालु आर्थिक वर्षमा तेलहनको उत्पादनमा २.३ प्रतिशतले वृद्धि भई १ लाख ३५ हजार मे. टन पुग्ने अनुमान रहेको छ। उक्त वाली लगाइएको क्षेत्रफलमा भने परिवर्तन नहुने तथा उत्पादकत्वमा २.८ प्रतिशतले वृद्धि भई उत्पादकत्व ०.७२ मे. टन प्रति हेक्टर रहने अनुमान छ।

८.१५ सूर्ती : आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा सूर्तीको उत्पादन ५.३ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षमा सूर्तिको उत्पादनमा २.५ प्रतिशतले घट्न गई ३ हजार ९ सय मे. टन मात्र रहने अनुमान छ। सूर्ती वाली लगाइएको क्षेत्रफल समेत २.५ प्रतिशतले घट्ने तथा उत्पादकत्वमा कुनै परिवर्तन नआउने अनुमान रहेको छ।

८.१६ आलु : अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा आलु उत्पादन ११ प्रतिशतले वृद्धि भएको छ भने चालु आर्थिक वर्षमा आलु उत्पादन ५ प्रतिशतले मात्र वृद्धि भई १३ लाख ८० हजार मे. टन पुग्ने अनुमान रहेको छ। आलुले ढाकेको क्षेत्रफलमा १.५ प्रतिशतले वृद्धि हुने तथा उत्पादकत्वमा भने ३.४ प्रतिशतले वृद्धि भई उत्पादकत्व १०.५३ मे. टन प्रतिहेक्टर रहने अनुमान रहेको छ।

८.१७ जुट : आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा जुटको उत्पादन ५ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षमा जुटको उत्पादन वृद्धि दर पूर्ववत रही उत्पादन १६ हजार १ सय मे. टन हुने अनुमान छ। त्यस्तै जुट वाली लगाइएको क्षेत्रफल तथा उत्पादकत्व समेत यथावत रहने अनुमान छ।

८.१८ चिया : देशको पूर्वी क्षेत्रमा व्यवसायिक रुपमा खेती गरिदै आएको चियाको उत्पादन आर्थिक वर्ष २०५६।५७ मा ५ हजार ८५ मे. टन भएकोमा आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा ३० प्रतिशतले वृद्धि भई ६ हजार ६२८ मे. टन भयो

भने चालु आर्थिक वर्षमा चियाको उत्पादनमा ५.६ प्रतिशतले मात्र वृद्धि आई कुल उत्पादन ७ हजार मे. टन पुग्ने अनुमान रहेको छ । गत आर्थिक वर्षमा १२ हजार हेक्टर क्षेत्रफलमा चिया खेती भएकोमा चालु आर्थिक वर्षमा चिया खेतीको क्षेत्रफलमा ४.२ प्रतिशतले वृद्धि भई १२ हजार ५ सय हेक्टरमा चिया खेती हुने अनुमान रहेको छ । चिया खेतीमा संलग्न कृषकको संख्या समेत ५ हजार ५ सय पुग्ने अनुमान छ ।

८.१९ कफि : देशको पश्चिमी क्षेत्रमा व्यवसायिक रुपमा खेती गरिदै आएको कफिको उत्पादन आर्थिक वर्ष २०५६।५७ मा ७२.४ मे. टन भएकोमा आर्थिक वर्ष २०५७।५८ मा ८८.७ मे. टन भयो भने चालु आर्थिक वर्षमा कफिको उत्पादन १.५ प्रतिशतले बढ्न गई कुल उत्पादन ९० मे. टन पुग्ने अनुमान रहेको छ । त्यस्तै कफि खेतीले ढाकेको क्षेत्रफलमा समेत चालु आर्थिक वर्षमा ६.१ प्रतिशतले वृद्धि भई ४५० हेक्टरमा कफि खेती हुने तथा यस व्यवसायमा ३ हजार कृषक संलग्न रहने अनुमान रहेको छ ।

८.२० यसरी आर्थिक वर्ष २०५७।५८ को तुलनामा २०५८।५९ मा प्रमुख खाद्यान्न तथा नगदे वालीहरुको उत्पादकत्व बढेको तथा वरावर रहेको देखिएको छ ।

तालिका ८ (क) : कृषि उत्पादनको उत्पादकत्व
उत्पादकत्व :- मे. टन प्रति हेक्टरमा

| उत्पादनहरु | आर्थिक वर्ष २०५७।५८ | आर्थिक वर्ष २०५८।५९ |
|---|---|---|
| **खाद्यान्न वालीहरु** | **१२२.७०** | **१२४.८२** |
| धान | २.७० | २.७४ |
| मकै | १.८० | १.८३ |
| गहुँ | १.८० | १.८८ |
| **नगदेवालीहरु** | **३१८.३६** | **३२५.७८** |
| उखु | ३७.४९ | ३८.१० |
| तेलहरु | ०.७० | ०.७२ |
| सूर्ति | १.०० | १.०० |
| आलु | १०.१८ | १०.५३ |
| जुट | १.४५ | १.४५ |

## अन्य वालीहरुको उत्पादन स्थिति :

८.२१ दलहन : आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा दलहनको उत्पादनमा २.५ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षमा २.९ प्रतिशतले वृद्धि भई कुल उत्पादन २ लाख ५० हजार मे. टन पुग्ने अनुमान रहेको छ ।

८.२२ फलफूल : आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा फलफूलको उत्पादनमा ८.९ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षमा ३ प्रतिशतले ह्रास आई ४ लाख ७३ हजार मे. टन मात्र उत्पादन हुने अनुमान रहेको छ । उत्पादनमा ह्रास आउनुमा फलफूल उत्पादनमा महत्वपूर्ण स्थान ओगटने आँपको नफल्ने वर्ष रहेको देखिएको छ ।

८.२३ तरकारी : आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा तरकारीको उत्पादनमा ११ प्रतिशतले वृद्धि भयो भने चालु आर्थिक वर्षमा ५.० प्रतिशतले मात्र वृद्धि भई १७ लाख ३६ हजार मे. टन पुग्ने अनुमान रहेको छ।

## मौसमी अवस्था

८.२४ यस वर्षको हिउँदे याममा अधिराज्यव्यापी रुपमा पर्याप्त वर्षा भएकोले समग्रमा मौसम अनुकूल रहेको छ । यही २०५८ पौषको अन्तिम हप्ता देखि फाल्गुणको तेश्रो हप्तासम्ममा अधिराज्यमा करिव ३९५ मी.मी. वर्षा भयो भने गत वर्षको सोही अवधिमा कुल वर्षा ४ मी.मी. मात्र भएको थियो।

## पशुजन्य उत्पादन स्थिति

८.२५ मासु : अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा मासु उत्पादन २.७ प्रतिशतले वृद्धि भयो भने चालु आर्थिक वर्षमा उत्पादन २.३ प्रतिशतले वृद्धि भई कुल मासु उत्पादन १ लाख ९९ हजार मे. टन पुग्ने अनुमान रहेको छ।

८.२६ दुध र दुग्ध पदार्थ : अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा दुध र दुग्ध पदार्थको उत्पादन २.५ प्रतिशतले वृद्धि भएको छ भने चालु आर्थिक वर्षमा सो उत्पादनमा ३.१ प्रतिशतले वृद्धि आई ११ लाख ५९ हजार मे. टन पुग्ने अनुमान रहेको छ।

८.२७ फुल : अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा फुलको उत्पादनमा ५.५ प्रतिशतले वृद्धि भयो भने चालु आर्थिक वर्षमा ६.१ प्रतिशतले वृद्धि भई ५३ करोड ८४ लाख २० हजार गोटा फुल उत्पादन हुने अनुमान रहेको छ।

८.२८ माछा : माछाको उत्पादन अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा ४.९ प्रतिशतले वृद्धि भएकोमा चालु आर्थिक वर्षमा ५.२ प्रतिशतले वृद्धि भई कुल उत्पादन ३५ हजार मे. टन पुग्ने अनुमान रहेको छ। कुल माछा उत्पादन मध्ये १७ हजार मे. टन माछा पोखरीबाट र १८ हजार मे. टन अन्य श्रोतबाट हुने अनुमान छ।

८.२९ गत सालसम्म कृषि उत्पादनको सूचकांकको आधार वर्ष २०४१।४२ भएकोमा यस आर्थिक वर्षमा आधार वर्ष परिवर्तन गरी २०५१।५२ मान्दा गत आर्थिक वर्षको कुल सूचकांक १२३.२४ भएकोमा चालु आर्थिक वर्षको सूचकांक १२५.४ भई सूचकांकमा १.७ प्रतिशत वृद्धि हुने अनुमान छ।

## रासायनिक मल, उन्नत विउ तथा किटनाशक औषधि :

८.३० रासायनिक मल : रासायनिक मलको आपूर्तिमा निजी क्षेत्रको सहभागिता बढेको कारण मलखादको सुलभ आपूर्तिले गर्दा यस वर्ष मलखादको सालाखाला प्रयोग दरमा वृद्धि भएतापनि कृषि सामाग्री संस्थानबाट भएको रासायनिक मलको आपूर्तिमा भने कमी आएको छ । अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा कृषि सामाग्री संस्थानबाट भएको रासायनिक मलको आपूर्तिमा ३६.६ प्रतिशतले कमी आएकोमा चालु आर्थिक वर्षमा जम्मा २३ हजार ६ सय मे. टन रासायनिक मल आपूर्ति हुने अनुमान गरिएको छ। आर्थिक वर्ष २०५७।५८ को प्रथम ८ महिनामा १२

हजार ३ सय मे. टन रासायनिक मल आपूर्ति भएकोमा चालु आर्थिक वर्षको प्रथम ८ महिनामा ११ हजार ५ सय मे. टन मात्र आपूर्ति भएको छ । चालु आर्थिक वर्षमा राष्ट्रिय मल नीति समेत सार्वजनिक गरी लागू गरिएको छ । रासायनिक मलको मूल्य तर्फ युरिया, डि.पि.ए. तथा पोटासको मूल्यमा केही कमी आएको छ भने सल्फेटको मूल्य समान रहेको छ ।

८.३१ उन्नत वीउ तथा किटनाशक औषधि : वीउ विजनमा निजी क्षेत्रको वढ्दो सहभागिता र राहत कार्यक्रम अन्तर्गत पनि अत्याधिक वीउ विजन वितरण भएको हुँदा उन्नत वीउको उपयोगमा वृद्धि भएको अनुमान छ । आर्थिक वर्ष २०५७/५८ मा कृषि सामाग्री संस्थानबाट २३१ मे. टन धान, ७ मे. टन मकै तथा १ हजार ६५६ मे. टन गहुँको उन्नत वीउ वितरण भएकोमा चालु आर्थिक वर्षको प्रथम आठ महिनामा २ हजार ६५० मे. टन गहुँको विउ वितरण भएको छ । गत वर्षको प्रथम ८ महिनामा १ मे. टन धान, ३ मे. टन मकै तथा १ हजार ३११ मे. टन गहुँको उन्नत वीउ बिक्री वितरण भएको थियो । कृषि सामाग्री संस्थानले किटनाशक औषधिको कारोवार नै वन्द गरेको छ ।

**मञ्जुषा ८ (१)**

**राष्ट्रिय मल नीति, २०५८**

१. मलको उपयोगमा वृद्धि ल्याउन नीतिगत सुधार तथा पूर्वाधार व्यवस्थित गर्ने ।
२. मलको कुशल एवं सन्तुलित प्रयोग गर्न एकिकृत वाली पोषण व्यवस्थापन प्रणालीलाई प्रवर्द्धन गर्ने ।
३. मल आयात तथा बिक्री वितरण कार्यलाई भरपर्दो, प्रतिस्पर्धी तथा पारदर्शी वनाउने
४. मलको मूल्य बजार प्रतिस्पर्धाबाट निर्धारण हुने।
५. संभाव्य खपतको करीव वीस प्रतिशत रासायनिक मल जगेडा मौज्दातको रुपमा संचित गर्ने ।
६. जिल्लामा मल वितरक तथा विक्रेताहरुको संजाल स्थापना गर्न अभिप्रेरित गर्ने ।
७. रासायनिक मल उद्योग अधिराज्य भित्रै स्थापना गर्न प्रोत्साहित गर्ने ।
८. छिमेकी मुलुकहरुको मल कारखानामा लगानी गर्न निजी तथा सहकारी क्षेत्रलाई प्रोत्साहित गर्ने ।
९. मलको गुणस्तर परीक्षण प्रणालीलाई प्रभावकारी तुल्याउन प्रयोगशालाहरुको स्थापना तथा सुदृढीकरण गर्ने ।

८.३२ सिंचाई : सिंचाई सम्वन्धि विकास आयोजनाहरु सरकारी स्तर तथा कृषि विकास वैंकबाट संचालन हुँदै आएकोमा आर्थिक वर्ष २०५७/५८ मा सरकारी आयोजनाहरुबाट २७ हजार २८२ हेक्टर र कृषि विकास वैंकबाट संचालन गरिएका सिंचाई आयोजनाहरुबाट २ हजार ३७९ हेक्टर गरि जम्मा २९ हजार ६६१ हेक्टर कृषि योग्य जमिनमा व्यवस्थित सिंचाई सुविधा पुग्न गएको छ । गत आर्थिक वर्षको प्रथम आठ महिनामा सरकारी स्तरबाट संचालित आयोजनाहरुबाट १ हजार ५३० हेक्टर तथा कृषि विकास वैंकबाट संचालित आयोजनाहरुबाट २०२ हेक्टर गरी जम्मा १ हजार ७३२ हेक्टर क्षेत्रफलमा थप सिंचाई सुविधा उपलव्ध भएकोमा चालु आर्थिक वर्षको सोही अवधिमा सरकारी स्तरका आयोजनाहरुबाट थप सिंचाई सुविधा उपलव्ध हुन सकेको छैन भने कृषि विकास वैंकबाट संचालित आयोजनाहरुबाट ३ हजार १७ हेक्टर भूमिमा थप सिंचाई सुविधा उपलव्ध भएको छ । चालु आर्थिक वर्षको अन्त्यसम्ममा सरकारी स्तरबाट ३९ हजार ५३९ हेक्टरमा तथा कृषि विकास वैंकबाट संचालित

आयोजनाहरुबाट ४ हजार ४८३ हेक्टर गरि जम्मा ४४ हजार २२ हेक्टर क्षेत्रफलमा थप सिंचाई सुविधा पुऱ्याउने लक्ष्य रहेको छ ।

८.३३ कुल कृषि योग्य जमिन २६ लाख ४२ हजार हेक्टर मध्ये १७ लाख ६६ हजार हेक्टर जमिनमा मात्र सिचाई सुविधा पुऱ्याउन सकिने संभावना रहेकोमा हालसम्म सिंचाई सुविधा पुऱ्याउन सकिने जमिनको करीव ४२ प्रतिशतले हुने क्षेत्रफल ११ लाख ४ हजार हेक्टरमा सिंचाई सुविधा पुऱ्याउन सकिएको देखिएको छ । त्यसमा पनि वर्षभरी नै सिंचाई सुविधा पुगेको क्षेत्रफल भने ४ लाख ५२ हजार हेक्टर रहेको अनुमान छ ।

८.३४ कृषि ऋण : कृषि व्यवसायमा संलग्न वित्तीय श्रोतको अभाव भएका ग्रामिण स्तरका जनताको जीवनस्तर उकास्न कृषि ऋणले महत्वपूर्ण स्थान ओगटेको सन्दर्भमा आर्थिक वर्ष २०५७/५८ मा कृषि विकास वैंकबाट ८ अर्व ३ करोड ६० लाख कृषि ऋण प्रवाह तथा ६ अर्व ६ करोड ३६ लाख कृषि ऋण असूली भै आर्थिक वर्षको अन्त्यमा १४ अर्व ८७ करोड ६६ लाख ऋण वक्यौता रहन गएको छ । आर्थिक वर्ष २०५७/५८ को प्रथम आठ महिनामा ४ अर्व ७५ करोड ५२ लाख ऋण लगानी भएकोमा चालु आर्थिक वर्षको सोही अवधिमा ५ अर्व २२ करोड ७२ लाख ऋण लगानी भई ऋण लगानीमा ९.९ प्रतिशतले वृद्धि भएको छ । कुल लगानी मध्ये सवैभन्दा बढी लगानी कृषि उद्योग, वेचविखन तथा गोदाम निर्माण क्षेत्रमा ४८.६ प्रतिशतले भएको छ भने सवभन्दा कम फलफूल खेती तर्फ ०.३ प्रतिशतले मात्र भएको छ ।

८.३५ साना किसान विकास आयोजना : कृषि विकास वैंक अन्तर्गत संचालित साना किसान विकास कार्यक्रम अन्तर्गत आर्थिक वर्ष २०५७/५८ मा २४२ वटा आयोजनाहरुबाट ४५७ गाँउ विकास समिति क्षेत्रका साना किसानहरुलाई सेवा उपलब्ध गराई सकिएको छ । उक्त अवधिमा वैंकबाट हस्तान्तरित १०१ साना किसान सहकारी संस्था लिमिटेडले ३१ जिल्लाका १०१ गाउँ विकास समितिमा सेवा पुऱ्याएका छन् । उपरोक्त कार्यक्रमहरुबाट गठन गरिएका ३३ हजार २८८ समूहमा २ लाख २६ हजार ३०५ साना किसानहरु आवद्ध भएका छन् । गत आर्थिक वर्षमा साना किसान विकास आयोजना तथा साना किसान सहकारी संस्थाहरुबाट क्रमशः रु. ४३ करोड २१ लाख तथा रु. ३९ करोड २३ लाख लगानी एवं रु. ३६ करोड ८१ लाख तथा रु. २९ करोड ५२ लाख असूली भएको छ । गत आर्थिक वर्षको अन्त्यसम्ममा यस्ता संस्थाहरुको लगानीमा रही रहेको रकम रु. ७७ करोड ८४ लाख रहेकोमा चालु आर्थिक वर्षको प्रथम आठ महिनामा साना किसान विकास आयोजनाहरुबाट रु. २२ करोड ६९ लाख लगानी भई रु. २० करोड ४४ लाख असूली भएको र साना किसान सहकारी संस्थाहरुबाट रु. २३ करोड ४६ लाख लगानी भई रु. १८ करोड ५० लाख असूली भएकोले चालु आर्थिक वर्षको प्रथम आठ महिनासम्ममा साना किसान विकास कार्यक्रम अन्तर्गत लगानीमा रही रहेको रकम रु. ९२ करोड ६९ लाख तथा साना किसान सहकारी संस्थाहरुबाट लगानीमा रही रहेको रकम रु. ८५ करोड ४५ लाख पुगेको छ । यस्ता संस्थाका सदस्य किसानहरुले समूह वचत स्वरुप रु. २४ करोड २६ लाख संकलन गरेका छन् ।

८.३६ कृषि अनुसन्धान परिषद : कृषि क्षेत्रका समस्याहरुको उच्च स्तरिय अध्ययन तथा अनुसन्धान गरी समस्या समाधानका उपायहरु पत्ता लगाई सर्वसाधारण जनताको आर्थिक स्तर वृद्धि गर्ने उद्देश्यले २०४८ सालमा स्थापित नेपाल कृषि अनुसन्धान परिषदले विभिन्न वालीमा परिक्षण गरी हालसम्म खेती गर्ने पूरा तौर तरिकाको प्याकेज

सहित ४३ वटा वालीका १८७ वटा विकासे जातहरु सिफारिस गरी सकेको छ भने परिक्षण गरिएका अन्य जातहरु सिफारिस हुने क्रममा रहेका छन् । एक पछि अर्को वाली लगाउने समय (Turn around time) घटाउन कम खर्चिलो प्रविधिहरुको परिषदले विकास गर्नुका साथै जुम्लाको अवस्थामा चीसो सहने र मरुवा (ब्लाष्ट) रोग नलाग्ने चन्दननाथ १ र चन्दननाथ ३ तथा काठमाण्डौ उपत्यकाको लागि मरुवा रोग नलाग्ने, बढी माटोको उर्वराशक्ति सहने, चीउराको गुणस्तर राम्रो हुने मन्जुश्री २ र खुमल ११ जस्ता धानवालीको जातहरु सिफारिस गरी सकेको छ । दिगो जीविका सुधारका लागि कृषि अनुसन्धानलाई केन्द्रीत गर्दै लगिने नीति रहेको छ ।

८.३७ कृषि उत्पादन आयात तथा निर्यात स्थिति : एस.आई.टी.सी. समूह अनुसार आर्थिक वर्ष २०५७।५८ को प्रथम आठ महिनामा रु. ३ अर्व ३० करोड ७४ लाख वरावरको खाद्य बस्तु तथा जीवजन्तु एवं सूर्ति तथा पेय पदार्थहरु निर्यात भएकोमा आर्थिक वर्ष २०५८।५९ को सोही अवधिमा रु. ३ अर्व ९६ करोड १२ लाख वरावरका उपरोक्त वस्तुहरु निर्यात भएको छ । त्यस्तै आर्थिक वर्ष २०५७।५८ को प्रथम आठ महिनामा रु. ४ अर्व ७३ करोड ६२ लाख वरावरको उपरोक्तवस्तुहरु आयात भएकोमा आर्थिक वर्ष २०५८।५९ को सोही अवधिमा रु. ५ अर्व १७ करोड २४ लाख वरावरका वस्तुहरु आयात भएको छ ।

८.३८ चालु नवौं योजना अवधिको उपलब्धिलाई हेर्दा आधारवर्ष २०५३।५४ को मुख्य खाद्यान्न वालीको उत्पादनको तुलनामा चालु आर्थिक वर्षमा उत्पादनमा १३.३ प्रतिशतले बृद्धि भइ उत्पादन ७२ लाख ४७ हजार मे. टन पुग्ने, प्रमुख नगदे वालीको उत्पादन ३५.२ प्रतिशतले वृद्धि आई कुल नगदे वालीको उत्पादन ३७ लाख ८३ हजार मे. टन पुग्ने र दलहन, फलफूल, एवं तरकारी जस्ता वालीको उत्पादनमा २२.९ प्रतिशतले बृद्धि भई कुल उत्पादन २४ लाख ५९ हजार मे. टन पुग्ने अनुमान रहेको छ ।

८.३९ नवौं योजना अवधिमा कृषि क्षेत्रको आर्थिक वृद्धिदर वार्षिक औषत ४.० प्रतिशत पुऱ्याउने लक्ष्य रहेकोमा २.९ प्रतिशतमात्र पुगेको अनुमान छ । कृषि क्षेत्रमा अपेक्षाकृत लगानी वढ्न नसक्नु, योजनाको पहिलो र चौथो वर्षमा मौसमको प्रतिकूलताले गर्दा कृषिमा उत्पादन वृद्धि कम हुनु, योजना अवधिको तेश्रो वर्षमा स्यालो ट्यूववेल सिंचाईमा अनुदान हटाइएपछि यसबाट आएको नकारात्मक प्रभावले सिंचाई विस्तारमा प्रतिकूल असर पर्नु जस्ता कारणले गर्दा अपेक्षाकृत रुपमा कृषि क्षेत्रको आर्थिक वृद्धिदर हासिल हुन नसकेको अनुमान छ ।

**चुनौतीहरु :**

८.४० सिंचाई विस्तारमा मन्दता हुनु, भएका सुविधालाई सामाजिक वस्तुको रुपमा लिईने परम्पराले गर्दा सिंचाई प्रणालीहरुको उचित मर्मत संभारमा कृषकको सहभागिता नहुनु, अप्रत्यासितरुपमा आउने वाढी पहिरोले सिंचाइ संरचना तथा सिंचित क्षेत्रमा क्षति पुग्नु जस्ता कारणहरुले कृषि क्षेत्रको मौसम माथिको निर्भरता विद्यमान रहेकोले कृषि वालीको उत्पादन तथा उत्पादकत्व वढन सकेको छैन भने सिंचित क्षेत्रमा समेत सघन कार्यक्रमहरु पर्याप्तरुपमा लान सकिएको छैन ।

८.४१ कृषिमा प्रयोग हुने उत्पादनका साधनहरु रासायनिक मल, उन्नत वीउ एवं विरुवाको आपूर्तिमा नीजि क्षेत्रलाइ सहभागी गराइएता पनि पर्याप्त आपूर्तिको व्यवस्था हुन

नसक्नुका साथै उपयुक्त मलखाद व्यवस्थापनबाट माटोको गुणस्तर कायम राखी उर्वरा वनाई राख्न रासायनिक मल प्रयोग हुने क्षेत्रको माटोको सूचना पद्धतिको विकास गराउन सकिएको छैन भने उन्नत नश्लको पशुहरुको आपूर्ति तथा कृत्रिम गर्भाधानमा समेत कमी देखिएको छ ।

८.४२ खुल्ला सिमानाको कारण छिमेकी मुलुकहरुवाट सस्तो मूल्यमा कृषि एवं पशुजन्य वस्तुहरुको आयात हुनु, कृषि सडक विस्तार हुन नसक्नुका साथै निकासीलाइ केन्द्र विन्दु वनाई उत्पादन पकेटहरुको विकास हुन नसकेको र कृषि वस्तुको निकासीमा समेत खासै वृद्धि हुन नसकेकोले कृषि उत्पादनमा भएको लगानीको उचित प्रतिफल प्राप्त नहुनाले दीर्घकालिन कृषि योजनाको अवधारणा अनुरुप लक्ष्य हासिल गर्न निजी क्षेत्रको लगानी तथा सहकार्यलाई आकर्षित गर्न नसकी कृषि पेशामा व्यवसायिकरण तथा प्रतिस्पर्धात्मक क्षमताको विकास गराउन नसक्नु चुनौतीको रुपमा रहेको छ ।

८.४३ नगदे वालीको रुपमा रहेको चिया तथा कफि खेतीको विस्तार गरी गुणस्तरयुक्त चिया तथा कफि उत्पादन गर्न यस सम्वन्धी अनुसन्धानको अभावलाई वर्तमान अवस्थामा टटकारो रुपमा अनुभव गरिएको छ ।

# ९. उद्योग, पर्यटन तथा सरकारी संस्थान

## समूहगत औद्योगिक उत्पादन स्थिति

९.१ आर्थिक वर्ष २०५७।५८ को प्रमुख औद्योगिक उत्पादनको स्थितिलाई विश्लेषण गर्दा अधिकांश खाद्य तथा पेय पदार्थहरुको उत्पादनमा वृद्धि भएको देखिन्छ । यस्तै छाला र छालाका सामान, काठ तथा काष्ठ वस्तु, कागज तथा स्टेशनरी वोर्ड, अन्य रासायनिक सामान, प्लाष्टिकका सामान, धातु वाहेकका खनिजजन्य वस्तु, फलाम तथा स्टीलका सामान, विद्युत उपकरण तथा सामान र औद्योगिक उपकरण आदिको उत्पादन अघिल्लो आर्थिक वर्षको तुलनामा यस आर्थिक वर्षमा वृद्धि भएको छ । उल्लेख्य रुपमा उत्पादन वृद्धि भएका केही वस्तुहरुमा चाउचाउ ४५२ मे. टन, विस्कुट ४५६ मे. टन, चिनी १ हजार १५७ मे. टन, चिया ८८७ मे. टन, वनस्पति घ्यू ६ हजार ६५३ मे. टन, सावुन ५ हजार ४५९ मे. टन, धुलो सावुन १४४ मे. टन, सिमेन्ट ९ हजार २६३ मे. टन रहेका छन् भने वियर १,६२९ हजार लीटर, चुरोट ३९५० लाख खिल्ली, सिन्थेटिक कपडा १,३३४ हजार मीटरले उत्पादन वृद्धि भएको छ । यस आर्थिक वर्षमा विंडी, सुती कपडा, जुटका सामान र रवरका सामानको उत्पादन न्यून अनुपातले घटेको देखिन्छ ।

९.२ चालु आर्थिक वर्ष २०५८।५९ मा केही प्रमुख औद्योगिक उत्पादनको स्थितिलाई हेर्दा गत आर्थिक वर्षको तुलनामा अधिकांश औद्योगिक उत्पादनहरु घट्ने अनुमान छ । आर्थिक वर्ष २०५७।५८ को तुलनामा चालु आर्थिक वर्षमा केही प्रमुख वस्तुहरुको उत्पादन मध्ये विस्कुट १४५ मे. टनले, वियर ५५४ हजार लीटरले, मदिरा १८५ हजार लीटरले, चुरोट ७९० लाख खिल्लीले, सुती कपडा ७८५ हजार मीटरले उत्पादन घट्ने

अनुमान छ । यस आर्थिक वर्षमा केही वस्तुहरुको उत्पादनमा वृद्धि हुने अनुमान पनि छ । उत्पादन वृद्धि हुने केही वस्तुहरुमा चाउचाउ ७२७ मे. टनले, चिनी ३ हजार ८८७ मे. टनले, चिया ४८८ मे. टनले, वनस्पति घ्यू ३ हजार ६३२ मे. टनले, सावुन ८१० मे. टनले, सिमेन्ट १७ हजार ९०२ मे. टनले वृद्धि हुने अनुमान गरिएको छ ।

## समूहगत औद्योगिक सूचकांक स्थिति

९.३ आर्थिक वर्ष २०५७/५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा समूहगत औद्योगिक सूचकांक (आधार वर्ष २०४३।४४=१००) ६.३ प्रतिशतले वृद्धि भएको छ । यस आर्थिक वर्षमा खाद्य समूहको सूचकांक ६.७ प्रतिशतले वृद्धि भएको छ । यसरी नै पेय पदार्थ समूहको सूचकांक ३.४ प्रतिशतले, सूर्तिजन्य पेय पदार्थको ५.८ प्रतिशतले, लत्ता कपडाको २.४ प्रतिशतले, छाला र छालाका सामानको ७.५ प्रतिशतले, काठ तथा काष्ठ वस्तुको ८.३ प्रतिशतले, कागज तथा स्टेशनरी वोर्डको ३.० प्रतिशतले, अन्य रासायनिक सामानको ६.६ प्रतिशतले, प्लाष्टिकका सामानको २.० प्रतिशतले, धातु वाहेकका खनिजजन्य वस्तुको ३.८ प्रतिशतले, फलाम तथा स्टीलका सामानको ३.५ प्रतिशतले, विद्युत उपकरण तथा सामान र औद्योगिक उपकरणको ७.८ प्रतिशतले र व्याट्री ८.० प्रतिशतले उत्पादन वृद्धि भएको देखिएको छ । रवरको सामानको भने २.० प्रतिशतले उत्पादन घटेको देखिन्छ । आर्थिक वर्ष २०५७।५८ मा उल्लेख्य रुपमा उत्पादन वृद्धि भएका केही वस्तुहरुको सूचकांकमा चिया १२.० प्रतिशतले, स्ट्रावोर्ड १४.० प्रतिशतले, सावुन ११.० प्रतिशतले, जुत्ता ९.१ प्रतिशतले, चाउचाउ ७.५ प्रतिशतले, वियर ७.५ प्रतिशतले र चुरोट ६.० प्रतिशतले वृद्धि भएको देखिन्छ ।

९.४ समूहगत औद्योगिक सूचकांक आर्थिक वर्ष २०५७।५८ को तुलनामा चालु आर्थिक वर्षमा कुल सूचकांकमा २.० प्रतिशतले बढ्ने अनुमान भएता पनि अधिकांश मुख्य मुख्य औद्योगिक उत्पादनहरुको सूचकांक घट्ने अनुमान गरिएको छ । अघिल्लो आर्थिक वर्षको तुलनामा यस आर्थिक वर्षमा पेय पदार्थको सूचकांक ३.५ प्रतिशतले घट्ने अनुमान गरिएको छ भने सूर्तिजन्य पेयको १.८ प्रतिशतले, छाला र छालाका सामानको १.६ प्रतिशतले, कागज तथा स्टेशनरी वोर्डको ०.६ प्रतिशतले घट्ने अनुमान छ । औद्योगिक सूचकांक बढ्ने केही वस्तुहरुमा चाउचाउ ११.२ प्रतिशतले, सिमेन्ट ८.३ प्रतिशतले, चिया ५.९ प्रतिशतले, धातु वाहेकका खनिजजन्य वस्तु ४.९ प्रतिशतले र जुत्ता ४.९ प्रतिशतले वृद्धि हुने अनुमान छ । औद्योगिक सूचकांक घट्ने केही वस्तुहरुमा सुती कपडा ३१.६ प्रतिशतले, विंडी ३४.५ प्रतिशतले, मदिरा ४.७ प्रतिशतले र वियर २.४ प्रतिशतले घट्ने अनुमान छ । औद्योगिक उत्पादनको सूचकांकमा न्यूनतम वृद्धि मात्र हुनुको प्रमुख कारणहरुमा उपभोगको संरचनामा आएको परिवर्तन, उपभोग क्षमतामा देखा परेको ह्रास, निर्यातको ढाँचामा परिवर्तन र आन्तरिक सामाजिक परिवेशलाई लिन सकिन्छ ।

## उद्योगमा विदेशी लगानी

९.५ देशको औद्योगिक प्रक्रियामा पूँजी, मानवीय एवं प्राकृतिक साधनको अधिकतम परिचालन गरी अर्थ व्यवस्थालाई सबल, गतिशिल एवं प्रतिस्पर्धात्मक वनाउन विदेशी लगानी एवं प्रविधि हस्तान्तरण आवश्यक छ । विदेशी लगानीबाट पूँजी, आधुनिक प्रविधि, व्यवस्थापन र प्राविधिक शिप, अन्तरराष्ट्रिय बजारमा पहुँच, प्रतिस्पर्धात्मक

व्यवसायीक संस्कारको विकास जस्ता साधन, श्रोत र व्यावसायिक गुणहरु राष्ट्रमा भित्रीन गई औद्योगिक विकास मार्फत देशको आर्थिक विकासमा महत्वपूर्ण भूमिका पुग्ने हुन्छ । आर्थिक वर्ष २०५७।५८ मा जम्मा आयोजना लागत रु. ७ अर्व ९० करोड १२ लाख भएका ९६ उद्योगहरु वैदेशिक लगानीमा स्थापना गर्न स्वीकृति दिएको थियो भने चालु आर्थिक वर्षको प्रथम एघार महिनामा (२०५९।१।२४ सम्ममा) रु. १ अर्व २२ करोड ८२ लाख स्थिर पूँजी भएका र रु. २ अर्व ७७ करोड ७५ लाख जम्मा आयोजना लागत भएको ५३ वटा उद्योगहरुलाई निजी विदेशी लगानीमा स्थापना गर्न अनुमति प्रदान गरिएको छ । यसरी समय सापेक्ष, व्यवहारिक उदार एवं खुल्ला नीतिको अवलम्वनद्वारा विदेशी लगानीलाई आकर्षित गर्ने प्रयास स्वरुप चालु आर्थिक वर्षको प्रथम एघार महिनासम्ममा वैदेशिक लगानीमा जम्मा ७४२ वटा उद्योग स्थापना गर्न स्वीकृति दिई सकिएको छ । अनुमति प्रदान गरिएका यी उद्योगहरुको जम्मा कुल स्थिर पूँजी र ६५ अर्व ८१ करोड ८७ लाख रहेको छ भने जम्मा कुल परियोजना लागत रु. ७८ अर्व ३३ करोड १७ लाख रहेको छ । यी उद्योगहरुमा कुल जम्मा रु. २० अर्व ५५ करोड ६३ लाख वैदेशिक लगानी भएको देखिन्छ । यी उद्योगहरु संचालनमा आए पछि ८७ हजार ५६९ जनाले थप रोजगारीको अवसर प्राप्त गर्ने छन् ।

९.६ आर्थिक वर्ष २०५७।५८ मा स्वीकृति दिइएका ९६ उद्योगहरु मध्ये ५४ वटा उद्योग औद्योगिक उत्पादन १९ वटा होटल र रिसोर्ट, १३ वटा सेवा उद्योग, ४ वटा विद्युत, खानेपानी र ग्यासको क्षेत्रसंग सम्वन्धित रहेका छन् भने ६ वटा यातायात तथा संचार, आवास, निर्माण तथा कृषि र वन क्षेत्रसंग सम्वन्धित छन् । मुलुकगत लगानीबाट हेर्दा ३७ वटा उद्योगमा भारत, १५ वटामा चीन, ८ वटामा जापान, ७/७ वटामा वेलायत र अमेरिका, ५ वटामा दक्षिण कोरिया, २/२ वटामा अष्ट्रिया, फिनलैण्ड, स्पेन र स्विजरलैण्ड तथा १/१ वटामा व्राजिल, वृटीश भर्जिनिया आइलैण्ड, क्यानाडा, जर्मनी, हङ्गकङ्ग, नेदरल्याण्ड, न्यूजिलैण्ड, सिंगापुर, श्रीलंका संलग्न रहेका छन् ।

९.७ चालु आर्थिक वर्ष २०५८।५९ को प्रथम एघार महिनामा स्वीकृति प्रदान गरिएका ५३ उद्योगहरुमा २० वटा औद्योगिक उत्पादन, ११ वटा होटल र रिसोर्ट, १६ वटा सेवा उद्योग, २/२ वटा कृषि तथा वन र निर्माण उद्योगहरुसंग सम्वन्धित छन् भने १/१ वटा विद्युत र ग्यास तथा यातायात र संचारसंग सम्वन्धित छन् । मुलुकगत लगानीबाट हेर्दा १६ वटा उद्योगमा भारत, ७ वटामा चीन, ६ वटामा जापान, ४/४ वटामा अमेरिका र दक्षिण कोरिया, २/२ वटामा वेलायत र जर्मनी तथा १/१ वटामा अष्ट्रेलिया, वंगलादेश, ग्वाटेमाला, इजरायल, इटली, मलेसिया, न्यूजीलैण्ड, पोलैण्ड, सिंगापुर, स्विजरलैण्ड, ताइवान र टर्की संलग्न रहेको देखिएको छ ।

## केही उद्योगहरुको उत्पादन क्षमताको उपयोग

९.८ केही छानिएका उद्योगहरुको उत्पादन क्षमताको उपयोगको विश्लेषण गर्दा चिनी, सलाई र सिमेन्ट उद्योगहरुको क्षमता उपयोगमा अघिल्लो आर्थिक वर्षको तुलनामा आर्थिक वर्ष २०५७।५८ मा कमी आएको देखिएको छ भने अन्य उद्योगहरु चुरोट, वियर, जुत्ता र जुटका सामानको क्षमताको उपयोगमा वृद्धि भएको देखिन्छ । आर्थिक वर्ष २०५७।५८ मा कुल उत्पादन क्षमता मध्ये चुरोट र जुट उद्योगले क्रमशः ८० प्रतिशत र ७२ प्रतिशत क्षमता उपयोग गरेको देखिन्छ । यस्तै वियर, सलाई र चिनी उद्योगहरुले क्रमशः ५९ प्रतिशत, ५८ प्रतिशत र ४४ प्रतिशतले क्षमता उपयोग गरेको

देखिएको छ । सिमेन्ट र जुत्ता उद्योगहरुले क्रमशः ४१ प्रतिशत र २३ प्रतिशतले क्षमताको उपयोग गरेको देखिन्छ ।

## औद्योगिक क्षेत्रको वर्तमान स्थिति

९.९ औद्योगिक प्रतिष्ठानहरुको स्थापना, संचालन र प्रवर्द्धनको लागि आवश्यक पर्ने भौतिक पूर्वाधार एवं अन्य सुविधाहरु प्रदान गरी औद्योगिक विकासमा टेवा पुऱ्याउने उद्देश्यले औद्योगिक क्षेत्रहरुको स्थापना गरिएको हो । वर्तमान अवस्थामा वालाजु, हेटौडा, पाटन, नेपालगंज, धरान, पोखरा, वुटवल, भक्तपुर, विरेन्द्रनगर, धनकुटा र राजविराज समेत गरी कुल ११ वटा औद्योगिक क्षेत्रहरु स्थापना भएका छन् । जसमध्ये धनकुटा औद्योगिक क्षेत्र निर्माणाधिन अवस्थामा छ । औद्योगिक क्षेत्रहरुमा विकास गरी तयार गरेको कुल क्षेत्रफल ५ हजार ८० रोपनी जमिन मध्ये ३ हजार ३९५ रोपनी जमिन उद्योगहरुलाई भाडामा दिइएको छ । यी औद्योगिक क्षेत्रहरुमा ३४८ उद्योगहरु संचालनमा रहेका छन् । निर्माणाधिन उद्योगहरुको संख्या ३१ रहेको छ भने ८९ उद्योगहरु वन्द भएका छन् । औद्योगिक क्षेत्रहरुमा स्थापित उद्योगहरुले कुल १३ हजार ३३९ जवानलाई रोजगारी प्रदान गरेका छन् । हालसम्म नुवाकोट, जनकपुर, इलाम, चितवन, झापा, कैलाली, कन्चनपुर, दाङ, काभ्रेपलाञ्चोक, तनहुँ आदि समेत गरी मुलुकमा विभिन्न १६ भन्दा बढी स्थानहरुमा औद्योगिक क्षेत्र स्थापनार्थ संभाव्यता अध्ययन सम्पन्न भइसकेको छ ।

## नेपाल औद्योगिक विकास निगम

९.१० नेपाल औद्योगिक विकास निगमले औद्योगिक लगानीको माध्यमबाट औद्योगिक विकासमा सघाउ पुऱ्याउँदै आएको छ । निगमबाट उद्योगहरुको स्थापना र संचालनार्थ वितरित ऋणको परिमाण तिव्र रुपमा घट्दै आएको देखिन्छ । आर्थिक वर्ष २०५७/५८ मा अघिल्लो आर्थिक वर्षमा वितरित ऋणको तुलनामा २४.१ प्रतिशतले घटेको छ । यस आर्थिक वर्षमा कुल वितरण भएको ऋण रकम मध्ये होटल र पर्यटन क्षेत्रमा वितरित ऋणको अंश १२.९ प्रतिशत र ठूला उद्योगको अंश ५१.९ प्रतिशत रहेको थियो भने विविध उद्योगहरुमा वितरित ऋण लगानीको अंश ३५.२ प्रतिशत थियो ।

९.११ चालु आर्थिक वर्ष २०५८/५९ को प्रथम आठ महिनामा आर्थिक वर्ष २०५७/५८ मा वितरित कुल ऋणको तुलनामा २८.९ प्रतिशतले घटेको देखिन्छ । समीक्षा अवधिमा होटल र पर्यटन क्षेत्र तर्फको लगानी अंश ११.६ प्रतिशत, ठूला उद्योग तर्फको लगानीको अंश ५७.७ प्रतिशत र विविध उद्योगहरुमा गरिएको लगानीको अंश ३०.७ प्रतिशत रहेको छ । विगत केही वर्ष देखि निगममा लगानी कोषको अभावले गर्दा परियोजना प्रवर्द्धन, ऋण स्वीकृति र ऋण भुक्तानीमा प्रभावकारीता आउन सकेको छैन । दीर्घकालिन प्रकृतिको लगानीको लागि दीर्घकालिन स्रोत उपलव्ध नभएबाट लगानी कोषको अभाव कायमै छ ।

## घरेलु तथा साना उद्योग

९.१२ घरेलु तथा साना उद्योगहरुको स्थापना र संचालनबाट मुलुकको आर्थिक तथा सामाजिक विकासमा सकारात्मक प्रभाव पर्ने भई गरीवी निवारण र रोजगारी प्रवर्द्धनमा समेत प्रत्यक्ष अनुकूल प्रभाव पर्ने दृष्टिकोण लिई सघन बैंकिङ्ग कार्यक्रम अन्तर्गत साना

तथा घरेलु उद्योगहरुलाई ऋण प्रवाह गरिंदै आएको छ । आर्थिक वर्ष २०५७/५८ मा अधिराज्यका पाँच विकास क्षेत्रहरुमा कुल १ हजार ६० उद्योगहरुको लागि रु. १६ करोड ७१ लाख ऋण प्रवाह गरिएको थियो । चालु आर्थिक वर्षको प्रथम ६ महिनाको अवधिमा कुल ३८९ उद्योगहरुको लागि रु. ६ करोड २३ लाख कर्जा प्रदान गरिएको छ ।

९.१३ आर्थिक वर्ष २०५७/५८ मा दर्ता भएका घरेलु तथा साना उद्योगहरुको संख्या गत आर्थिक वर्षको तुलनामा ८.० प्रतिशतले घटी कुल ९ हजार ३१७ उद्योगहरु दर्ता भएका छन् । उद्योगको किसिम अनुसार प्राइभेट फर्महरु यस आर्थिक वर्षमा ५.९ प्रतिशतले, प्राइभेट लिमिटेड २१.३ प्रतिशतले र साझेदारी फर्मको दर्ता संख्यामा २५.९ प्रतिशतले कमी आएको छ । यसरी नै दर्ता भएका घरेलु तथा साना उद्योगहरुमा भएको लगानीको अनुपातमा पनि कमी आई कुल रु. ७ अर्ब ३२ करोड लगानी भएको छ । चालु आर्थिक वर्ष २०५८/५९ को प्रथम आठ महिनाको अवधिमा ५ हजार ९५५ घरेलु तथा साना उद्योगहरु दर्ता भई कुल रु. ४ अर्ब ९२ करोड लगानी भएको छ ।

## औद्योगिक व्यवसाय विकास प्रतिष्ठान

९.१४ औद्योगिक विकासका लागि उद्यमशिलता, गुणस्तरयुक्त व्यवस्थापन, प्रविधि र प्राविधिक जनशक्तिको विकास गर्ने लक्ष्य रहेको यस प्रतिष्ठानले नयाँ व्यवसाय सिर्जना, व्यवसाय व्यवस्थापन, उद्यमी विकास प्रशिक्षण कार्यक्रमहरु लगायत परामर्श सेवा तथा उद्योग व्यवसाय सम्वन्धी अनुसन्धानात्मक कार्यक्रमहरु संचालन गर्दै आएको छ । प्रतिष्ठानद्वारा चालु आर्थिक वर्षको चैत्रसम्ममा २८४ जवानलाई सीपमूलक प्रशिक्षण दिइसकिएको छ । यस्तै स्थानीय संस्थाहरुको संस्थागत विकास गर्ने कार्यमा १३६ जवानलाई प्रशिक्षण दिइएको छ ।

## खानी तथा भूगर्भ

९.१५ अधिराज्यका विभिन्न ठाउँमा राखिएका २१ वटा साइस्मिक स्टेशनहरु (भूकम्पमापन केन्द्र) सुचारु रुपमा संचालन भईरहेका छन् । उक्त स्टेशनहरुबाट हर क्षण भूकम्पको रेकर्ड गर्ने गरिएको र ४ रेक्टर स्केल भन्दा बढीको भूकम्प आएमा १ घण्टा भित्र संचारमा पठाई सर्वसाधारणलाई जानकारी गराईन्छ । स्तरीय भौगर्भिक नक्शा तयार गर्न सहायक मानिएको रिमोट सेन्सिङ तथा जियोग्राफिक इनफर्मेशन सिष्टम (जि.आई.एस.) प्रयोग गर्न सक्ने क्षमताको विकास भई काठमाण्डौ र पोखरा उपत्यका, वुटवल तथा धरान नगरपालिकाको इन्जिनियरिङ्ग तथा इनभारोन्मेन्टल जियोलजिकल नक्शाहरु तयार भएका छन् । उक्त नक्शाहरु शहरी योजना, भू-उपयोग योजना शहरी क्षेत्रका भौतिक पूर्वाधार विकास निर्माण कार्य, फोहरमैला व्यवस्थापन, प्रदुषण नियन्त्रण तथा खानेपानीको गुण तथा वातावरण संरक्षण कार्यमा उपयोगी हुने हुँदा नगरपालिकाहरुले सो को उपयोग गरिरहेका छन् ।

९.१६ यसै गरी वैतडी, उदयपुर, स्याङ्जा, अर्घाखाची जिल्लाहरुमा सिमेन्ट ग्रेड चुनढुंगा तथा डोलोमाइट अन्वेषण कार्य भई रहेको छ । खनिज उद्योग प्रवर्द्धन अन्तर्गत सल्यानमा सिमेन्ट उद्योग प्रवर्द्धन गर्न डाटा प्याकेज तयार गरी बिक्री वितरण गर्ने कार्य भईरहेको छ भने सुर्खेतको चौकुनेमा अवस्थित चुनढुंगामा आधारित सिमेन्ट उद्योग प्रवर्धनको लागि प्राप्त प्रस्तावहरुको मूल्यांकन समितिबाट गर्ने कार्य भई रहेको छ । साथै

धनकुटाको निगालेमा चुनढुंगामा आधारित सिमेन्ट उद्योग प्रवर्द्धन गर्न डाटा प्याकेज वनाउने काम भइरहेको छ । यसरी नै काठमाण्डौ प्राकृतिक ग्यास प्रवर्द्धन गर्न इच्छुक लगानीकर्ताबाट प्राप्त प्रस्तावको मूल्यांकन गरी कम्पनीको छनौट भैसकेको र ग्यास प्रवर्द्धन सम्वन्धमा कम्पनीसंग सम्झौताको तैयारी भई रहेको छ ।

## पर्यटन

९.१७ नेपाल भ्रमणमा आएका पर्यटकहरुको संख्या, तिनको वृद्धिदर तथा वसाई अवधिको विश्लेषण गर्दा २०५६ पौष देखि २०५७ पौषको अवधिमा ५.७ प्रतिशत र २०५७ पौष देखि २०५८ पौषको अवधिमा पर्यटक संख्यामा २१.२ प्रतिशतले कमी आएको छ । २०५६ पौष देखि २०५७ पौषको अवधिमा प्रति पर्यटकको सरदर वसाई अवधि ११.९ दिन रहेकोमा २०५७ पौष देखि २०५८ पौषको अवधिमा सरदर वसाई अवधि घटेर ११.४ दिन कायम हुन गएको अनुमान छ ।

९.१८ भ्रमणको उद्देश्य अनुसार पर्यटक आगमन संख्याको अध्ययन गर्दा अधिकांश पर्यटकहरु मनोरन्जन र पदयात्रा तथा पर्वतारोहणका लागि भ्रमण गर्ने गरेको देखिएको छ । २०५७ पौष देखि २०५८ पौषको अवधिमा कुल पर्यटक आगमन संख्याको ५६.६ प्रतिशत मनोरन्जन, २३.२ प्रतिशत पदयात्रा

मञ्जुषा ९ (१)

**पर्यटन क्षेत्रमा भएका केही गतिविधिहरु**

- श्री ५ को सरकारले पर्वत पर्यटन प्रवर्द्धनको लागि नेपाल अधिराज्यको थप १०३ हिम शिखर बसन्त ऋतु (१ मार्च २००२) देखि लागू हुने गरी पर्वतारोहणको लागि खुला गरेको छ । यसबाट मुलुकको पर्वत पर्यटनकै विकासमा सहयोग पुऱ्याई पिछडिएका क्षेत्रको विकासमा सघाउ पुग्ने छ । नयाँ खुला गरिएका हिम शिखरको संख्या २६३ पुगेको छ ।
- पर्वतारोहण दलसंग अनिवार्य रुपमा सम्पर्क अधिकृत रहनु पर्ने व्यवस्थालाई संशोधन गरी ६,५०० मीटर भन्दा कम उचाइको पर्वत आरोहण गर्न सम्पर्क अधिकृतको आवश्यक नपर्ने व्यवस्था गरिएको छ । यसरी ८९ हिम शिखर आरोहणको लागि सम्पर्क अधिकृत आवश्यक नहुने तर पर्वतारोहण सदस्यहरुले नेपाल ट्रेकिङ संघमा पूर्ण विवरण दर्ता गर्नु पर्ने व्यवस्था गरिएको छ ।
- पर्यटन प्रवर्द्धनको लागि निषेधित क्षेत्र खुला गर्ने प्रारम्भिक चरणको क्रममा अधिराज्यको ६ जिल्लाहरु पर्यटकीय गन्तव्य स्थलको रुपमा खुला गरिएको छ । समूहगत पर्यटनको लागि खुला गरिएका यी जिल्लाहरुमा ताप्लेजुङ्ग, संखुवासभा, सोलुखुम्वु, मनाङ, हुम्ला र दार्चुला रहेका छन् ।
- चीनिया नागरिकहरुले नेपाल भ्रमण गर्न सुविधा एवं सहयोग विस्तार गर्ने तथा यस सम्वन्धी योजना कार्यान्वयनका लागि नेपाल र चीनले २६ नोवेम्वर, २००२ मा एक समझदारी पत्रमा हस्ताक्षर गरेका छन् । दक्षिण एशियाली मुलुकहरुमा पर्यटन प्रवर्द्धनको लागि चीनले गन्तव्य स्थलको रुपमा मान्यता दिएकोमा नेपाल पहिलो मुलुक भएको छ ।
- साविकको तीन किसिमको भीसाको सट्टा एकल प्रवेश (Single Entry) र वहुप्रवेश (Multiple Entry) गरी दुई किसिमको भीसा व्यवस्था भएको छ । एकल प्रवेशको लागि भीसा शुल्क अमेरिकी डलर ३०.०० र वहुप्रवेशको लागि अमेरिकी डलर ५०.०० कायम गरी वहुप्रवेश भीसाको अवधि पाँच महिना गरिएको छ ।

र पर्वतारोहण, ५.९ प्रतिशत व्यापार, ४.५ प्रतिशत औपचारिक भ्रमण, ४.० प्रतिशत तिर्थ यात्रा, १.२ प्रतिशत सभा तथा सेमिनार र ४.६ प्रतिशत अन्य प्रयोजनको लागि भ्रमण गरेको देखिएको छ ।

९.१९ पर्यटकहरुको आगमनलाई क्षेत्रगत रुपमा विश्लेषण गर्दा २०५७ पौष देखि २०५८ पौषको अवधिमा कुल पर्यटक संख्याको ३४.२ प्रतिशत पश्चिम युरोपबाट, १०.६ प्रतिशत उत्तर अमेरिकाबाट, ३.६ प्रतिशत अष्ट्रेलिया र प्रशान्त क्षेत्रबाट, १.५ प्रतिशत पूर्वी युरोपबाट, १.३ प्रतिशत मध्य तथा दक्षिण अमेरिकाबाट, ०.४ प्रतिशत अफ्रिकाबाट पर्यटकहरुको आगमन भएको अनुमान छ भने ४८.४ प्रतिशत भारत तथा अन्य एशियाली मुलुकहरुबाट पर्यटकहरुको भ्रमण भएको अनुमान छ ।

९.२० अधिराज्यको होटल र होटल शैया संख्यालाई हेर्दा २०५७ पौष देखि २०५८ पौषको अवधिमा तारे स्तरका होटल संख्यामा ३ होटल थप भई तारे होटल संख्या ९७ पुगेको र तारे देखि वाहेकका होटल संख्यामा ३७ होटल थप भई ७९१ होटल संख्या पुगेको छ । यस अवधिमा तारे स्तरका होटल शैया संख्यामा १.२ प्रतिशतले र तारे देखि वाहेकका होटल शैया संख्यामा ४.३ प्रतिशतले वृद्धि भई क्रमशः ९ हजार ४३० र २६ हजार ७३३ शैया संख्या भएको छ । यसरी समीक्षा अवधिमा कुल होटल संख्यामा ४.७ प्रतिशत र शैया संख्यामा ३.४ प्रतिशतले वृद्धि भएको छ ।

९.२१ नेपाल भ्रमणमा आउने पर्वतारोहण दल र पर्वतारोहीहरुको स्थितिको विश्लेषण गर्दा २०५७ पौष देखि २०५८ पौषको अवधिमा अघिल्लो वर्षको सोही अवधिसंग तुलना गर्दा पर्वतारोहण दलको संख्यामा कमी आएको देखिएता पनि पर्वतारोहीहरुको संख्यामा वृद्धि भएको छ । समीक्षा अवधिमा ११२ पर्वतारोहरण दलले पर्वतारोहणको लागि अनुमति लिई ८३६ जना पर्वतारोहीहरुले पर्वतारोहण गरेका छन् । समीक्षा अवधिमा अघिल्लो वर्षको सोही अवधिसंग तुलना गर्दा सरकारलाई प्राप्त भएको रोयल्टी ६.२ प्रतिशतले र पर्वतारोहीहरुबाट भएको खर्चको अनुपात १०.७ प्रतिशतले वृद्धि भएको छ ।

९.२२ पर्यटन प्रवर्द्धनको लागि आवश्यक पर्ने दक्ष जनशक्ति उत्पादन गर्ने कार्यमा नेपाल पर्यटन तथा होटल व्यवस्थापन प्रतिष्ठान संलग्न रही आएको छ । प्रतिष्ठानले ग्रामीण क्षेत्रमा पर्यटन व्यवसायको प्रवर्द्धन गर्न त्यस क्षेत्रका जनतामा पर्यटन व्यवसायमा लगानी गर्ने अभिरुची उत्पन्न गराउन पर्यटकमूलक व्यवसाय संचालनार्थ आवश्यक तालिमहरु संचालन गर्नुका साथै शहरी क्षेत्रका साना ठूलो सवै पर्यटकमूलक उद्योग व्यवसायीहरुलाई आवश्यक पर्ने दक्ष जनशक्ति उत्पादन गर्न विभिन्न विषय र स्तरको तालीमको पहिचान गरी यस प्रतिष्ठानले तालिम कार्यक्रमहरु संचालन गर्दै आएको छ । यस प्रतिष्ठानले आर्थिक वर्ष २०५७।५८ मा विभिन्न विषयहरुमा १ हजार १२८ जनालाई प्रशिक्षण दिइएको थियो भने आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनाको अवधिमा ६९६ जनालाई प्रशिक्षण दिएको छ ।

## पर्यटन क्षेत्रबाट आर्जित विदेशी मुद्रा

९.२३ आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा पर्यटन क्षेत्रबाट आर्जित विदेशी मुद्रा २.९ प्रतिशतले घटी ११ अर्व ७१ करोड ७० लाख भएको देखिन्छ । चालु आर्थिक वर्ष २०५८।५९ को प्रथम ६ महिनामा रु. ४ अर्व ३५ करोड ४६ लाख विदेशी मुद्रा यस क्षेत्रबाट आर्जन भएको अनुमान छ । चालु आर्थिक वर्षको समीक्षा अवधिमा

यसरी आर्जित विदेशी मुद्रा कुल वस्तु निर्यातबाट प्राप्त विदेशी मुद्राको अनुपातमा १६.५ प्रतिशत, कुल वस्तु निर्यात एवं सेवाबाट प्राप्त विदेशी मुद्रा आर्जनको अनुपातमा १०.७ प्रतिशत र आर्जित कुल विदेशी मुद्राको अनुपातमा ८.७ प्रतिशत रहेको छ । आर्थिक वर्ष २०५६।५७ को तुलनामा उपर्युक्त तिनैवटा अनुपातहरुमा न्हास देखिएको छ ।

९.२४ पर्यटन उद्योगलाई गुणस्तरयुक्त तुल्याउने, पूर्वाधार सुविधाहरुको सुधार र विकास साथै अन्तर्राष्ट्रिय पर्यटन बजार व्यवस्थापन र प्रवर्द्धनका लागि नेपाल पर्यटन वोर्ड कार्यरत छ । पर्यटन प्रवर्द्धनको लागि यस वोर्डले वृत्तचित्रको निर्माण, पर्यटन मेलाहरुको प्रायोजन, पर्यटन सामाग्री उत्पादन र वितरण, अन्तर्राष्ट्रिय प्रचार प्रसार कार्यक्रमहरु संचालन गर्दै आएको छ । पर्यटन क्षेत्रको विकास र विस्तारको लागि चालु आर्थिक वर्षमा सरकारी एवं निजी क्षेत्रको साझेदारीमा विविध प्रवर्द्धनात्मक कार्यक्रमहरु सशक्त रुपमा संचालन गर्नुको साथै गन्तव्य नेपाल नामक दुई वर्षीय अभियान अन्तर्गत पर्यटन प्रवर्द्धन एवं जनचेतना अभिवृद्धिका कार्यक्रमहरु संचालन गर्दै आएको छ ।

मञ्जुषा : ९ (२)

**गन्तव्य नेपाल अभियान २००२-२००३**

गन्तव्य नेपाल अभियान आर्थिक वर्ष २०५८।५९ को पौष देखि आर्थिक वर्ष २०६०/६१ को पौषसम्म दुई वर्षीय कार्यक्रमका रुपमा संचालनमा आएको र International Year of Mountain 2002, International Year of Eco-tourism 2002 र Visit South Asia Year 2003 लाई समेत गन्तव्य वर्षकै महत्वपूर्ण कार्यक्रम मानी समन्वयात्मक रुपले कार्यक्रमहरु संचालन गर्ने योजना छ ।

उद्देश्य :

- देश भित्र व्यापक रुपमा पर्यटन जनचेतना अभिवृद्धि गर्ने
- प्रभावकारी अन्तरराष्ट्रिय प्रचार प्रसारद्वारा नेपाललाई एक भरपर्दो, सुरक्षित र आकर्षक पर्यटन गन्तव्य स्थलको रुपमा छवि प्रतिष्ठापन एवं अभिवृद्धि गर्ने

लक्ष्य :

- सन् २००३ को अन्त्यमा कुल ५ लाख विदेशी पर्यटक भित्र्याउने
- यस अवधिमा करिव १८ करोड अमेरिकी डलर वरावरको विदेशी मुद्रा आर्जन गर्ने ।

## सरकारी संस्थानहरु

९.२५ संस्थानहरुमा श्री ५ को सरकारबाट आर्थिक वर्ष २०५७।५८ मा गत आर्थिक वर्षको तुलनामा शेयर पूँजी लगानी २०.७ प्रतिशतले र संचालन ढुवानी अनुदान ५३.५ प्रतिशतले घटेको छ । यस आर्थिक वर्षमा ऋण पूँजी लगानी भने १६.० प्रतिशतले वृद्धि भएको छ । विगत वर्षहरुमा प्रदान गर्दै आएको पूँजीगत अनुदान यस आर्थिक वर्षमा दिइएको छैन । आर्थिक वर्ष २०५७।५८ मा अघिल्लो आर्थिक वर्षको तुलनामा श्री ५ को सरकारबाट सरकारी संस्थानहरुमा भएको नगद प्रवाह ३.८ प्रतिशतले वृद्धि भएको छ । चालु आर्थिक वर्षमा यस्तो नगद प्रवाह ११.७ प्रतिशतले वृद्धि हुने अनुमान छ । यस आर्थिक वर्षमा गत आर्थिक वर्षको तुलनामा संस्थानहरु तर्फको शेयर पूँजी लगानी ९६.५ प्रतिशतले वृद्धि हुने अनुमान छ भने ऋण पूँजी लगानी १.४ प्रतिशतले घट्ने र संचालन ढुवानी अनुदान ६.२ प्रतिशतले बढ्ने अनुमान छ ।

९.२६ आर्थिक वर्ष २०५७।५८ मा आर्थिक वर्ष २०५६।५७ को तुलनामा संस्थानहरुबाट श्री ५ को सरकारतर्फ भएको नगद प्रवाह ३.१ प्रतिशतले वृद्धि भएको छ । नगद प्रवाह वृद्धि हुनुको प्रमुख कारणमा आयकर तर्फ ३३.७ प्रतिशतले उल्लेख्य वृद्धिलाई लिन सकिन्छ । यस आर्थिक वर्षमा लाभांश, व्याज र साँवा भुक्तानी क्रमश: १०.९ प्रतिशत, ६.७ प्रतिशत र ४.० प्रतिशतले घटेको थियो । चालु आर्थिक वर्षमा गत आर्थिक वर्षको तुलनामा संस्थानहरुबाट श्री ५ को सरकारतर्फ हुने नगद प्रवाह १५.२ प्रतिशतले घट्ने अनुमान छ । चालु आर्थिक वर्षमा आयकर ६२.३ प्रतिशतले घट्ने अनुमान छ भने लाभांश २.७ प्रतिशतले, व्याज १९.६ प्रतिशतले र साँवा भुक्तानी ७.० प्रतिशतले वृद्धि हुने अनुमान छ । खुद नगद प्रवाहको विश्लेषण गर्दा आर्थिक वर्ष २०५७।५८ मा संस्थानहरुबाट वढी नगद प्रवाह भएको थियो भने चालु आर्थिक वर्षमा यस्तो नगद प्रवाह श्री ५ को सरकारबाट बढी हुने अनुमान छ ।

९.२७ सरकारी क्षेत्रका संस्थानहरुको वित्तीय कार्यकुशलताको विश्लेषण गर्दा अधिकांश संस्थानहरुको संचालन मुनाफा ऋणात्मक रही आर्थिक वर्ष २०५७।५८ मा रु. १ अर्व ३५ करोड ३२ लाख संचालन घाटा भएको देखिन्छ । चालु आर्थिक वर्षमा संस्थानहरुको संचालन मुनाफामा सुधार भई रु. २ अर्व ३७ करोड ८३ लाख संचालन मुनाफा हुने अनुमान छ । आर्थिक वर्ष २०५७।५८ मा संस्थानहरुमा खुद पूंजी लगानी रु. ८२ अर्व ९१ करोड ५ लाख भएकोमा चालु आर्थिक वर्षमा रु. ११२ अर्व ६० करोड ४२ लाख लगानी हुने अनुमान छ । खुद पूंजी लगानीमा मुनाफाको प्रतिफलको आधारमा विश्लेषण गर्दा आर्थिक वर्ष २०५७।५८ मा १.६ प्रतिशतले ऋणात्मक रहेको देखिन्छ भने चालु आर्थिक वर्षमा २.१ प्रतिशतले मुनाफा हुने अनुमान छ ।

## संस्थानको निजीकरण

९.२८ निजीकरण कार्यक्रमलाई आर्थिक उदारीकरण नीतिको एक प्रमुख अंगको रुपमा स्वीकार गरी आएको छ । निजीकरण कार्यक्रमको शुरु देखि आर्थिक वर्ष २०५६।५७ सम्ममा १७ वटा विभिन्न सार्वजनिक संस्थानहरुको निजीकरण गरिएको छ ।

तालिका ९ (क) : निजीकरण गरिएका संस्थानहरुको बिबरण

| सि. नं. | कम्पनीको नाम | निजीकरण गरिएको वर्ष | निजीकरणको तरिका | बिक्री मूल्य (रु. हजारमा)# | शेयर अनुपात | |
|---|---|---|---|---|---|---|
| | | | | | व्यवस्थापन | सर्वसाधारण |
| १ | भृकुटी कागज कारखाना | अक्टोवर १९९२ | सम्पत्ति तथा व्यवसाय बिक्री | २२९८०० | ७० | ३० |
| २ | हरिसिद्धि ईटा तथा | अक्टोवर | सम्पत्ति तथा | २१४८३० | ७२ | २८ |

# व्यवस्थापन शेयरको मूल्य मात्र समावेश गरिएको

| | | | | | | |
|---|---|---|---|---|---|---|
| | टायल कारखाना | १९९२ | व्यवसाय बिक्री | | | |
| ३ | बाँसवारी छाला तथा जुत्ता कारखाना | मार्च १९९२ | सम्पत्ति तथा व्यवसाय बिक्री | २९८५४ | ७५ | २५ |
| ४ | नेपाल चलचित्र उद्योग लि. | नोभेम्वर १९९३ | शेयर बिक्री | ६४६६२ | ५१ | ४९ |
| ५ | बालाजु कपडा उद्योग लि. | डिसेम्वर १९९३ | शेयर बिक्री | १७७१६ | ७० | ३० |
| ६ | काँचो छाला संकलन तथा प्रशोधन कं. लि. | डिसेम्वर १९९३ | शेयर बिक्री | ३९९० | - | १०० |
| ७ | नेपाल विटुमिन तथा व्यारेल उद्योग लि. | जनवरी १९९४ | शेयर बिक्री | १३१७२ | ६५ | ३५ |
| ८ | नेपाल ल्युव आयल लि. | जनवरी १९९४ | शेयर बिक्री | ३१०५७ | ४० | ३८ |
| ९ | नेपाल जुट विकास कं. | १९९३ | विघटन | विघटन | | |
| १० | सूर्ति विकास कारखाना लि. | मार्च १९९४ | विघटन | विघटन | | |
| ११ | नेपाल ढलौट कारखाना लि. | र्माच १९९६ | शेयर बिक्री | १४४७३ | ५१ | ४९ |
| १२ | श्री रघुपति जुट मिल्स | अगष्ट १९९६ | शेयर बिक्री | ८२२०४ | ६५ | ३५ |
| १३ | विराटनगर जुट मिल्स कम्पनी[∝] | डिसेम्वर १९९६ | व्यवस्थापन करार | - | - | - |
| १४ | नेपाल बैंक लि.[∂] | मार्च १९९७ | शेयर बिक्री | १२५१४० | - | ५९ |
| १५ | कृषि औजार कारखाना[β] | मे १९९७ | शेयर बिक्री | ९५१०० | ६५ | ३५ |
| १६ | भक्तपुर ईट कारखाना लि.[ψ] | अगष्ट १९९७ | लिज | २०३००<br>(१० वर्षको लिज) | - | - |
| १७ | नेपाल चिया विकास निगम[©] | जुन २००० | शेयर बिक्री तथा लिज | २६७१०५ | ६५ | ३५ |

यी मध्ये तीन वटा संस्थानहरुको सम्पत्ति र व्यवसाय बिक्री गरिएको, नौ वटाको शेयर बिक्री गरिएको, एउटाको व्यवस्थापन करार, एउटाको लिज र बाँकी एउटा उद्योगको हकमा जमिन लिजमा दिई शेयर बिक्री गरिएको थियो भने वांकी दुई वटा संस्थानहरुलाई विघटन गरिएको थियो । चालु आर्थिक वर्षमा घरेलु शिल्पकला बिक्री भण्डार र नेपाल यातायात संस्थानलाई बन्द गरिएको छ भने साझा यातायातलाई विघटन गरिएको छ । हेटौंडा कपडा उद्योगको सम्पत्ति र व्यवसाय बिक्री गरी निजीकरण गर्नको लागि सार्वजनिक सूचना प्रकाशित गरिएको छ । श्री ५ को

---

[∝] अर्ध सरकारी संस्थानको रुपमा रहेको यस मिल्सको व्यवस्थापन करार सम्वन्धी अन्तिम निर्णय कम्पनीको संचालक समितिबाट भएको ।

[∂] श्री ५ को सरकारको बहुमत शेयरको हिस्सालाई घटाएर ४१ प्रतिशतमा ल्याइएको ।

[β] खरीदकर्ताले करार अनुसारको दायित्व पुरा नगरेकोले यो कारखाना पुनः सरकारी स्वामित्वमा आएको छ ।

[ψ] लिजमा लिने पक्षले करार अनुसारको जिम्मेवारी पुरा गर्न नसकेकोले पुनः संचालनको जिम्मेवारी श्री ५ को सरकारले लिएको । १०० प्रतिशत श्री ५ को सरकारको शेयर

[©] जमिन लिजमा दिई शेयर बिक्री गरेको तर समापन मिति कायम भई सकेको छैन ।

सरकारको शेयर लगानी मध्येबाट बुटवल पावर कम्पनीको ७५ प्रतिशत शेयर बिक्री सम्वन्धमा Preferred Bidders को छनौट भईसकेको र खरीद बिक्री सम्वन्धी सम्झौताको लागि वार्ता भई रहेको छ । कृषि सामाग्री संस्थानलाई विघटन गरी मल र विउको छुट्टा छुट्टै कारोवार गर्ने गरी दुई वटा भिन्दा भिन्दै कम्पनीहरु स्थापना गर्ने काम भई रहेको छ । निजीकरण कार्यक्रम प्रतिको श्री ५ को सरकारको निरन्तर प्रतिवद्धताको फलस्वरुप आगामी आर्थिक वर्ष भित्र कम्तीमा थप तीन वटा संस्थानहरुको निजीकरण कार्य सम्पन्न हुने अनुमान छ ।

## चुनौतीहरु

९.२९ समीक्षा अवधिमा केही वस्तुहरुको उत्पादन प्रवृत्ति घट्दो अवस्थामा रहेको र उत्पादन क्षमताको उपयोग पनि पर्याप्त मात्रामा गर्न नसकेको देखिएकोमा वजार व्यवस्था, पूँजीको पर्याप्तता, प्रविधिको विकास, बजारमुखी उत्पादन, औद्योगिक व्यवस्थापन जस्ता आवश्यकीय तत्वहरुको पर्याप्तता एवं सो को लागि उचित व्यवस्थापन गर्ने कार्य चुनौतीपूर्ण रहेको छ । यसको लागि आवश्यकतानुसार विद्यमान नीतिहरुमा सुधार, लगानी-मैत्री वातावरणको श्रृजना, पूँजीको व्यवस्थापन, औद्योगिक अनुसन्धान तथा विकास लगायत औद्योगिक विकासलाई सहयोग हुने सुधारात्मक कार्यहरुको विस्तार चुनौतीको रुपमा रहेको छ ।

९.३० कुल विदेशी मुद्रा आर्जनको १० प्रतिशत र कुल गार्हस्थ्य उत्पादनको करिव ३ प्रतिशत आर्जन गर्ने एक प्रमुख स्रोतको रुपमा रहेको पर्यटन उद्योग हालका वर्षहरुमा संकटग्रस्त हुदै गएको छ । सिमित भौगोलिक क्षेत्रहरुमा मात्रै पर्यटन प्रवर्द्धनका कार्यक्रमहरु केन्द्रित रहनु, पर्यटकिय पूर्वाधारको विस्तार हुन नसक्नु, सुरक्षाको प्रत्याभूति नहुनु, वातावरणीय स्वच्छता कायम गर्न नसक्नु, पर्यटकहरुलाई आकर्षण गर्न व्यापक प्रचार प्रसार हुन नसक्नु आदि कारणहरुले गर्दा पर्यटकहरुको आगमनमा उल्लेखनीय वृद्धि हुन सकेको छैन भने पर्यटकहरुको बसाई अवधिलाई लम्ब्याउन पनि सकिएको छैन । सुरक्षाको प्रत्याभूति र मुलुकमा अमन चैन पर्यटन संख्या वृद्धि गर्ने प्रमुख तत्वको रुपमा रहेको छ । अतः ग्रामीण पर्यटन तथा नयाँ पर्यटकीय क्षेत्रको विकास गर्ने सोचको खाँचो टटकारो रुपमा देखिएको छ भने व्यवस्थित प्रचार प्रसार अभियान, सुरक्षाको प्रवन्ध, वातावरणीय सुधार जस्ता प्रभावकारी कार्यक्रमहरुको विस्तार गर्नु पर्ने आवश्यकता रहेको छ ।

९.३१ अधिकांश संस्थानहरुले वस्तु तथा सेवाको उत्पादन र वितरण प्रभावकारी रुपले व्यवस्थित गर्न नसकी पूँजीको व्यवस्था एवं पूँजी निर्माण गर्न नसकेकोले श्री ५ को सरकारबाट हुने शेयर पूँजी लगानी र ऋण पूँजी लगानीको मात्रा बढ्दो प्रवृत्तिमा छ । तसर्थ, संस्थानहरुले आफ्नो कार्यकुशलतामा अभिवृद्धि गरी बजारमुखी कार्य पद्धती अपनाउन संगठनात्मक एवं निजीकरण गर्दा कर्मचारीलाई Pay off नगरी निजीकरण गर्न नसकिने अनुभव हुँदा Retrenchment fund को व्यवस्था निजीकरण गर्नु अघि आवश्यक छन् । साथै निजीकरण गर्ने प्रकृया लामो हुँदा यसलाई छोट्टयाउन जरुरी छ । व्यवस्थापकीय सुधार संस्थानहरुको वस्तु तथा सेवाको विस्तार तथा वितरणबाट आन्तरिक वित्तीय स्थिति सुधार गर्दै जानु एक ठूलो चुनौतीको रुपमा रहेको छ ।

९.३२ सीपयुक्त व्यवस्थापन, आधुनिक प्रविधि, प्राविधिक सीप, व्यवसायिक संस्कार, अन्तर्राष्ट्रिय बजारमा पहुँच जस्ता व्यवसायिक गुणहरुको आवश्यकता पूर्ति गर्न मुलुकको अर्थतन्त्रमा लगानीलाई बढी आकर्षित गर्ने चुनौती रहेको छ ।

# १०. ऊर्जा, वन तथा वातावरण

**ऊर्जा :**

१०.१ अघिल्लो वर्षको दांजोमा आर्थिक वर्ष २०५७।५८ मा ऊर्जा खपत २.४ प्रतिशतले बृद्धि भई ७९१२ हजार टन तेल शक्ति वरावर भएकोमा आर्थिक वर्ष २०५८।५९ मा ३.२ प्रतिशतले वृद्धि भई ऊर्जा खपत ८१६२ हजार टन तेल शक्ति वरावर पुग्ने अनुमान छ ।

१०.२ ऊर्जाको श्रोतलाई परम्परागत एवं व्यवसायिक दुई भागमा विभाजन गरी हेर्दा आर्थिक वर्ष २०५७।५८ मा कुल ऊर्जा खपत मध्ये परम्परागत ऊर्जा खपत ८६.२ प्रतिशत र व्यवसायिक ऊर्जा खपत १३.८ प्रतिशत रहेकोमा आथिर्क वर्ष २०५८।५९ मा परम्परागत ऊर्जा खपत ८५.३ प्रतिशत र व्यवसायिक ऊर्जा खपत १४.७ प्रतिशत रहने अनुमान हुँदा नेपाली अर्थतन्त्र परम्परागत ऊर्जा श्रोतमा अझ पनि ठूलो मात्रामा निर्भर रहदै आएको देखिएको छ ।

तालिका १०.२ : विद्यूत उत्पादन तथा खपतको स्थिति

१०.३ आर्थिक वर्ष २०५७।५८ मा परम्परागत तर्फ कुल ऊर्जा खपत मध्ये दाउराबाट ७६.६ प्रतिशत, कृषिजन्य तथा पशुजन्य अवशेषबाट ऋमशः ३.८ प्रतिशत तथा ५.८ प्रतिशत खपत भएकोमा आर्थिक वर्ष २०५८।५९ मा दाउराबाट ७५.९ प्रतिशत, कृषि जन्य तथा पशुजन्य अवशेषबाट ऋमशः ३.७ प्रतिशत तथा ५.७ प्रतिशत खपत हुने अनुमान छ । त्यस्तै व्यवसायिक ऊर्जा खपत तर्फ आर्थिक वर्ष २०५७।५८ मा कुल ऊर्जा खपत मध्ये पेट्रोलियम पदार्थबाट ९.३ प्रतिशत, कोइलाबाट ३.१ प्रतिशत तथा विद्युतबाट १.४ प्रतिशत रहेकोमा आर्थिक वर्ष २०५८।५९ मा पेट्रोलियम पदार्थबाट ९.७ प्रतिशत कोइलाबाट ३.६ तथा विद्युतबाट १.४ प्रतिशत खपत हुने अनुमान छ ।

१०.४ आर्थिक वर्ष २०५६।५७ मा कुल ऊर्जा खपत मध्ये घरेलु प्रयोग (Residential Sector) तर्फ ८९.३ प्रतिशत औद्योगिक क्षेत्र तर्फ ४.६ व्यापारिक क्षेत्र तर्फ १.१ प्रतिशत यातायात क्षेत्र तर्फ ३.९ प्रतिशत तथा कृषि क्षेत्र तर्फ ०.९ प्रतिशत खपत भएको देखिएकोमा आर्थिक वर्ष २०५७।५८ मा घरेलु प्रयोग तर्फ ८८.९ प्रतिशत, औद्योगिक क्षेत्र तर्फ ४.८ प्रतिशत, व्यापारिक क्षेत्र तर्फ १.२ प्रतिशत, यातायात क्षेत्र तर्फ ४ प्रतिशत तथा कृषि क्षेत्र तर्फ ०.९ प्रतिशत खपत भएको देखिन्छ । कुल ऊर्जा खपत मध्ये आर्थिक वर्ष २०५७।५८ मा घरेलु प्रयोजनमा अधिकांश ऊर्जा खपत भएको र त्यस मध्ये परम्परागत ऊर्जा (दाउरा) ७६ प्रतिशत र पेट्रोलियम पदार्थ ३.२ प्रतिशत

खपत भएको देखिन्छ । आर्थिक वर्ष २०५७५८ मा परम्परागत वैकल्पिक ऊर्जाको श्रोतहरुको योगदान कुल ऊर्जा खपतमा करीव ०.३६ प्रतिशत रहेको देखिन्छ ।

## विद्युत

१०.५ देशको कुल विद्युत उत्पादन गर्ने क्षमता ८३ हजार मेगावाट रहेकोमा आर्थिक वर्ष २०५७५८ को अन्त्यसम्ममा जम्मा ३७३.२ मेगावाट मात्र उत्पादन गर्न सकिएको छ । चालु आर्थिक वर्षमा निजी क्षेत्रबाट सम्पन्न भएको १८३ किलोवाट क्षमताको सागेखोला सानो जलविद्युत आयोजनाको उत्पादन समेत थप गर्दा कुल उत्पादन ३७३.६ मेगावाट (कुल क्षमताको ०.५ प्रतिशत) सम्म पुगेको छ । उत्पादित जलविद्युत मध्ये ३६८.३ मेगावाट विद्युत राष्ट्रिय ग्रिडमा जडान भएको छ भने वांकी ५.३ मेगावाट साना जलविद्युत आयोजनाबाट उत्पादन भै स्थानीय स्तरमा विद्युत सेवा उपलव्ध गराइएको छ । यस्तै तापीय विद्युत केन्द्रहरुबाट कुल ५६.८ मेगावाट र सौर्य शक्ति केन्द्रबाट १०० किलोवाट विद्युत उत्पादन भैरहेको छ । हालसम्म अधिराज्यको ७५ वटै जिल्लाहरुमा विद्युत सेवा पुऱ्याई सकिएको छ ।

१०.६ देशमा उत्पादित जल विद्युतमा थप गर्दै लाने क्रममा श्री ५ को सरकार, नेपाल विद्युत प्राधिकरणको संयुक्त लगानी तथा एशियाली विकास वैंक र जापान सरकारको ऋण सहयोगमा नेपालको सवै भन्दा ठूलो जल विद्युत आयोजना कालीगण्डकी “ए” (१४४ मेगावाट) को निर्माण कार्य सम्पन्न भै हाल यसका ३ वटै युनिटबाट उत्पादन शुरु भै सकेको छ भने निजी क्षेत्रबाट निर्माण भैरहेको इन्द्रावती तेश्रो सिन्धुपाल्चोक (७.५ मेगावाट) पनि अन्तिम चरणमा पुगेको छ । यी दुवै आयोजनाबाट चालु वर्षको अन्त्यसम्ममा नेपालको कुल जलविद्युत उत्पादनमा १५१.५ मेगावाट थप भई ५२४.९ मेगावाट (कुल क्षमताको ०.६ प्रतिशत) पुग्ने छ । निजी क्षेत्रबाट निर्माण भैरहेको चिलिमे खोला, रसुवा (२० मेगावाट) र पिलुवा खोला, संखुवासभा (३ मेगावाट)

> मञ्जुषा १० (१)
>
> **जल विद्युत विकास नीति २०५८**
>
> श्री ५ को सरकारले जल विद्युत विकास नीति २०५८ लाई स्वीकृत गरेको छ ।
>
> उद्देश्य :
>
> - कम लागतमा विद्युत उत्पादन गरी देशको जलशक्ति क्षमताको उपभोग गर्ने ।
> - उचित मूल्यमा राष्ट्रव्यापी रुपमा गुणात्मक एवं भरपर्दो विद्युत सेवा प्रदान गर्ने ।
> - विद्युतीकरणलाई आर्थिक क्रियाकलापसंग आवद्ध गर्ने ।
> - ग्रामिण आर्थिक विकासको लागि ग्रामिण विद्युतिकरण आयोजना विस्तार गर्ने र
> - जल विद्युतलाई निकासीमूलक वस्तुको रुपमा विकास गर्ने।
>
> मूख्य नीतिहरु
>
> - बुट (Build-operative-own-transfer) सिद्धान्तको आधारमा जलविद्युत आयोजना संचालन गर्न प्रोत्साहन गर्ने ।
> - तल्लो तटिय फाइदा (Down stream benifit) बाट अत्याधिक उपलव्धी हासिल गर्न वहुउद्देश्य ठूलाजल भण्डार आयोजना (Storage Project) लागू गर्ने ।
> - स्वदेशी तथा विदेशी लगानीकर्तालाई आकर्षण गर्न पारदर्शी एवं प्रोत्साहन (incentive) दिने कार्य प्रणाली लागू गर्ने ।
> - देशको पूँजी बजारलाई जल विद्युत उत्पादन क्षेत्रमा लगानी गर्न प्रेरित गर्ने ।
> - द्विपक्षीय र क्षेत्रीय सहयोगको आधारमा विद्युत निकासी गर्न प्रोत्साहन गर्ने ।
> - सरकारी निकायलाई पुनर्गठन गरी प्रतिस्पर्धात्मक रुपमा सामुदायिक/सहकारी संस्था, स्थानिय र निजीक्षेत्रलाई जल विद्युत उत्पादन, विस्तार र वितरण कार्यमा प्रोत्साहन गर्ने ।

जलविद्युत आयोजनाको निर्माण कार्य आगामी आर्थिक वर्षमा सम्पन्न हुने अनुमान गरिएको

छ । जर्मन सरकारको सहयोगमा मध्य मर्स्याङ्गदी जल विद्युत आयोजना, लमजुङ्ग (७० मेगावाट) को निर्माण कार्य यसै आर्थिक वर्ष देखि शुरु भएको छ । सौर्य शक्तिबाट विद्युत उपलब्ध गराइएका हुम्ला र मुगु जिल्लामा भरपर्दो विद्युत सेवा पुऱ्याउन क्रमशः ५०० र ४०० किलोवाट क्षमताको हेल्दुङ र गमगाड साना जल विद्युत आयोजनाहरु गत आर्थिक वर्ष देखिनै संचालनमा आएका छन ।

१०.७ फेमेखोला, पाँचथर (९९५ किलोवाट) र खुदी खोला लमजुङ्ग (३४५० किलोवाट) वाट उत्पादित विद्युत खरीद सम्भौता गत आर्थिक वर्षको अन्त्य तिर सम्पन्न भएको थियो भने यस आर्थिक वर्षमा मेलुङ खोला, रसुवा (५ मेगावाट) लाङटाङ खोला रसुवा (१० मेगावाट) र सुनकोशी सानो, सिन्धुपाल्चोक (२.६ मेगावाट) वाट उत्पादन हुने विद्युत प्राधिकरणले खरीद गर्ने सम्भौता भएको छ ।

१०.८ विद्युतीकरणको विस्तार गर्दै लैजाने क्रममा आर्थिक वर्ष २०५७/५८ को अन्त्य सम्ममा उच्च भोल्टेज प्रसारण लाइन १३२ के.भी. स्तरमा सिंगल सर्किट १०४० कि.मी., डवल सर्किट ३६७ कि.मी. ६६ के.भी. स्तरमा सिंगल सर्किट २०५ कि.मी., डवल सर्किट १६१ कि.मी., चार सर्किट २.५ कि.मी., ६६ र १३२ के.भी. संयुक्त लाइन २२ कि.मी. र ३३ के.भी. स्तरका १५३६ कि.मी. चालु रहेका छन् । चालु आर्थिक वर्षमा १३२ के.भी. तर्फ कालीगण्डकी 'ए' वुटवल (४४ कि.मी.) र हेटौडा ढल्केवर तथा वुटवल-वर्दघाट दोश्रो सर्किट (१७४ कि.मी.), ३३ के.भी. तर्फ वसन्तुपुर-तेह्रथुम (१५ कि.मी.) को निर्माण कार्य सम्पन्न भएको छ । १३२ के.भी. तर्फ कालीगण्डकी 'ए' पोखरा (६६ कि.मी.) को निर्माण कार्य अन्तीम चरणमा पुगेको छ । हाल ३३ के.भी. तर्फ इलाम-फिदिम-ताप्लेजुङ्ग (१०० कि.मी.), सितलपाटी-मुखिकोट (५० कि.मी.), वुइपा-ओखलढुगा (३३ कि.मी.) र छिन्चु-जाजरकोट (७० कि.मी.) प्रशारण लाइनहरु निर्माणाधिन रहेका छन् । भारतसंग ५० मेगावाटसम्मको विद्युत आदानप्रदान भैरहेकोमा सो क्षमतालाई बढाई १५० मेगावाट पुऱ्याउन सहमति भए वमोजिम थप विद्युत आदान प्रदान हुन नेपाल भारत सिमाका थप ३ विन्दुमा प्रशारण लाइन वनाउन सैद्धान्तिक सहमति भएको छ । सो अनुसार १३२ के.भी. क्षमताका वुटवल-सुनौली (२५ कि.मी.), परवानीपुर-वीरगंज (२५ कि.मी.), ढल्केवर-भित्तामोड (४५ कि.मी.) प्रशारण लाइनहरु वनाउन आवश्यक अध्ययन एवं तयारीको कार्यहरु भै रहेको छ । बढ्दो शहरीकरणले गर्दा काठमाण्डौ उपत्यकाको प्रशारण क्षमता सुदृढीकरण गर्न १३२ के.भी. क्षमताको काठमाण्डौ रिंगमन प्रशारण लाइन बनाउने आवश्यक अध्ययन एवं तयारीको कार्यहरु भैरहेको छ ।

१०.९ अधिराज्यका मुख्य सव-स्टेशन तथा पावर हाउसहरुलाई भार प्रेषण केन्द्रसंग संचार प्रणाली तथा स्काडामा (SCADA)आवद्ध गरी प्रणाली नियन्त्रण गर्ने र उत्पादन वृद्धि गर्ने उद्धेश्यका साथ भार प्रेषण केन्द्र विस्तार आयोजना चालु रहेको छ ।

१०.१० विद्युत वितरण तर्फ श्री ५ को सरकार एवं नेपाल विद्युत प्राधिकरणको आफ्नो श्रोतबाट विद्युत सेवा पुगेका सवै जिल्लामा विद्युतीकरण विस्तार गर्ने कार्य जारी राखिएको छ । अधिराज्यका ३५ जिल्लाका थप स्थानहरुमा विद्युतीकरण गर्न एशियाली विकास वैंकसंग ऋण सम्भौता भैसकेको छ भने भक्तपुर, ललितपुर, नुवाकोट, धादिङ. र काभ्रेपलाञ्चोक लगायतका जिल्लाहरुका थप स्थानहरुमा विद्युतीकरण गर्न विश्व

वैंकसंग ऋणको लागि वार्ता चलीरहेको छ । मध्य पश्चिम र सुदुर पश्चिमाञ्चल विकास क्षेत्रका जिल्लाहरुमा विद्युतीकरण गर्न सहयोगको लागि कार्यहरु भैरहेको छ ।

१०.११ जल विद्युत सेवा विस्तारको लागि यसका संभावनाका विस्तृत अध्ययनको क्रम जारी नै रहेको छ । कुलेखानी तेश्रो र चमेलियागाडको विस्तृत अध्ययन तथा तिनको विकासको लागि पूर्वाधार विकास गर्ने कार्य जारी रहेको छ । जलासययुक्त आयोजनाको अध्ययन गर्ने क्रममा पहिचान गरिएका १०२ वटा संभाव्य आयोजनाहरुको प्रारम्भिक छनौटद्वारा ४ वटा आकर्षक देखिएका आयोजनाहरु जस्तै माथिल्लो सेती (तनहूँ), मादी इशानेश्वर (कास्की, लम्जुङ.), लाङटाङ (रसुवा) र मादी/वेगनास (कास्की) संभाव्यता अध्ययनको लागि छानी हाल २ वटाको संभाव्यता अध्ययन जारी राखिएको छ । कन्काई वहुउद्देश्यीय आयोजनाको अध्ययन अध्यावधिक गर्ने कार्य भैरहेको छ भने नेपाल विद्युत प्राधिकरण र निजी क्षेत्रको संयुक्त लगानीमा जलविद्युत आयोजना विकास गर्न माथिल्लो कर्णाली, खिम्ती-२, ठूलो ढुंगा, माथिल्लो तामाकोशी, माथिल्लो मोदि 'ए' जस्ता आयोजनाहरुको अध्ययन कार्य जारी रहेको छ । साना जलविद्युत गुरुयोजना अध्ययन आयोजनाबाट ५ मेगावाट भन्दा कम क्षमताको संभाव्य आयोजनाहरुको विभिन्न स्तरको अध्ययन कार्य यस वर्ष पनि जारी नै रहेको छ ।

१०.१२ आर्थिक वर्ष २०५७।५८ मा जल विद्युत, तापीय विद्युत र भारतबाट पैठारी समेत गरी जम्मा १८६८.४ गेगावाट घण्टा विद्युत आपूर्ति भएकोमा चालु आर्थिक वर्ष २०५८।५९ मा २७ प्रतिशतले वृद्धि भई २३७२.९ गेगावाट घण्टा पुग्ने अनुमान छ । यसरी उपलव्ध विद्युत मध्ये आर्थिक वर्ष २०५७।५८ मा १२८१.१ गेगावाट घण्टा आन्तरिक खपत भएको र १२६ गेगावाट घण्टा भारत निकासी भई विद्युत ऱ्हास ४६१.३ गेगावाट घण्टा भएकोमा चालु वर्षमा आन्तरिक खपत तर्फ १४७२.५ गेगावाट घण्टा र भारत निकासी १७० गेगावाट घण्टा भई विद्युत ऱ्हास ७३०.४ गेगावाट घण्टा हुने अनुमान गरिएको छ ।

१०.१३ क्षेत्रगत हिसावमा आर्थिक वर्ष २०५७।५८ मा विद्युत ऊर्जाको उद्योग क्षेत्रले ३७ प्रतिशत, गार्हस्थ्य क्षेत्रले ३६.८ प्रतिशत, व्यापारिक क्षेत्रले ६.७ प्रतिशत, निर्यात ९ प्रतिशत र विविध क्षेत्रले १०.५ प्रतिशत उपभोग गरेको देखिन्छ । आर्थिक वर्ष २०५८।५९ मा औद्योगिक क्षेत्रले ३६.८ प्रतिशत, गार्हस्थ्य क्षेत्रले ३६.५ प्रतिशत, व्यापारिक क्षेत्रले ६.३ प्रतिशत, निर्यात १०.४ प्रतिशत र विविध क्षेत्रले १० प्रतिशत उपयोग गर्ने अनुमान गरिएको छ ।

१०.१४ आर्थिक वर्ष २०५७।५८ को अन्त्यमा विद्युत खपत गर्ने ग्राहक संख्यामा ७६५ हजार पुगेकोमा आर्थिक वर्ष २०५८।५९ को अन्त्यमा विद्युत खपत गर्ने ग्राहक संख्या ८८५ हजार पुग्ने अनुमान छ । त्यस्तै आर्थिक वर्ष २०५७।५८ मा कुल जनसंख्याको १८ प्रतिशतले मात्र विद्युत सेवा उपभोग गरेकोमा आर्थिक वर्षमा यो प्रतिशत २० पुग्ने अनुमान छ ।

## पेट्रोलियम पदार्थ

१०.१५ आर्थिक वर्ष २०५७।५८ मा पेट्रोलियम पदार्थको खपतमा १.७ प्रतिशतले वृद्धि भई ८२९,४६७ किलो लीटर खपत भएको छ । जसको मूल्य रु. १८ अर्व ६८ करोड ५७

लाख छ । आर्थिक वर्ष २०५७।५८ को प्रथम ८ महिनामा ५३३,५७९ किलो लीटर पेट्रोलियम पदार्थ खपत भएकोमा चालु आर्थिक वर्षको प्रथम आठ महिनामा ४.१ प्रतिशतले खपत वृद्धि भएको छ । जसको मूल्य रु. ११ अर्व ६३ करोड ५६ लाख छ । बस्तुगत निर्यातको तुलनामा पेट्रोलियम पदार्थको आयात २०५७।५८ मा ३३.६ प्रतिशत रहेकोमा २०५८।५९ मा ४४.१ प्रतिशत रहने अनुमान छ ।

१०.१६ अत्याधिक मात्रामा खपत हुने पेट्रोलियम पदार्थमा डिजेल, मट्टितेल, पेट्रोल र हवाई इन्धन नै देखिन्छ । आर्थिक वर्ष २०५७।५८ मा डिजेलको अंश ४०.२ प्रतिशत, पेट्रोलको अंश ७.३ प्रतिशत, मट्टितेलको अंश ३९.२ प्रतिशत, हवाई इन्धनको अंश ७.९ प्रतिशत तथा एल.पि.ग्यासको अंश ४.८ प्रतिशत रहेको देखिन्छ । आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा खपत भएको पेट्रोलियम पदार्थ मध्ये डिजेलको अंश ३३.२ प्रतिशत, पेट्रोलको अंश ७.४ प्रतिशत, मट्टितेलको अंश ४५.५ प्रतिशत, हवाई इन्धनको अंश ५.७ प्रतिशत र एल.पि.ग्यासको अंश ५.५ प्रतिशत रहेको छ ।

## कोइला

१०.१७ आर्थिक वर्ष २०५७।५८ मा कुल व्यवसायिक ऊर्जा खपतको २२.६ प्रतिशत अर्थात २ लाख ४६ हजार टन तेल शक्ति वरावरको कोइला खपत भएकोमा चालु आर्थिक वर्षमा २०.७ प्रतिशतले वृद्धि भई २ लाख ९७ हजार टन तेल शक्ति वरावर कोइला खपत हुने अनुमान छ । आर्थिक वर्ष २०५७।५८ मा कुल कोइला खपत मध्ये ९९.६ प्रतिशत औद्योगिक क्षेत्रमा र ०.४ प्रतिशत गार्हस्थ्य क्षेत्रमा खपत भएको देखिन्छ ।

## वैकल्पिक ऊर्जा

१०.१८ नेपालमा वैकल्पिक ऊर्जा प्रविधिको दिगो विकास गरी ग्रामीण क्षेत्रमा ऊर्जाको परिपूर्ति गर्न, ऊर्जा प्रविधिबाट विभिन्न स-साना उद्योग तथा व्यवसायहरु संचालन गरी गरिव जनताको आर्थिक सामाजिक स्थितिमा सुधार ल्याउने, क्षेत्रीय सन्तुलन कायम गर्ने र वन विनासबाट ग्रामीण क्षेत्रमा देखिएको वातावरणीय समस्यालाई न्यून गर्ने उद्देश्य अनुरुप श्री ५ को सरकारले नविकरणीय ऊर्जा अनुदान व्यवस्था २०५७ लागू गरेको छ । विभिन्न दातृ राष्ट्रहरुबाट प्राप्त हुने अनुदान रकमलाई समेत व्यवस्थित एवं छिटो छरितो रुपले परिचालन गर्न नविकरणीय ऊर्जा अनुदान परिचालन कार्य विधि २०५७ समेत लागू गरेको छ । सौर्य ऊर्जा तथा लघुजल विद्युत आयोजनाको लागि डेनिस सरकारको अनुदानमा आवश्यक ऋण प्रदान गर्न वैकल्पिक ऊर्जा प्रवर्द्धन केन्द्रमा एउटा आन्तरिक कोष स्थापना गरी विभिन्न कार्यहरु संचालन भैरहेको छ ।

## बायोग्यास

१०.१९ विगत वर्षहरुमा जस्तै चालु वर्षमा पनि बायोग्यास प्लाण्ट स्थापना गर्ने कार्यले निरन्तरता पाएको छ । आर्थिक वर्ष २०५७।५८ मा जम्मा १५,८०० बायोग्यास प्लान्ट स्थापना गर्ने र सो को लागि रु. १३ करोड ८ लाख ९३ हजार लगानी गर्ने लक्ष्य रहेकोमा ४,१९७ वायोग्यास प्लाण्टहरु स्थापना भई सो को लागि रु. ९ करोड ८३ लाख ८ हजार ऋण लगानी भएको थियो । चालु आर्थिक वर्ष २०५८।५९ को प्रथम

आठ महिना सम्ममा १६०० प्लाण्टहरु स्थापना भएको र सो को लागि रु. ३ करोड २७ लाख ६७ हजार ऋण कृषि विकास वैंकबाट प्रवाह भएको छ ।

## लघु जलविद्युत

१०.२० ग्रामीण क्षेत्रका वन जंगलमा परिरहेको ऊर्जाको चापलाई कम गर्न तथा वगेर खेर गैरहेको जलश्रोतलाई सदुपयोग गर्नुको साथै छिटोछरितो तवरबाट विद्युत उत्पादन गर्ने उद्देश्यले अभिप्रेरित भै कम क्षमता भएका लघु विद्युत केन्द्र स्थापना कार्यले चालु आर्थिक वर्षमा पनि निरन्तरता पाइनै रहेको छ । आर्थिक वर्ष २०५७।५८ मा रु. ३८ लाख ३१ हजार लगानी भई ८०.५ किलोवाट विद्युत उत्पादन भएको थियो । आर्थिक वर्ष २०५८।५९ मा रु. २ करोड ७५ लाख लगानी गरी ५०० किलोवाट उत्पादन हुने लक्ष्य राखिएकोमा चालु आर्थिक वर्षको प्रथम ८ महिना सम्ममा कृषि विकास वैंकबाट रु. १ करोड ९ लाख ४५ हजार लगानी भई १९९ किलोवाट विद्युत शक्ति उत्पादन भएको छ ।

## सौर्य ऊर्जा

१०.२१ नेपालमा मासिक औसत सौर्य ऊर्जा हिमाली क्षेत्र, पहाडी क्षेत्र, तराई क्षेत्र तथा नेपाल अधिराज्य भरी क्रमशः ६.७७, ६.३३, ७.०७ र ४-५ किलोवाट घण्टा/प्रतिवर्ग मीटर प्रति दिन• विद्युत उत्पादन हुन सक्ने अनुमान भएतापनि त्यसको समुचित विकास हुन सकेको छैन । घरेलु सौर्य ऊर्जा (Solar PV Home System) तर्फ गत आर्थिक वर्ष २०५७।५८ मा कृषि विकास वैंक अन्तर्गत रु. १ करोड ११ लाख ९२ हजार लगानी गरी ५०८ वटा सौर्य ऊर्जा प्रणाली जडान गरिएको थियो । चालु आर्थिक वर्ष २०५८।५९ मा कृषि विकास वैंकबाट ३ करोड ९० लाख ऋण प्रदान गर्ने लक्ष्य राखिएकोमा प्रथम आठ महिनामा रु. ७७ लाख ६० हजार ऋण उपलब्ध गराई ३९४ वटा सौर्य ऊर्जा प्रणाली जडान गरिसकिएको छ ।

## वन

१०.२२ नेपालको प्राकृतिक सम्पदाको श्रोत को रुपमा रहेको वन जंगलको स्थान जलश्रोत पछि मुख्य रुपमा रहेको छ । वातावरणीय स्वच्छता एवं सन्तुलन कायम राखी जनतालाई दैनिक रुपमा आवश्यक पर्ने इन्धनको आवश्यकता पुरा गर्न, राजस्व परिचालनमा वृद्धि ल्याउन एवं विकास निर्माणको कार्यमा आवश्यक पर्ने निर्माण सामाग्रीको आपूर्ति गर्न समेत वन जंगलको सुधार, विस्तार एवं संरक्षण अपरिहार्य भएको छ । वन तथा भू-संरक्षण मन्त्रालय अन्तर्गत विदेशी दातृ संस्था तथा श्री ५ को सरकारको श्रोतबाट संचालित मुख्य मुख्य आयोजना एवं कार्यक्रमहरुमा राष्ट्रिय तथा कवुलियत वन विकास कार्यक्रम २६ जिल्लामा, चुरिया वन विकास कार्यक्रम (GTZ) ३ जिल्लामा, वन सम्वर्द्धन तथा वृक्ष सुधार केन्द्र (DANIDA), सामुदायिक वन विकास कार्यक्रम (DANIDA) ३ जिल्लामा, जिविकोपार्जनको लागि वन कार्यक्रम (DFID) ७ जिल्लामा, वातावरण तथा वन उद्यम कार्यक्रम (USAID) ८ जिल्लामा, सिन्धु काभ्रे वन विकास आयोजना (AUSAID) २ जिल्लामा, प्राकृतिक श्रोत व्यवस्थापन क्षेत्र कार्यक्रम (DANIDA) १७ जिल्लामा संचालन भएका छन् भने राष्ट्रिय तथा

• Source : Center for Energy Studies, Institute of Engineering, TU

कवुलियत वन विकास कार्यक्रम, सामुदायिक वन विकास कार्यक्रम (DANIDA) प्राकृतिक श्रोत व्यवस्थापन क्षेत्र कार्यक्रम (DANIDA) तथा जडिवुटी विकास कार्यक्रम जस्ता आयोजनाहरु विशेष प्राथमिकता प्राप्त आयोजना र कार्यक्रममा राखिएको छ ।

१०.२३ सामुदायिक वन विकास कार्यक्रम अन्तर्गत आर्थिक वर्ष २०५७।५८ मा ११६१ समूह गठन गरी ५२,२४५ हेक्टर वन स्थानीय स्तरमा हस्तान्तरण भएको र यसबाट ९८६८५ परिवार लाभान्वीत भएकोमा आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा २३० समूह गठन गरी १०,३५० हेक्टर वन हस्तान्तरण भै १९५५० परिवार संख्या लाभान्वीत भएका छन । यस्तै कवुलियती वन कार्यक्रम अन्तर्गत आर्थिक वर्ष २०५७।५८ मा पहाडको ८ जिल्ला र तराईको २ जिल्लामा (चितवन र मकवानपुरलाई तराई जिल्लामा देखाइएको) ११९ वटा समूह गठन गरी ४६,००४ हेक्टर वन क्षेत्र हस्तान्तरण भएकोमा आर्थिक वर्ष २०५८।५९ मा पहाडको २४ जिल्ला र तराईको २ जिल्लामा कार्यक्रम लागू गरिएकोमा चालु आर्थिक वर्षको प्रथम आठ महिनामा १३ वटा समूह गठन भएको र वन हस्तान्तरण गर्ने कार्य तर्फ प्रारम्भिक कार्य मात्र सम्पन्न भएको छ ।

१०.२४ आर्थिक वर्ष २०५७।५८ मा सामुदायिक वन विकास कार्यक्रम अन्तर्गत २६ लाख १० हजार, पहाडी कवुलियत वन तथा चरण विकास आयोजना अन्तर्गत १७ लाख, राष्ट्रिय तथा कवुलयित वन आयोजना अन्तर्गत २१ लाख र अन्य आयोजनाहरु अन्तर्गत २६ लाख ७१ हजार गरी वन विभाग अन्तर्गत ९० लाख ८१ हजार र वन पैदावार विकास समिति अन्तर्गत २ लाख ६० हजार गरी कुल ९३ लाख ४१ हजार विरुवाहरु उत्पादन गर्ने लक्ष्य लिइएकोमा २३० गोटा उपभोक्ता समिति गठन गरी सामूदायिक वन विकास कार्यक्रम अन्तर्गत २४ लाख ७७ हजार, पहाडी कवुलियत वन तथा चरण विकास आयोजना अन्तर्गत १० लाख ९५ हजार, राष्ट्रिय तथा कवुलियत वन आयोजना अन्तर्गत १९ लाख ५४ हजार र अन्य आयोजनाहरु अन्तर्गत २१ लाख ५२ हजार गरी वन विभाग अन्तर्गत ७६ लाख ७८ हजार तथा वन पैदावार विकास समिति अन्तर्गत १ लाख ४० हजार गरी जम्मा ७८ लाख १८ हजार विरुवा उत्पादन गरी लक्ष्यको ८३.७ प्रतिशत प्रगति भएको छ । माथि उल्लेखित कार्यक्रमहरु अन्तर्गत आर्थिक वर्ष २०५८।५९ मा वन विभाग अन्तर्गत ७९ लाख १९ हजार र वन पैदावार विकास समिति अन्तर्गत १ लाख ४० हजार गरी जम्मा ८० लाख ५९ हजार विरुवा उत्पादन गर्ने लक्ष्य रहेकोमा चालु आर्थिक वर्षको प्रथम आठ महिनामा विरुवा उत्पादनलाई आवश्यक पर्ने प्रारम्भिक कार्यहरु समाप्त भएका छन् ।

१०.२५ आर्थिक वर्ष २०५७।५८ मा वन विभाग अन्तर्गत संचालित विभिन्न आयोजना एवं कार्यक्रम अन्तर्गत २६०५ हेक्टरमा र वन पैदावार विकास समितिले १११ हेक्टरमा गरी जम्मा २७१६ हेक्टर मा वृक्षारोपण गर्ने लक्ष्य लिएकोमा वन विभाग अन्तर्गत २१५३ हेक्टरमा र वन पैदावार विकास समिति अन्तर्गत ७६ हेक्टर गरी जम्मा २२२९ हेक्टरमा वृक्षारोपण भै लक्ष्यको ८२ प्रतिशत प्रगती भएको छ । चालु आर्थिक वर्षमा सामुदायिक वृक्षारोपण तर्फ १००२ हेक्टर र राष्ट्रिय तथा कवुलियती वन आयोजना र वन व्यवस्थापन कार्य योजना अन्तर्गत १५०० हेक्टरमा गरी जम्मा २५०२ हेक्टरमा वृक्षारोपण गर्ने लक्ष्य लिएकोमा चालु आर्थिक वर्षको पहिलो आठ महिनामा वृक्षारोपण

हुने स्थानमा सफाई एवं तारवार घेर्ने जस्ता प्रारम्भिक कार्य भईरहेका छन् ।

१०.२६ अधिराज्यको महत्वपूर्ण जलाधार क्षेत्रहरुको संरक्षण तथा संवर्द्धन गरी वाढी, पहिरो, भू-क्षय जस्ता प्राकृतिक प्रकोपको चाप कम गर्दै सन्तुलन कायम राख्न भू तथा जलाधार संरक्षण सम्वन्धी विभिन्न कार्यक्रमहरु संचालित छन् । यसरी संचालित कार्यक्रमहरुमा बाग्मती एकिकृत जलाधार व्यवस्थापन आयोजना (EU) अधिराज्यका ५ जिल्लाहरुमा, जलाधार व्यवस्थापन आयोजना (DANIDA) ३ जिल्लाहरुमा, चुरे भू तथा जलाधार संरक्षण कार्यक्रम (GTZ) ३ जिल्लाहरुमा, सिन्धुकाभ्रे भू संरक्षण कार्यक्रम (AUSAID) २ जिल्लामा, उपल्लो आँधिखोला जलाधार व्यवस्थापन आयोजना (CARE/N) १ जिल्लामा, सामुदायिक विकास तथा वन/जलाधार संरक्षण आयोजना (JICA) २ जिल्लामा, सिवालिक भावर जलाधार संरक्षण आयोजना ९ जिल्लामा, भू संरक्षण कार्यक्रम २७ जिल्लामा, दिगो भू व्यवस्थापन ४ जिल्लामा, उपल्लो छल्दी पहाड जलाधार आयोजना (SDC) १ जिल्लामा संचालित छन् । जलाधार व्यवस्थापनका सम्पूर्ण कार्यहरु उपभोक्ता समूह मार्फत जनसहभागितात्मक रुपले सम्पन्न गर्ने नीति लिइएको छ ।

१०.२७ पहाडी क्षेत्रमा पाइने जडिवुटीको संरक्षण एवं विकास गर्न स्थानीय जनतालाई पनि सहभागी वनाई उनीहरुको आय आर्जनमा समेत वृद्धि गराउने उद्देश्यले कवुलियत वन, सामुदायिक वन तथा निजी क्षेत्रमा समेत जडिवुटी खेती गराउने नीति लिइएको र हाल जडिवुटी प्रवर्द्धन आयोजना र जडिवुटी विकास कार्यक्रम लागू गरिएको छ । आर्थिक वर्ष २०५७।५८ मा कवुलयित वन तर्फ ४५६ हेक्टर, जडिवुटी उत्पादन तथा प्रशोधन कम्पनी लि. तर्फ ६५६ हेक्टर तथा निजी क्षेत्र तर्फ ८५ हेक्टर गरी जम्मा ११९७ हेक्टरमा जडिवुटी खेती गरिएको छ । चालु आर्थिक वर्षमा सामुदायिक वन तर्फ १० हेक्टर जडिवुटी उत्पादन तथा प्रशोधन कं.लि. तर्फ ६५६ हेक्टर र निजी क्षेत्र अन्तर्गत ८५ हेक्टरमा जडिवुटी खेती विस्तार गर्ने लक्ष्य रहेको छ । आर्थिक वर्ष २०५७।५८ मा ४ करोड ४१ लाख ६२ हजार मूल्य वरावरको जडिवुटी बिक्री भएको छ भने चालु आर्थिक वर्ष को प्रथम आठ महिनामा ४७ लाख ५८ हजार मूल्य वरावरको जडिवुटी बिक्री भएको छ ।[∞]

## राष्ट्रिय निकुञ्ज तथा वन्य जन्तु संरक्षण

१०.२८ राष्ट्रिय निकुञ्ज तथा वन्य जन्तु संरक्षण अन्तर्गत संरक्षित क्षेत्रहरुले देशको कुल भू-भाग मध्ये आर्थिक वर्ष २०५७।५८ मा १८.१ प्रतिशत भू-भाग ओगटेकोमा सो वृद्धि भई आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा १८.३ प्रतिशत पुगेको छ ।

१०.२९ संरक्षित क्षेत्रको आम्दानीको ५० प्रतिशत रकम सोही संरक्षित क्षेत्रको मध्यवर्ती क्षेत्रको सामुदायिक विकासमा खर्च गरिने नीति अनुसार आर्थिक वर्ष २०५७।५८ सम्म विभिन्न उपभोक्ता समिति मार्फत शाही चितवन राष्ट्रिय निकुञ्ज तर्फ ५० प्रतिशत रकम निकासा रु ७ करोड ५७ लाख ७३ हजार मध्ये रु. ५ करोड २० लाख ५३ हजार, शाही वर्दिया राष्ट्रिय निकुन्ज तर्फ १ करोड ३६ लाख ३२ हजार निकासा मध्ये रु. ४८ लाख

---

[∞] १४ जिल्लाको मात्र समावेश

७८ हजार खर्च भएको छ भने लाङटाङ निकुञ्ज तर्फ रु. ७० लाख २७ हजार निकासा भएको तर खर्च हुन नसकेको देखिन्छ ।

१०.३० श्री ५ को सरकारबाट संरक्षित क्षेत्रमा पर्यटन प्रवर्द्धन गर्ने कार्यमा टेवा पुऱ्याउन शाही चितवन राष्ट्रिय निकुञ्ज र शाही वर्दिया राष्ट्रिय निकुञ्जको पर्यटन व्यवस्थापन योजना स्वीकृत भैसकेको छ र कञ्चनजंगा संरक्षण क्षेत्र र शे-फोक्सुण्डो राष्ट्रिय निकुञ्जको पर्यटन व्यवस्थापन आयोजनाको तयारी भैरहेको छ ।

१०.३१ विभिन्न संरक्षित क्षेत्रमा रहेका होटल, लजहरुलाई व्यवस्थित गर्ने क्रममा नयाँ होटललाई मध्यवर्ती क्षेत्रमा मात्र संचालन गर्ने अनुमति दिने र हाल संरक्षित क्षेत्र भित्र रहेका होटल, लजहरुलाई तिनीहरुको म्याद भुक्तान भै सकेपछि क्रमशः मध्यवर्ती क्षेत्रमा स्थानान्तरण गर्दै जाने नीति रहेको छ । संरक्षित एवं मध्यवर्ती क्षेत्रहरुमा संचालित विभिन्न आयमूलक, सीपमूलक, सामुदायिक कार्यक्रमहरुबाट हालसम्म जम्मा ४०,००० जना भन्दा बढी लाभान्वीत भैसकेका छन् । यी कार्यक्रमहरु ९ वटा संरक्षित क्षेत्रहरुमा संचालित छन् ।

१०.३२ पारम्परिक ऊर्जा एवं गृहनिर्माण, फर्निचर लगायत विभिन्न रुपमा प्रयोग हुदै आएको वन्य सम्पदामा काठ दाउराले प्रमुख स्थान ओगटेकोले यसको संस्थागत रुपमा सुव्यवस्थित तरिकाले बिक्री वितरण गर्ने क्रममा दि टिम्वर कर्पोरेशन अफ नेपालले आर्थिक वर्ष २०५७।५८ मा गोलिया काठ ५ लाख ५० हजार क्यू फिट, चिरान काठ २० हजार ६ सय क्यू फिट र दाउरा ८ हजार ३ सय ५३ चट्टा बिक्री गरेको छ । चालु आर्थिक वर्षको प्रथम आठ महिनामा गोलीया काठ १ लाख ६९ हजार ४ सय क्यू फिट, चिरान काठ ६ हजार क्यू फिट र दाउरा १ सय पैसठ्ठी चट्टा बिक्री गरेको छ ।

## जनसंख्या तथा वातावरण

१०.३३ राष्ट्रिय जनगणना २०५८ को नतिजा अनुसार २०४८-५८ को अवधिमा देशको जनसंख्यामा वार्षिक औसत २.२४ प्रतिशतले वृद्धि भई २०५८ मा देशको जनसंख्या २,३१,५१,४२३ पुगेको छ । जनसंख्या वृद्धिको कारण उच्च प्रजनन दर नै रहेको देखिन्छ । नेपालको प्रजनन दर ४.१ प्रति महिला रहेको कुरा स्वास्थ्य मन्त्रालयबाट हालै सम्पन्न नेपाल जनसाङख्यिक तथा स्वास्थ्य सर्भेक्षण (२०५८) बाट देखिन आउछ। वि.सं. २०५८ सालको वार्षिक जनसंख्या वृद्धिदर कायमै रहने हो भने नेपालको जनसंख्या आगामी ३१ वर्षमा दोब्बर हुने स्थिति देखिन्छ ।

१०.३४ वि.सं. २०७३ सम्ममा कुल प्रजनन दरलाई विस्थापन स्तर (करिव २.१) मा ओराल्ने दीर्घकालिन लक्ष्य अनुरुप मौजुदा जनसंख्याको समुचित व्यवस्थापन गर्न जनसंख्या तथा वातावरण मन्त्रालयबाट आर्थिक वर्ष २०५७।५८ र २०५८।५९ मा नीतिगत सुधार तथा संस्थागत सुधार कार्यक्रमहरु संचालन गरेको छ । नीतिगत सुधार कार्यक्रममा जनसंख्या व्यवस्थापन अन्तरक्षेत्रीय प्रयासबाट नै संभव हुने भएकोले विभिन्न क्षेत्रगत विकास कार्यक्रमहरु जनसंख्या व्यवस्थापनमा विविध विषयहरु क्रमशः एकिकरण गर्दै लैजाने, देशको भावी जनसाङख्यिक प्रकृतिमा मुख्य भूमिका खेल्ने वर्गमा किशोर किशोरीहरु नै भएकोले उनीहरुलाई लक्ष्यित गरी विभिन्न कार्यक्रमहरु संचालन गर्ने, स्थानीय गैर सरकारी संस्थाहरु परिचालन गरी आम संचारका माध्यमसम्म पुहँच

नभएका वर्ग माझ जनसंख्या सूचना, शिक्षा र संचार कार्यक्रमको विस्तारका साथै नीति तर्जुमाकार तथा अन्य भागीदार माझ पैरवी (Advocacy) प्रयास समेत गर्ने र स्थानीय स्वायत्त शासनको अवधारणा अनुरुप जनसंख्या व्यवस्थापनका प्रयासहरुलाई जिल्ला विकास समितिको अगुवाईमा स्थानीय तहमा विस्तार गर्ने जस्ता कार्यहरु गरिएको छ । संस्थागत सुधार तर्फ जनसंख्या तथा वातावरण मन्त्रालयमा किशोर किशोरी तथा युवा युवती शाखा सिर्जना गरी किशोर किशोरी (१०-१९ वर्ष) तथा युवा युवती (१५-२४ वर्ष) लाई लक्षित कार्यक्रमहरु समन्वयात्मक रुपमा संचालन गर्ने व्यवस्था मिलाइएको छ । राष्ट्रिय जनसंख्या समितिको सचिवालय र जनसंख्या व्यवस्थापनका क्षेत्रमा राष्ट्रिय केन्द्र विन्दुको (National Focal Point) रुपमा जनसंख्या तथा वातावरण मन्त्रालयबाट विभिन्न समन्वय समितिहरु गठन गरी श्री ५ को सरकारका क्षेत्रगत मन्त्रालय, निकाय तथा गैर सरकारी क्षेत्रबाट सञ्चालित जनसंख्या व्यवस्थापनका कार्यक्रमहरु वीच समन्वय स्थापित गर्ने प्रयास गरिएको छ ।

१०.३५ आर्थिक वर्ष २०५७।५८ मा जनसंख्या तथा वातावरण मन्त्रालयबाट राष्ट्रिय कार्यक्रम र राष्ट्रिय जनसंख्या तथा वातावरण सूचना, शिक्षा र संचार कार्यक्रम गरी जनसंख्या व्यवस्थापनको क्षेत्रमा दुई आयोजनाहरु संचालन गरिएको थियो । रौतहट जिल्लामा २० गा.वि.स.का ८० स्थानमा २० वटा स्थानीय गैर सरकारी तथा सहकारी संस्थाहरु परिचालन गरी आम संचारका माध्यमसम्म पहुँच नभएका वर्गलाई लक्षित गरी अनौपचारिक जनसंख्या शिक्षा शिविर, रेडियो, टेलिभिजन, एफएम रेडियो लगायतका आम संचारका माध्यमबाट साप्ताहिक तथा पाक्षिक श्रृंखलावद्ध जनचेतना अभिवृद्धि कार्यक्रम संचालन, विभिन्न रेडियो तथा टेलिभिजन सन्देश उत्पादन तथा प्रसारण एवं पुस्तिका, क्यालेण्डर, पोष्टर लगायतका सूचना सामग्री उत्पादन तथा वितरण, चौमासिक टुकि पत्रिका प्रकाशन तथा अधिराज्यका सवै गा.वि.स. एवं माध्यमिक विद्यालयहरुमा वितरण, जनसंख्या र विकास एकिकरण विषयक विभिन्न क्षेत्रीय तथा जिल्ला स्तरीय गोष्ठीहरु जस्ता कार्यक्रमहरु सम्पन्न भएका थिए भने आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा किशोर-किशोरी तथा युवा-युवतीलाई लक्षित युवा जनसंख्या विकास कार्यक्रमको रुपरेखा तयार र स्वीकृति, रेडियो, टेलिभिजन, एफएम रेडियो लगायतका आम संचारका माध्यमबाट साप्ताहिक श्रृङखलावद्ध जनचेतना अभिवृद्धि गर्ने कार्यक्रम संचालन, विभिन्न रेडियो तथा टेलीभिजन सन्देश उत्पादन तथा प्रसारण एवं पुस्तिका पोष्टर लगायत सूचना सामाग्री उत्पादन तथा वितरण र चौमासिक टुकि पत्रिका उत्पादन गरी गा.वि.स. तहसम्म वितरण गर्ने जस्ता कार्य भैरहेका छन् ।

१०.३६ आर्थिक वर्ष २०५७।५८ मा प्रदुषण सूचक र विद्युतीय वोर्ड स्थापना वायु प्रदुषण अनुगमन केन्द्र स्थापना, वायु, पानी, ध्वनीको मापदण्ड तर्जुमा गरिएकोमा चालु आर्थिक वर्ष २०५८।५९ मा पनि यिनै कार्यक्रमलाई निरन्तरता दिनुको साथै विराटनगर, वीरगंज, पोखरा, भैरहवा, नेपालगंज, नारायणघाट लगायत अन्य नगर क्षेत्रमा नगरपालिकाको माग वमोजिम हरियो स्टीकर प्रणाली लागू गर्ने कार्यक्रम रहेको छ भने यसैगरी वातावरणीय प्रभाव मूल्यांकन कार्यक्रम, दीर्घकालिन वातावरण नीति, भू-उपयोग तथा संरक्षण कार्यक्रम, जनचेतना अभिवृद्धि गर्ने कार्यक्रम पनि चालु आर्थिक वर्षमा रहेको छ ।

## चुनौतीहरु

१०.३७ देशमा दिन प्रतिदिन ऊर्जाको मागमा वृद्धि हुदै गएको छ भने कुल ऊर्जा खपतको अधिकांश हिस्सा परम्परागत ऊर्जाबाट नै पूर्ति भएको देखिन्छ । यसबाट देशको वन संपदामा ठूलो चाप परी वातावरणीय असन्तुलन बढ्दै गएको छ । माग वमोजिमको ऊर्जा आपूर्ति गर्न र वन क्षेत्रको विनास रोक्न निर्माणाधीन विद्युत आयोजनाको निर्माण यथासम्भव चाडो पूरा गर्नुको साथै साना जल विद्युत आयोजना सम्पन्न गराई सुलभ तरीकाबाट विद्युत आपूर्ति गर्नु नै अहिलेको ठूलो चुनौती रहेको छ ।

१०.३८ देशमा विद्यमान वैकल्पिक ऊर्जामा वायोग्यास, लघु जलविद्युत सौर्य शक्ति तथा वायुशक्तिको नै प्रमुख स्थान रहेको छ । यीनीहरुको संभाव्यता प्रसस्त मात्रामा भएतापनि समुचित विकास भने हुन सकेको छैन । वर्तमान स्थितिमा सुरक्षाको प्रतिकूल परिस्थितिले गर्दा निर्माण सामाग्री प्राप्त गर्न कठिनाई भएको, अनुदान रकमको उचित व्यवस्था हुन नसक्नु जस्ता समस्या देखिएको छ ।

१०.३९ राष्ट्रिय जनगणना २०५८ को नतिजा अनुसार २०४८-२०५८ को अवधिमा देखिएका जनसंख्याको वार्षिक २.२४ वृद्धि दर अझ पनि उच्च नै देखिएको हुँदा जनसंख्या व्यवस्थापनलाई अझ वढी प्रभावकारी वनाउदै जानु एक अर्को चुनौतीको रुपमा रहेको छ ।

१०.४० दुर्लभ जनावरहरुको गैर कानूनी ओसारपसारमा प्रभावकारी नियन्त्रण हुन सकेको देखिदैन । यसको लागि हालसम्म CITES विधेयक पारित नभएको तथा वन्यजन्तु Farming को कानूनी आधार तयार नभएकोले पनि समस्या खडा गरेको देखिन्छ ।

१०.४१ आर्थिक वर्ष २०५७।५८ मा प्रति व्यक्ति जलविद्युत उपभोग ८०.८ किलोवाट घण्टा रहेको छ । यसलाई न्यून विद्युत उपभोगको रुपमा लिनु पर्दछ । तसर्थ, प्रति व्यक्ति विद्युत उपभोग बढाउन उत्पादन बढ्नु पर्ने हुँदा जल विद्युत र उपभोगको परिमाणमा वृद्धि ल्याउनु चुनौतीपूर्ण रहेको छ ।

# ११. यातायात तथा संचार

## सडक यातायात

११.१ नवौं योजना अवधिभर अधिराज्यका अति विकट जिल्लाहरु हुम्ला, मुगु, मनाङ, डोल्पा, सोलुखुम्वु, खोटाङ र मुस्ताङ गरी जम्मा ७ जिल्लाहरु मात्र सडक यातायातबाट नजोडिई वांकी ६८ जिल्लामा सडक यातायात पुऱ्याउने लक्ष्य रहेकोमा नवौं योजना कार्यान्वयनको अन्तिम वर्षमा आइपुग्दा ६५ जिल्लाहरु सडक यातायात प्रणालीमा आवद्ध भैसकेको स्थिति छ ।

आर्थिक वर्ष २०५७।५८ को अन्त्यसम्म कालोपत्र ४ हजार ५६७ कि.मी. खण्डास्मित ३ हजार ७८६ र कच्ची सडक ७ हजार ३५० गरी जम्मा १५ हजार ७०२ कि.मी. सडक रहेकोमा आर्थिक वर्ष ०५८।५९ को प्रथम आठ महिनामा कालोपत्र २७ कि.मी.,

खण्डास्मित ६५ कि.मी. र कच्ची सडक ६५ कि.मी. गरी जम्मा १५७ कि.मी. सडक निर्माण हुन गई २०५८ फाल्गुण मसान्तसम्ममा नेपालको सडक लम्बाई कालोपत्र ४ हजार ५९३ कि.मी., खण्डास्मित ३ हजार ८५१ कि.मी. र कच्ची सडक ७ हजार ४१५ कि.मी. गरी कुल लम्बाई १५ हजार ५९ कि.मी. पुगेको छ ।

तालिका ११ (क) : आर्थिक वर्ष २०५८।५९ को फाल्गुण मसान्तसम्म उपलव्ध सडक सुविधा

| क्र.स. | किसिम | २०५७।५८ को अन्त्यसम्म (कि.मी.) | २०५८।५९ (फाल्गुण मसान्त सम्म थप) कि.मी. | २०५८।५९ (फाल्गुण मसान्तसम्म) को जम्मा | |
|---|---|---|---|---|---|
| | | | | कि.मी. | अंश प्रतिशत |
| १ | कालोपत्र | ४,५६६ | २७ | ४,५९३ | ३०.५ |
| २ | खण्डास्मित | ३,७८६ | ६५ | ३,८५१ | २०.३ |
| ३ | कच्ची सडक | ७,३५० | ६५ | ७,४१५ | ४९.२ |
| | जम्मा | १५,७०२ | १५७ | १५,८५९ | १०० |

## सवारी साधन

११.२ नेपाल अधिराज्यमा आर्थिक वर्ष २०५७।५८ को अन्त्यसम्ममा कुल सवारी साधन संख्या ३ लाख ५ हजार ३९५ रहेकोमा चालु आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा ११ प्रतिशतले वृद्धि भै कुल सवारी साधनहरुको संख्या ३ लाख ३८ हजार ८९२ पुगेको छ । यसरी अधिराज्यमा सरदर चालु वर्षको हालसम्म प्रति कि.मी. २१ वटा सवारी साधनहरु पुगेको देखिन्छ । गत आर्थिक वर्षमा सरदर प्रति कि.मी. १९ सवारी साधन थिए ।

तालिका ११ (ख) : सवारी साधनहरुको संख्या

| किसिम | आ.व. २०५७।५८ सम्म | आ.व. २०५८।५९ फाल्गुण महिनासम्म थप | कुल | प्रतिशत वृद्धि |
|---|---|---|---|---|
| बस | १०५४६ | ६७६ | ११२२२ | ६.४ |
| मिनिबस | २९६१ | ३३६ | ३३०३ | ११.३ |
| ट्रक, टेंकर | २१५८० | १११६ | २२६९६ | ५.२ |
| कार, जीप, भ्यान | ५९११५ | २९२१ | ६२०३६ | ४.९ |
| ट्रयाक्टर | २३९९१ | २१०२ | २६०९३ | ८.८ |
| मोटरसाइकल | १७६४७६ | २६०५५ | २०२५३१ | १४.८ |
| टेम्पो | ६९३४ | २२१ | ७१५१ | ३.२ |
| डोजर, क्रेन र अन्य | ३७९२ | ७० | ३८६२ | १.८ |
| जम्मा | ३०५३९५ | ३३४९७ | ३३८८९४ | ११.० |

| | | | | |
|---|---|---|---|---|
| प्रति कि.मी. सवारी संख्या | १९ | - | २१ | - |

## अन्य यातायात

११.३ रेल्वे सेवा, रोपवे सेवा, ट्रली वस सेवाहरुको संचालन यातायात संस्थानबाट हुदै आएकोमा श्री ५ को सरकारको निर्णयानुसार नेपाल यातायात संस्थान खारेज भएको छ ।

## नीतिगत तथा संस्थागत प्रगति

११.४ सडक यातायातको मूल उद्देश्य सडकद्वारा ढुवानीको कुल लागत घटाउने नीतिगत लक्ष्य अनुरुप स्थानीय सडकको व्यवस्थापन विकेन्द्रीकरण गरी स्थानीय विकास मन्त्रालय अन्तर्गत जि.वि.स. तथा गा.वि.स.लाई सक्षम बनाई हस्तान्तरण गरिने कार्यमा प्रगति भई स्थानीय स्तरका सडक आयोजना स्थानीय विकास मन्त्रालय मार्फत कार्यान्वयन भइरहेको छ ।

११.५ सडक विभागको योजना तथा अनुगमनको क्षमता वृद्धि गर्ने कार्यमा प्रगति भइरहेको छ । मुख्य राजमार्गहरुको योजना तयार गर्ने पेभमेन्ट कण्डिसन, सर्भे ट्राफिक डाटा आदिको रेकर्ड राख्ने कार्यका लागि HMIS (Highway Management Information System) खडा गरी काम भइरहेको छ । १० वर्षे सडक मास्टर प्लान तथा २० वर्षे सडक योजना तयार गर्ने कार्य भइरहेको छ । योजना अनुगमनको लागि छुट्टै इकाई खडा भई कार्य भइरहेको छ ।

११.६ सडक संभार कोष खडा गर्न रोडवोर्ड ऐन संसदबाट स्वीकृत भैसकेको छ । डिभिजन सडक क्षमता वृद्धि गर्न SMD (Strengthen Maintenance Division) खडा गर्ने कार्यमा २३ वटा डिभिजनमा उक्त कार्य योजनालाई लागू गरी नियमित तथा पटके मर्मत कार्य भइरहेको छ । योजनावद्ध मर्मत प्रकृया विकासको लागि SMD Process, Geo-Env. unit र Bridge unit खडा गरी कार्य भइरहेको छ । प्लान्ट म्यानेजमेन्ट कार्यका लागि Data base को व्यवस्था भएको छ । साथै Mechanical Training Centre खडा गरी तालिम संचालन भैरहेको छ । सडक विभागका क्रियाकलाप-हरुलाई जनतासामु राख्ने प्रयासमा Video Documentation कार्यक्रमको तथा Post evaluation कार्यको थालनी आगामी आर्थिक वर्ष देखि शुरु गर्नका लागि चालु आर्थिक वर्षमा तयारी पूरा भै सकेको छ । सडक सुरक्षामा वृद्धिको लागि TESU (Traffic Engineering and Safety

> मन्जुषा ११ (१)
>
> **रोड वोर्ड ऐन, २०५८**
>
> सडक यातायातमा निजी क्षेत्रको सहभागिता बढाउने तथा सडक संभार एवं सुधारको कार्यमा छिटो छरितोपना ल्याई जनतालाई सडक यातायातको सुविधामा निरन्तरता ल्याउने उद्देश्यले तयार गरिएको रोड वोर्ड ऐन, २०५८ संसदबाट पारित भै सकेको छ । यस ऐनमा भएको व्यवस्था अनुसार निजी क्षेत्रबाट सडक निर्माणमा लगानी गर्ने, सवारी शुल्क (Road Cess) असूल गरी संचालन गर्ने तथा सडक मर्मत संभारको समेत व्यवस्था गर्न सकिने भएको छ ।

Unit) खडा भै Traffic Sign Standard तयार गर्ने, र Accident Data Record राख्ने कार्य शुरु गरिएको छ ।

## हवाई यातायात सेवा

११.७ नेपालको विविध भौगोलिक वनावटले गर्दा हवाई यातायात सेवालाई जतिसक्दो विस्तार गर्नु आजको टटकारो आवश्यकता भएको छ । चालु आर्थिक वर्षमा आतंकवादी गतिविधिबाट हवाई उडड्यन क्षेत्र तथा तिनका भौतिक पूर्वाधारहरुमा भएको विध्वंसका कारण राज्यलाई अपुरणीय क्षति पुग्न गएको छ । दुर्गम क्षेत्रका नागरिकलाई उडड्यन सुविधा दिने दृष्टिकोणबाट "दुर्गम सेवा कोष" को स्थापना गरी सो कोषलाई प्रभावकारी रुपमा कार्यान्वियन गर्ने तर्फ कदम चालिएको छ । साथै हवाई सुरक्षालाई भरपर्दो, स्तरीय सर्वसुलभ एवं विश्वासनीय बनाउन एउटा उच्चस्तरीय आयोग वनी सुरक्षा सम्वन्धी काम शुरु गरिएको छ ।

११.८ त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल विस्तार र सुदृढिकरण गर्ने नीति अनुरुप ए.डी.वी.को ऋण सहयोगमा १ देखि ६ प्याकेज अन्तर्गतका कार्यहरु मध्य चालु वर्षमा Air Cargo Building, विस्तारित अन्तर्राष्ट्रिय टर्मिनल भवन र Airlines/operation Building, Airport fire station and airfield maintanance Building संचालनमा ल्याई सकिएको छ । विराटनगर, भैरहवा, नेपालगंज विमानस्थलहरुको सुविधा विस्तार गरी Hub Airport को रुपमा विकसित गर्ने लक्ष्य अनुरुप विराटनगरमा, टर्मीनल भवन विस्तार गरी कलकत्तासम्मको क्षेत्रीय उडान शुरु भई हाल यात्रुको अभावमा स्थगन रहेको छ । भैरहवामा नयाँ टर्मिनल भवन निर्माण कार्य शुरु भैसकेको छ ।

११.९ फ्लाइङ्ग क्लव, बेलुनिङ्ग, ग्लाइडिङ्ग जस्ता मनोरन्जनात्मक उडान क्रियाकलापलाई प्रोत्साहन दिने नीति अनुरुप काठमाण्डौ उपत्यकामा वेलुनिङ्ग तथा पोखरा विमानस्थलमा Micro Light Aircraft बाट Power Gliding संचालित छन् । यसै गरी Paragliding र Handgliding आदि मनोरन्जनात्मक उडानहरुलाई समेत प्रोत्साहन गरिएको छ । प्राकृतिक प्रकोप तथा आपतकालिन अवस्थामा पर्यटकहरुको खोज र उद्धारको लागि नेपाल नागरिक उड्यन प्राधिकरणले वायुयानको आपतकालिन अवतरणका वखत उद्धार समन्वय केन्द्र मार्फत अवतरण गराउने र पर्यटकहरुको उद्धार तथा खोजका लागि सम्वन्धित वायुसेवाहरुसंग समन्वय गर्ने गरी कार्य संचालन गरेको छ ।

११.१० नागरिक उड्यन प्राधिकरण सुदृढीकरण गर्ने कार्यको लागि चालु वर्षमा Business Plan, Cargo Management सम्वन्धी कार्यको TOR तयार भै रहेको । साथै त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल Heliport निर्माण सम्वन्धी परामर्श सेवा लिन र Information Management Service Cell को व्यवस्थाको लागि MIS को व्यवस्था गर्न TOR बनाउने कार्य भै रहेको छ ।

११.११ त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल आधुनिकीरण आयोजनाको दोश्रो चरणको कार्यका लागि चालु वर्ष आवश्यक उपकरणहरु तथा सेवाहरुका पहिचान गरिएको छ । काठमाण्डौ, विराटनगर, पोखरा, भैरहवा, नेपालगंज, लुक्ला विमानस्थलहरुमा V-SAT संचार प्रणाली स्थापना गर्ने सम्वन्धमा Technical Specification तथा Tender

Document तयार गरी निकट भविष्यमा भू-उपग्रहमा आधारित संचार प्रणालीको विकास गर्ने कार्य भैरहेको छ ।

११.१२ भू-उपग्रहमा आधारित ग्लोवल पोजिसनिङ्ग प्रणाली (GPS) मा आधारित एयरनेभिगेशन प्रणाली देशभित्र क्रमिक रुपमा लागू गर्ने सिलसिलामा चालु वर्ष GPS Route Structure Chart र Approach Plate तयार गरिएको छ । काठमाण्डौ-वागडोगरा वीचको Direct International ATS Route को स्थापना भै यस्को G-348 Route नामाकरण गरिएको छ ।

११.१३ राष्ट्रिय नागरिक उडड्यन सुरक्षा समितिले पहिचान गरे अनुरुप प्राधिकरणको प्रधान कार्यालयमा अटोमेटिक मेसेज स्वीचिङ्ग प्रणाली (AMSS) को टर्मिनल जडान गर्ने र Aeronautical Information Pubilcation (AIP) को विवरण Website मा राख्ने जस्ता प्राविधिक पूर्वाधारको विकास कार्यहरु चालु वर्ष संचालनमा ल्याईएको छ । साथै विमानस्थलमा अग्नि निवारण तथा जीवनोद्धार सेवा विस्तार गर्ने क्रममा आवश्यक कार्यहरु हुदै गरेको छ ।

११.१४ चालु आर्थिक वर्षमा नेपाल तथा थाइल्याण्ड वीच मौजुदा हवाई सम्झौतामा पुनरावलोकन गरी थप हवाई सिटको व्यवस्था सहित संशोधित सहमति पत्र (MOU) मा हस्ताक्षर सम्पन्न भएको छ । महासन्धी तथा प्रोटोकल अनुमोदन तर्फ ICAO (International Civil Aviation Organisation) द्वारा पारित महासन्धि तथा प्रोटोकल अनुमोदनको लागि कारवाही अगाडी बढाइएको छ ।

११.१५ चालु वर्ष निजी क्षेत्रलाई विमान सेवा संचालन गर्न प्रोत्साहित गर्ने नीति अनुरुप ३२ वटा विमानसेवाहरुले AOC प्राप्त गरिसकेकोमा १८ वटा हाल चालु अवस्थामा रहेका छन् । ICAO स्तरको जीवनोद्धारको तथा अग्नी निवारण सेवा विस्तार तथा सुदृढिकरण गर्ने नीति अनुरुप त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थललाई चालु वर्ष ICAO Category VIII मा Upgrade गरिएको छ । नेपालगंज, विराटनगर, पोखरा, भैरहवा विमानस्थलहरुमा अग्नि निवारण उपकरण तथा Ambulance उपलब्ध गराईएको छ । पर्यटकीय विमानस्थलहरु लुक्ला, भरतपुर, जुम्ला, जोमसोम विमानस्थलहरुमा अग्नि निवारणका उपकरणहरु उपलव्ध गराइएको छ ।

## <u>सूचना तथा संचार</u>

११.१६ हुलाक सेवा

आर्थिक वर्ष २०५८।५९ को अन्त्यसम्ममा अधिराज्यभर गोश्वारा हुलाक-१, क्षेत्रीय हुलाक-५, जिल्ला हुलाक ७०, इलाका हुलाक ८४२ र अतिरिक्त हुलाक ३०९५ गरी जम्मा ४ हजार १३ हुलाकबाट हुलाक सेवा उपलव्ध हुने भएको छ । गत आर्थिक वर्ष २०५७।५८ को अन्तसम्ममा अधिराज्यभर गोश्वारा हुलाक १, क्षेत्रीय हुलाक ५, जिल्ला हुलाक ७०, इलाका हुलाक ८२७ र अतिरिक्त हुलाक ३ हजार १३० गरी जम्मा ४ हजार ३३ हुलाकबाट हुलाक सेवा उपलव्ध हुने अनुमान थियो । अधिराज्यभरीका अतिरिक्त हुलाकहरुको डाँकसेवा पुनरावलोकन गरी दरवन्दी यकिन गर्ने कार्यक्रमानुसार एक कार्यदल गठन भइ डाँकसेवाहरुमा समसामयिक सुधार गरिएको छ। यस क्रममा १ हजार ३४६ जनशक्तिको दरवन्दी कटौती गरिएको छ । हुलाकमा लोकप्रीय रहेको धनादेश सेवाको भुक्तानीमा प्रभावकारिता ल्याउन स्थापित धनादेश चक्रकोषमा वृद्धि

गरी रु. १ करोड ३३ लाख ७५ हजार पुऱ्याई भुक्तानी रकममा समेत वृद्धि गरिएको छ । यस्तै अधिराज्यका विभिन्न नगरपालिकाका ४३ वटा शहरी क्षेत्र तथा २ वटा नगरोन्मुख गा.वि.स.मा आन्तरिक द्रुत सेवा चालु भएको र २६ वटा राष्ट्रहरुमा वैदेशिक द्रुत डाँक सेवा (Expedited Mail Service - EMS) संचालन भैसकेको छ । हुलाक सेवा विभागले हालसम्म १७ हजार ५ सयभन्दा बढी हुलाक मन्जुषा (पोष्ट बक्स) को स्थापना गरी माग अनुरुप सेवा उपलब्ध गराउने प्रवन्ध मिलाएको छ । हालसम्म सबै इलाका, नगरपालिका र गा.वि.स.हरुमा सेवा पुऱ्याउने श्री ५ को सरकारको नीति अनुरुप प्रायः सबैमा हुलाकको सञ्जाल विस्तार भएको छ । आगामी दिनमा हुलाक सेवालाई व्यावसायिक, प्रतिस्पर्धात्मक र आत्मनिर्भर बनाउनका लागि एउटा विधेयक मस्यौदा गरिएको छ । हुलाक सेवाको कार्यक्षेत्र विस्तार गर्ने तर्फ पनि पहल जारी छ ।

११.१७ दुरसञ्चार सेवा

चालु आर्थिक वर्ष नेपाल दूरसंचार प्राधिकरणबाट निजी क्षेत्रको १७ वटालाई इन्टर्नेट ( इमेल सहित), १० वटा भिस्याट सेवा, २५ वटालाई सेवा प्रयोगकर्ता, ८ वटालाई रेडियो पेजिङ्ग नेटवर्क, १ वटालाई भिडियो कन्फरेन्सीङ्ग, ६ वटालाई फ्याक्स मेल सेवा गरी जम्मा ६७ वटा इजाजत पत्र प्रदान भएको छ । गत आर्थिक वर्ष २०५७।५८ मा निजी क्षेत्रलाई ईन्टर्नेट (इ-मेल सहित) १५ वटा, भि-स्याट सेवा ७ वटा तथा सेवा प्रयोगकर्ता २३ वटा, रेडियो पेजिङ, नेटवर्क ८ वटा, भिडियो कन्फरेन्सीङ्ग, १ वटा फ्याक्समेल सेवा ६ वटा र सेलुलर मोवाइल सेवा १ गरी जम्मा ६१ वटा इजाजत पत्र प्रदान भएको थियो ।

११.१८ २०५८ माघसम्म अधिराज्यका ३ हजार ९१४ गाउँ विकास समिति मध्ये १ हजार ७६१ गाउँ विकास समितिहरुमा अर्थात ४५ प्रतिशत समितिहरुमा टेलिफोन सेवा उपलब्ध भएको छ । २०५७ फागुनसम्म अधिराज्यका १ हजार ७२६ गाउँ विकास समितिहरुमा टेलिफोन सुविधा उपलब्ध थियो । उक्त विशेष ग्रामीण दूरसंचार कार्यक्रममध्ये पूर्वान्चल विकास क्षेत्रका गा.वि.स.हरुमा सेवा उपलब्ध गराउने गरी नेपाल दूरसंचार प्राधिकरण मार्फत निजी क्षेत्रको सहभागिताका लागि प्रस्ताव आव्हान गरी सेवा संचालक छनौट भै आशयपत्र जारी गरिसकिएकोमा छनौट भएको संचालकले सुरक्षा प्रवन्धको कारण सेवा संचालन गर्न असमर्थता जनाई इजाजतपत्र लिन नमानेकोले पुनः प्रस्ताव आव्हान गर्ने कार्यको तयारी हुदैछ भने आर्थिक वर्ष २०५८।५९ भित्र अन्य विकास क्षेत्रहरुमा WLL प्रणालीबाट ९९ गा.वि.स.मा सेवा पुऱ्याउने कार्य नेपाल दूरसंचार संस्थानबाट भइरहेको छ ।

११.१९ नेपाल दुरसंचार संस्थानबाट २०५८ माघसम्ममा अधिराज्यका कुल १४२ वटा एक्सचेञ्जहरुबाट टेलिफोन सेवा संचालन भएको छ । गत वर्ष पनि यो संख्या १४२ थियो । यी एक्सचेञ्जहरुमा कुल ३ लाख ७५ हजार ३१२ लाइन क्षमता रहेकोमा यसमध्ये चालु आर्थिक वर्षको प्रथम ८ महिनासम्ममा करीव ३ लाख १२ हजार ३२ लाइन टेलिफोन वितरण भै सेवा सञ्चालनमा रहेको छ । गत वर्ष सोही समयमा करीव २ लाख ७५ हजार ५५८ लाइन टेलिफोन वितरण भई सेवा संचालनमा रहेको थियो । काठमाण्डौ उपत्यका, विराटनगर, वीरगंज र पोखरामा सेलुलर मोवाइल सेवा संचालन गरिएकोमा २० हजार लाइनको क्षमता बनाई १८ हजार १०२ लाइन वितरण

गरिएको छ । गत वर्ष सोही समयमा ११ हजार ११७ लाइन वितरणमा रहेको थियो । १३१ राष्ट्रहरुसंग सिधा अन्तर्राष्ट्रिय सम्पर्क कायम हुन सक्ने गरी कुल सर्किट क्षमता १ हजार ८४ पुऱ्याइएको छ । गत वर्ष यो क्षमता १ हजार १९ रहेको थियो । टेलिफोन लाइन प्राप्त गर्न निवेदन दिई प्रतिक्षा सूचीमा बस्ने ग्राहकहरुको संख्या करीव २ लाख ८२ हजार २५७ रहेको छ । आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा अधिराज्यभर २२ हजार लाइन टेलिफोन वितरण गरिएको छ । गत आर्थिक वर्षको सोही समयमा अधिराज्यभर १९ हजार ७८१ लाइन टेलिफोन वितरण गरिएको थियो ।

तालिका ११ (ग) : टेलिफोन सेवा (एक्सचेन्ज) विस्तार

| शीर्षक | २०५८ आषाढ | प्रथम आठ महिनाको २०५८।५९ (२०५८ फाल्गुण) |
|---|---|---|
| कुल जम्मा | | |
| क) नगर क्षेत्र संख्या | ५८ | ५८ |
| ख) टेलिफोन लाइन वितरण संख्या | २८८०३६ | ३१२०३२ |
| ग) प्रति .. हजार/टेलिफोन लाईन | १२ | १४* |

** २०५८ आषाढको जनसंख्यामा आधारित*

*नोट : सबै एक्सचेन्जहरु डिजिटल स्वचालितमा रहेको ।*

११.२० पत्रपत्रिकाहरु

२०५८ फाल्गुण मसान्तसम्ममा नेपाल अधिराज्यका विभिन्न जिल्लाहरुमा दर्ता भएका पत्रपत्रिकाहरुको संख्या ३ हजार १९२ पुगेको छ । यसमध्ये २१८ वटा दैनिक, १२ वटा अर्धसाप्ताहिक, १११९ वटा साप्ताहिक, २३५ वटा पाक्षिक, ९०६ वटा मासिक, २२३ वटा द्वैमासिक, ३५७ वटा त्रैमासिक, १६ वटा चौमासिक, ५२ वटा अर्ध वार्षिक र ५३ वटा वार्षिक पत्रपत्रिकाहरु रहेका छन् । २०५७ चैत्र मसान्तसम्ममा नेपाल अधिराज्यका विभिन्न जिल्लाहरुमा दर्ता भएका पत्रपत्रिकाहरुको संख्या २ हजार ८७० रहेको थियो । जसमध्ये १९३ वटा दैनिक, ९ वटा अर्धसाप्ताहिक, १ हजार ८ वटा साप्ताहिक, २२० वटा पाक्षिक, ७८७ वटा मासिक, २०५ वटा द्वैमासिक, ३३४ वटा त्रैमासिक, १५ वटा चौमासिक, ४९ वटा अर्ध वार्षिक र ५० वटा वार्षिक पत्रिकाहरु रहेका थिए । श्री ५ को सरकारले संचारग्रामको अवधारणा लिई पत्रकारिता क्षेत्रसंग सम्बद्ध निकायहरु सूचना विभाग, प्रेस काउन्सिल र नेपाल पत्रकार महासंघलाई एकै थलोमा राखी एकिकृत रुपमा कार्य संचालन गराउने हेतुले काठमाण्डौको तिलगंगास्थित संचारग्राम क्षेत्रमा उक्त निकायहरुको भौतिक पूर्वाधार तयार गर्ने कार्य थालिएकोमा तीन वटै निकायको कार्यसंचालन संचारग्रामबाट प्रारम्भ भएको छ ।

मञ्जुषा ११ (२)

**बर्तमान राष्ट्रिय संचार नीति**
**पत्रपत्रिका सम्वन्धी**

- संविधानद्वारा प्रत्याभूत जनताको विचार र अभिव्यक्तिको स्वतन्त्रता तथा सुसूचित हुन पाउने हकलाई उपभोग गर्न नेपाली नागरिकले कुनै पनि भाषामा पत्रपत्रिका प्रकाशन गर्न पाउने ।
- पत्रपत्रिकाको संस्थागत विकास गर्न पत्रपत्रिका व्यवसायलाई उद्योगको रुपमा मान्यता दिने ।
- पत्रकारिता क्षेत्रलाई स्वतन्त्र, मर्यादित र उत्तरदायित्वपूर्ण तुल्याउदै प्रतिस्पर्धात्मकरुपमा निजी क्षेत्रको पत्रकारिताको विकास गरी आर्थिक एवं भौतिकरुपले आत्मनिर्भर हुने वातावरण सिर्जना गर्ने ।
- पत्रपत्रिकाको वितरण स्थिति र नियमितताको आधारमा वर्गीकरण गरी न्यूजप्रिन्ट र अन्य सामग्रीहरु सुपथ र सुलभ तरिकाले उपलब्ध गराउने ।
- सरकारी सूचना र सार्वजनिक सेवाका विज्ञापनहरु श्री ५ को सरकारले निजी क्षेत्रका पत्रपत्रिकालाई समेत वितरण स्थिति, स्तरीयता र नियमितताको आधारमा वर्गीकरण गरी उपलव्ध गराउने ।
- सरकारी एवं अर्धसरकारी क्षेत्रका उद्योग-व्यवसायबाट निजी क्षेत्रका पत्रपत्रिकालाई वर्गीकरणको आधारमा विज्ञापन उपलव्ध हुन सक्ने वातावरण सिर्जना गर्ने ।
- कानून अन्तर्गत रही निर्वाध समाचार संकलन गर्न पाउने अधिकार पत्रपत्रिकालाई प्रदान गर्ने ।
- पत्रपत्रिका ढुवानी लगायत समाचारको आदानप्रदानमा सहुलियत उपलव्ध गराउने ।
- निश्चित आधारमा पत्रपत्रिकाहरुलाई प्रेस राख्न सहुलियत व्याजदरमा ऋण उपलव्ध गराउन प्रयास गरिने ।
- मासिक, द्वैमासिक र त्रैमासिकरुपमा प्रकाशित भइरहेका साहित्यिक तथा विषयगत पत्रपत्रिकाहरुलाई पनि अन्य पत्रपत्रिकाहरुसरह वर्गीकरणको आधारमा विज्ञापन एवं अन्य सहुलियतहरु प्रदान गर्ने ।
- उद्योगसरह मान्यताप्राप्त प्रकाशन संस्थामा काम गर्ने श्रमजीवी पत्रकारहरुको हक, हित र अधिकारको संरक्षण गर्ने सम्वन्धी ऐन, नियमको तर्जुमा गरी यस पेशालाई सुरक्षा प्रदान गर्ने ।
- अश्लील, उत्तेजनात्मक र समाजमा विकृति फैलाउने खालका पत्रपत्रिकाहरुको प्रकाशन, आयात एवं बिक्री वितरण रोक लगाउने ।

११.२१ टेलिभिजन प्रसारण सेवा

> मञ्जुषा ११ (३)
>
> **बर्तमान राष्ट्रिय संचार नीति**
>
> **प्रसारणसम्वन्धी**
>
> - प्रसारणसम्वन्धी छुट्टै ऐनको तर्जुमा गरी रेडियो तथा टेलिभिजन प्रसारणलाई व्यवस्थित गर्ने ।
> - स्याटलाइट एवं केबुल टेलिभिजनसम्वन्धी ऐन, नियमहरुको तर्जुमा गरी यसलाई नियमित र व्यवस्थित गराउने ।
> - सरकारी स्वामित्वमा सञ्चालित प्रसारण संस्थाहरुबाट प्रसारण गरिने कार्यक्रमहरु राष्ट्रिय सेवा र व्यापारिक सेवा गरी दुई सेवामा संचालन गर्ने ।
> - क्षेत्रिय प्रसारणको अवधारणा लिई क्रमिक रुपले विभिन्न राष्ट्रिय भाषाहरुमा कार्यक्रम प्रसारण गर्ने ।
> - रेडियो र टेलिभिजनबाट प्रसारण हुने कार्यक्रमहरुको उत्पादनमा निजी क्षेत्रको सहभागिता बढाउदै लैजाने ।
> - शिक्षाप्रद एवं मनोरन्जनात्मक कार्यक्रमहरुको प्रसारण रेडियो र टेलिभिजनबाट गर्न चाहेमा निश्चित मापदण्डको आधारमा निजी क्षेत्रलाई प्रसारण समय उपलव्ध गराउन सक्ने ।
> - राष्ट्रिय हितको प्रतिकुल नहुने गरी निश्चित शर्त र प्रक्रियाहरुका आधारमा विदेशी सञ्चारमाध्यमहरुको कार्यक्रम प्रसारण गर्न चाहेका शिक्षाप्रद र मनोरञ्जनात्मक कार्यक्रम प्रसारण गर्न समय उपलव्ध गराउन सक्ने ।
> - प्रसारण ऐन अन्तर्गत रही निजी क्षेत्रका संगठित संस्थालाई पनि निश्चित क्षेत्रमा फ्रिक्वेन्सी मोडुलेसन (एफएम) प्रसारण प्रणाली स्थापना गरी शिक्षाप्रद र मनोरन्जनात्मक कार्यक्रम प्रसारण गर्न दिने ।
> - नेपाल टेलिभिजन र रेडियो नेपालको प्रसारण विस्तारका लागि सहयोग उपलव्ध गराउने ।

चालु आर्थिक वर्षमा नेपाल टेलिभिजनले अधिराज्यका १२ स्थानमा रहेका प्रसारण केन्द्रमार्फत प्रतिदिन १८ घण्टा कार्यक्रम संचालन गरेको छ । गत आर्थिक वर्षमा यस्तो प्रसारण १६.५ घण्टा थियो । साथै चालु वर्ष गोरखा, चौपट्टा (दाङ) बुढीतोला (कैलाली) प्रसारण केन्द्र भवन र टावर निर्माण कार्य सम्पन्न भएको छ । हालसम्म अधिराज्यको ४० प्रतिशत भूभागमा करीव ५५ प्रतिशत जनसंख्याले नेपाल टेलिभिजनको कार्यक्रम हेर्न सकेको अनुमान छ । गत वर्ष अधिराज्यको ३२ प्रतिशत भू-भागमा नेपाल टेलिभिजनको सेवा पुगेको थियो । चालु वर्षमा नेपाल टेलिभिजनको प्रसारणलाई अधिराज्यव्यापी बनाउन भू-उपग्रह माध्यमको प्रयोग गर्ने व्यवस्था मिलाइएको छ । नेपाल टेलिभिजनको दोश्रो च्यानल (मेट्रो च्यानल) स्थापना गरी छुट्टै कार्यक्रम प्रसारण गर्ने योजना अन्तर्गत स्टुडियो भवन निर्माणकार्य मित्र राष्ट्र चीन सरकारको अनुदान सहयोगमा प्रारम्भ भएको छ । अधिराज्यभर हालसम्म करीव २०० वटा केबुल टेलिभिजन संचालकहरुलाई टेलिभिजन प्रसारण सेवा संचालन गर्न इजाजतपत्र प्रदान गरिएको
छ । टेलिभिजन प्रसारणमा निजी क्षेत्रको लगानी गराउने नीति अनुरुप काठमाण्डौ उपत्यकामा मेट्रो च्यानल प्रसारण गर्न एउटा, अधिराज्यभर भूसतह (Terrestrial) मार्फत प्रसारण गर्न एउटा समेत निजी क्षेत्रका तीनवटा संचालकहरुलाई टेलिभिजन प्रसारण गर्ने अनुमति प्रदान गरिएको छ ।

११.२२ रेडियो प्रसारण सेवा

चालु वर्ष शर्टवेभ प्रसारण प्रणालीमा रेडियो नेपालको प्रसारण सेवा अधिराज्यभर तथा मिडियमवेभ प्रसारण प्रणालीमा ६० देखि ८० प्रतिशत जनतासम्म पुगेको छ ।

मिडियमवेभ प्रसारणले ढाक्न नसकेका क्षेत्रहरुमा स्थानीय सहभागिता समेत परिचालन गरी क्रमिक रुपमा फ्रिक्वेन्सी मोडुलेशन प्रणालीमार्फत सेवा विस्तार गर्ने गरी कार्य भइरहेको छ । अधिराज्यभर रेडियो प्रसारण स्पष्ट सुन्न सकियोस भन्ने उद्देश्यले भिस्याट प्रविधिको समेत प्रयोग गरिएको छ । अधिराज्यका पाँचै विकास क्षेत्रमा स्थापित मिडियमवेभ प्रसारण केन्द्रहरुका लागि चालु वर्ष FM रिले केन्द्र स्थापना गरी सेवा प्रारम्भ गर्न थप ४ ठाउँमा भवन निर्माण र ५ ठाउँका लागि उपकरण उपलव्ध हुने क्रममा रहेको छ । निजी क्षेत्रमा पनि मनोरन्जनात्मक एवं सूचनामूलक कार्यक्रमहरु प्रसारण गर्ने उद्देश्यले फ्रिक्वेन्सी मोडुलेशन प्रणालीमा सामुदायिक रेडियो प्रसारण केन्द्र संचालन गर्न हालसम्म २५ वटा निजी क्षेत्रका संस्थालाई इजाजतपत्र प्रदान गरिएकोमा २१ वटा चालु भैसकेका र ४ वटा चालु हुन वांकी रहेको छ । गत वर्ष सम्ममा यस्तो ईजाजत २० वटालाई प्रदान गरिएको थियो।

११.२३ मुद्रण सेवा

श्री ५ को सरकारको सम्पूर्ण मुद्रण कार्य गर्नका लागि मुद्रण विभागको छापाखानालाई क्रमशः सुरक्षण मुद्रणालयका रुपमा विकास, विस्तार र सुदृढ गर्दै लैजाने उद्देश्य अनुरुप केही मुद्रण यन्त्रहरुको व्यवस्था गरी राष्ट्र वैंक तथा सहकारी वैंकहरुको चेक, राजस्व स्टिकर जस्ता सुरक्षण मुद्रण सामग्रीहरुको छपाई कार्य चालु आर्थिक वर्षमा भैरहेको र सुरक्षण मुद्रणालयको पूर्वाधारका लागि सुरक्षण मुद्रण भवन निर्माण कार्य चालु रहेको छ । केही मुद्रण उपकरणहरु थप गरी क्षमता वृद्धिको कार्य पनि भइरहेको छ ।

११.२४ चलचित्र

चलचित्र विकास वोर्डले चालु वर्ष सो क्षेत्रसंग सम्वन्धित विज्ञहरुको सहभागितामा समन्वयात्मक कार्यको थालनी गरेको छ ।

## चुनौतीहरु

११.२५ शहरी सडकहरुमा सवारी चाप तथा घनत्वको सडक क्षमतामा वृद्धि गर्नु तथा भैरहेका सडक संरचनालाई आवश्यकता अनुरुप निरन्तर मर्मत संभारको कार्य अगाडी बढाउनु पर्ने देखिन्छ ।

११.२६ विध्वंशात्मक क्रियाकलापहरुको कारणबाट अस्तव्यस्त भएको राष्ट्रिय संचार प्रणालीलाई पूनर्स्थापित गर्ने कार्य चुनौतीपूर्ण छ ।

# १२. सामाजिक सेवा

## शिक्षा

१२.१ विद्यालय जाने उमेरका सवै वालवालिकालाई शिक्षाको अवसर सुनिश्चित गराउने सिलसिलामा आधारभूत तथा प्राथमिक शिक्षा कार्यक्रम अन्तर्गत आर्थिक वर्ष २०५७।५८ मा Whole School Approach शिक्षक प्रशिक्षक तालिम ३६ केन्द्रमा संचालन भयो र २ हजार ५ सय शिक्षकहरुलाई Modular तालिम प्रदान गरियो । ९ वटा प्राथमिक शिक्षक तालिम केन्द्रबाट ४ हजार ३४२ शिक्षकलाई ३३० घण्टे प्राथमिक शिक्षक तालिम उपलव्ध गराइएको थियो । साथै ७५ जिल्लाका जिल्ला शिक्षा योजनाको अनुगमन कार्य सम्पन भयो । त्यसै गरी शारीरिक एवं मानसिक रुपले कमजोर वालवालिकाहरुलाई विशेष शिक्षा कार्यक्रम अन्तर्गत १२३ जनालाई जन चेतना सम्वन्धी तालिममा सहभागी गराइयो । साथै १५० जना श्रोत शिक्षकहरुलाई छोटो अवधिको तथा १७ जनालाई २.५ महिने तालिम प्रदान गरियो । ४२ जिल्लाका २ हजार ९१५ केन्द्रमा बाल विकास कार्यक्रमको थालनी गरियो ।

१२.२ सोही अवधिमा साक्षरता कार्यक्रम अन्तर्गत महिला शिक्षा प्रथमको १ हजार ४ सय कक्षा र द्वितीयको १ हजार ४ सय कक्षा संचालन र ६० जना प्रशिक्षकको तालिम सम्पन्न भएको छ । पाठ्यक्रम अन्तर्गत कक्षा १ को गुरुङ्ग भाषाको पाठयपुस्तक, कक्षा २ को राई र मगर भाषाको पाठ्य पुस्तक, कक्षा ५ को ७ मातृ भाषाको पाठ्य पुस्तक प्रकाशनको तयारी र कक्षा १, ३ को पाठ्यपुस्तक पुनः प्रकाशन गर्ने कार्य भैरहेको छ । निरन्तर शिक्षा अन्तर्गत ५ दिने पोर्टफोलियो संचालन तालिम २ हजार शिक्षकलाई दिने तयारी भैरहेको, २ हजार प्रधान अध्यापकलाई २ दिने तालिम दिने कार्य भएको तथा कक्षा १, २ र ३ का ३ विषयका ५० हजार विद्यार्थीका लागि वर्कबुक प्रकाशन कार्य भैरहेको छ । परीक्षा सुधारको लागि ७५ जिल्लामै प्रश्न विश्लेषण कार्य भैरहेको छ । पुनर्ताजगी तालिम तथा निरीक्षण अन्तर्गत होलस्कुल एप्रोचको ५ केन्द्रमा तालिम सम्पन्न भएको छ ।

१२.३ आर्थिक वर्ष २०५७।५८ मा अधिराज्यका ५ विकास क्षेत्रमा ५ वटा नमूना विद्यालयहरु स्थापना गरिएका छन् । त्यस्तै दुर्गम क्षेत्र रसुवा, मुस्ताङ र हुम्लामा ३ वटा आवासीय विद्यालयहरु छनौट गरिएका छन् । आर्थिक वर्ष ०५८।५९ मा उक्त विद्यालयहरुमा पूर्वाधार विकास कार्य भैरहेको छ । त्यसैगरी आर्थिक वर्ष ०५७।५८ मा २५ जिल्लामा ६३ वटा कम्प्युटर दिने कार्य सम्पन्न भएकोमा आर्थिक वर्ष २०५८।५९ मा ३२ जिल्लामा ८० वटा कम्प्युटर दिने कारवाही भैरहेको छ ।

१२.४ प्राथमिक विद्यालय पौष्टिक आहार कार्यक्रम चालु आर्थिक वर्षमा १६ जिल्लाबाट २१ जिल्लामा संचालित गरिएको छ । नयाँ थप गरिएका ५ जिल्ला -उदयपुर, रामेछाप, मकवानपुर, नुवाकोट र रसुवा मध्ये उदयपुर जिल्लामा फाल्गुण महिनामा १३२ विद्यालयका २४ हजार ६३४ विद्यार्थीलाई दिवा खाजा वितरण गरिएको छ भने साविकको १६ जिल्लामा १ हजार ८५८ विद्यालयहरुका १ लाख ८६ हजार ५८६ विद्यार्थीलाई पौष्टिक आहार वितरण गरिएको छ । माध्यमिक शिक्षा विकास परियोजना अन्तर्गत आर्थिक वर्ष २०५८।५९ मा निम्न माध्यमिक विद्यालयका नेपाली, अग्रेजी, विज्ञान, गणित, सामाजिक शिक्षा, स्वास्थ्य जनसंख्या तथा वातावरण शिक्षा र प्रधान अध्यापक व्यवस्थापन विषयमा प्रशिक्षक प्रशिक्षण तालिम १९२ जनालाई दिइएको छ । त्यस्तै सेडु तालीम कार्यक्रम अन्तर्गत ४ हप्ते शिक्षक तालिम ५४३ जनालाई, प्रधान

अध्यापक तालीम २७० जनालाई र छोटो अवधिको तालीम ६३५ जनालाई दिइएको छ ।

१२.५ आर्थिक वर्ष २०५७।५८ मा जापान, रुस, टर्की, वंगलादेश र चीनमा मेडिसीनमा १९, इन्जीनियरिङ्गमा ६, डेण्टलमा २, सूचना प्रविधि र वातावरण विज्ञानमा १-१ र पोष्ट ग्रयाजुयटमा ३ जनालाई छात्रवृत्तिमा अध्ययनार्थ पठाइएको छ । सो वर्ष स्वदेश भित्र मेडिसिनमा ८९ तथा डेण्टलमा ३ जनालाई छात्रवृत्ति दिइएको छ । आर्थिक वर्ष २०५८।५९ को ८ महिनामा उपर्युक्त देशहरुमा मेडिसिन तर्फ १८, इन्जिनियरिङ्ग तर्फ ७, डेण्टल तर्फ ३, सूचना प्रविधि र वातावरण विज्ञान तर्फ १-१ जना र स्वदेश भित्र मेडिसिनमा ९६ तथा डेन्टल तर्फ ११ जनालाई छात्रवृत्ति प्रदान गरिएको छ ।

१२.६ आर्थिक वर्ष २०५८।५९ मा विद्यालय स्तरीय राष्ट्रिय छात्रा फुटवल प्रतियोगिता सम्पन्न भएको छ । यस प्रतियोगितामा फुटवल खेलको पूर्वाधार भएका अधिराज्यका १६ जिल्ला सहभागी भएका थिए । त्यस्तै अधिराज्यका ५ विकास क्षेत्रका ५ वटा टिम सम्मिलित भई राष्ट्रिय भलिवल तथा एथलेटिक्स प्रतियोगिता पनि सम्पन्न भएको छ ।

१२.७ यही २०५८ आश्विनको अनुमानित तथ्यांक अनुसार प्राथमिक, निम्न माध्यमिक र माध्यमिक तहको विद्यालय, विद्यार्थी र शिक्षक अनुपात देहायको तालिकामा प्रस्तुत गरिएको छ :-

तालिका १२ (क) : विद्यालय, विद्यार्थी र शिक्षक अनुपात

| अनुपात | प्राथमिक | निम्न माध्यमिक | माध्यमिक |
|---|---|---|---|
| विद्यार्थी/विद्यालय | १४५ | १३७ | ८३ |
| शिक्षक/विद्यालय | ४ | ४ | ४ |
| विद्यार्थी/शिक्षक | ३८ | ३८ | १९ |
| विद्यार्थी/तालिमप्राप्त शिक्षक | ६९ | ७६ | ३१ |

*स्रोत : शिक्षा तथा खेलकुद मन्त्रालय*

गत वर्षको सोही अवधिसंग तुलना गर्दा विद्यार्थी/विद्यालय अनुपात प्राथमिक, निम्न माध्यमिक र माध्यमिक तहमा क्रमशः १५८, १२७ र ९५ थियो । त्यसैगरी २०५७ आश्विनमा प्राथमिक, निम्न माध्यमिक र माध्यमिक तहमा शिक्षक/विद्यालय अनुपात क्रमशः ४, ३ र ४; विद्यार्थी/शिक्षक अनुपात क्रमशः ४१, ३८ र २१ र विद्यार्थी तालिमप्राप्त शिक्षक अनुपात क्रमशः ८८, ११५ र ४२ रहेको थियो ।

१२.८ शिक्षा सातौं संशोधन ऐन, २०५८ ले विद्यालयहरुको वर्गीकरण सामुदायिक र संस्थागत गरी दुई प्रकारले गरेको छ । सामुदायिक विद्यालयहरु श्री ५ को सरकारबाट अनुदान प्राप्त गर्दछन् भने संस्थागत विद्यालयहरु गुठी वा कम्पनी ऐन अन्तर्गत रही संचालन हुन्छन् । सरकारी र सामुदायिक विद्यालयहरु वर्गिकरणको दृष्टिकोणले सामुदायिक विद्यालय अन्तर्गत पर्दछन् भने निजी विद्यालयहरु संस्थागत विद्यालय अन्तर्गत पर्दछन् । २०५८ आश्विनको अनुमानित तथ्याङ्क अनुसार नेपाल अधिराज्यका पाँच विकास

क्षेत्रहरुमा सरकारी, सामुदायिक र निजीस्तरबाट सञ्चालित विद्यालयहरुमा विद्यार्थी/शिक्षक अनुपात निम्न वमोजिम रहेको थियो :-

तालिका १२ (ख) : विद्यार्थी/शिक्षक अनुपात, २०५८ (अनुमानित)

| क्षेत्र | प्रति शिक्षक विद्यार्थी अनुपात | | |
|---|---|---|---|
| | प्राथमिक | निम्न माध्यमिक | माध्यमिक |
| नेपाल अधिराज्य | ३८ | ३८ | १९ |
| सरकारी | ४३ | ४४ | २१ |
| सामुदायिक | १७ | ७७ | ८२ |
| निजी | १६ | १४ | ७ |
| पूर्वाञ्चल | ३९ | ४३ | २५ |
| सरकारी | ४४ | ४८ | २५ |
| सामुदायिक | २१ | ७७ | ११६ |
| निजी | १५ | १५ | ८ |
| मध्यमाञ्चल | ४० | ३७ | १७ |
| सरकारी | ४५ | ४४ | १९ |
| सामुदायिक | २२ | १०९ | १०५ |
| निजी | २३ | १७ | ८ |
| पश्चिमाञ्चल | ३३ | ३८ | १९ |
| सरकारी | ३९ | ४५ | २० |
| सामुदायिक | ११ | ६३ | ५६ |
| निजी | १५ | ११ | ७ |
| मध्य पश्चिमाञ्चल | ४२ | ३७ | १९ |
| सरकारी | ४७ | ४१ | १८ |
| सामुदायिक | १७ | ७० | ५८ |
| निजी | १० | ७ | ४ |
| सुदूर पश्चिमाञ्चल | ३८ | ३४ | १९ |
| सरकारी | ४६ | ३८ | १८ |
| सामुदायिक | १६ | ७३ | ७२ |
| निजी | ९ | ७ | ६ |

*स्रोत : शिक्षा तथा खेलकुद मन्त्रालय*

*नोट : सरकारी र सामुदायिक विद्यालय भन्नाले क्रमशः अनुदान पाउने र अनुदान पाउने आशामा रहेका विद्यालय भन्ने बुझिन्छ ।*

अघिल्लो वर्षको यहि अवधिमा प्राथमिक, निम्न माध्यमिक र माध्यमिक तहमा विद्यार्थी/शिक्षक अनुपात ४१, ३८ र २१ रहेको थियो ।

१२.९ उच्च माध्यमिक शिक्षा प्रणाली (१०+२) लाई प्रोत्साहन गर्ने नीति अनुरुप उच्च माध्यमिक शिक्षा परिषद् अन्तर्गत शैक्षिक सत्र २०४९।५० देखि शैक्षिक सत्र २०५८।५९ सम्म सम्वन्धन प्राप्त विद्यालयहरुको क्षेत्रगत संख्या निम्नानुसार रहेको छ :-

तालिका १२ (ग) : शैक्षिक सत्र २०५८।५९ सम्म सम्वन्धन प्राप्त विद्यालयहरु

| विकास क्षेत्र | सार्वजनिक विद्यालय | निजी १०+२ | निजी ०+२* | क्या-म्पस | जम्मा विद्यालय संख्या | क्षेत्रगत प्रतिशत |
|---|---|---|---|---|---|---|
| पूर्वाञ्चल | ९१ | १६ | ३९ | १९ | १६५ | २१ |
| मध्यामाञ्चल | ८९ | ६८ | ११४ | ५० | ३२१ | ४२ |
| क) उपत्यका भित्र | १७ | ५७ | ८३ | २७ | (१८४) | (२४) |
| ख) उपत्यका वाहिर | ७२ | ११ | ३१ | २३ | (१३७) | (१८) |
| पश्चिमाञ्चल | १२१ | १५ | २२ | २४ | १८२ | २४ |
| मध्यपश्चिमाञ्चल | ३६ | ४ | ६ | ४ | ५० | ६ |
| सुदूरपश्चिमाञ्चल | ४५ | ४ | ५ | ३ | ५७ | ७ |
| कुल जम्मा | ३८२ | १०७ | १८६ | १०० | ७७५ | १०० |
| प्रतिशत | ४९ | १४ | २४ | १३ | १०० | |

*श्रोत : उच्च माध्यमिक परिषद*

** उच्च माध्यमिक शिक्षा मात्र संचालित*

१२.१० त्यसै गरी उच्च माध्यमिक विद्यालय अध्ययन गर्ने विद्यार्थीहरुको संख्या आर्थिक वर्ष २०५८।५९ मा ४९ हजार ५० पुगेको छ । शैक्षिक सत्र २०५३।५४ देखि सम्वन्धन लिने उच्च माध्यमिक विद्यालयहरु र अध्ययन गर्ने विद्यार्थीहरुको संख्या निम्नानुसार रहेको छ :-

तालिका १२ (घ) : शैक्षिक सत्र २०५३।५४ देखि सम्वन्धन लिने उच्च माध्यमिक विद्यालयहरु र अध्ययन गर्ने विद्यार्थीहरुको संख्या

| विवरण | शैक्षिक वर्ष | | | | | |
|---|---|---|---|---|---|---|
| | ०५३/५४ | ०५४/५५ | ०५५/५६ | ०५६/५७ | ०५७/५८ | ०५८/५९ |
| वर्षगत विद्यार्थी संख्या | १०२०० | १४१०० | २११०० | ३२२०० | ५५९५९ | ४९०५० |
| प्रतिवर्ष वृद्धि विद्यार्थी संख्या | २७०० | ३९०० | ७००० | ११९०० | २३७५९ | (–) |
| प्रतिवर्ष वृद्धि विद्यार्थी प्रतिशत | ३६ | ३८ | ५० | ५३ | ७४ | (–) |
| वर्षगत सम्वन्धन प्राप्त विद्यालय संख्या | ७० | १२० | ८० | १०३ | १७७ | ९४ |
| वर्षगत जम्मा विद्यालय संख्या | २१३ | ३२२ | ४०२ | ५०४ | ६८१ | ७७५ |

*श्रोत : उच्च माध्यमिक परिषद*

आर्थिक वर्ष २०५७।५८ मा उच्च माध्यमिक तहको सम्वन्धन प्राप्त विद्यालयहरु ६८१ रहेकोमा चालु आर्थिक वर्षमा सो संख्यामा १३.८ प्रतिशतले वृद्धि भई ७७५ पुगेको छ । त्यसैगरी आर्थिक वर्ष २०५७।५८ मा वर्षगत विद्यार्थी संख्या ५५ हजार ९५९ रहेकोमा चालु आर्थिक वर्षमा सो संख्यामा १२.३ प्रतिशतले कमी आई ४९ हजार ५० रहन गएको छ ।

१२.११ भौगोलिक अवस्थितिका आधारमा शैक्षिक सत्र २०५८।५९ सम्म सम्वन्धन प्राप्त विद्यालयहरुको संख्या निम्नानुसार रहेको छ ।

तालिका १२ (ङ) : भौगोलिक अवस्थितिका आधारमा
शैक्षिक सत्र २०५८।५९ सम्म सम्वन्धन प्राप्त विद्यालयहरु

| भौगोलिक क्षेत्र | सार्वजनिक विद्यालय | निजी विद्यालय | सम्वन्धन प्राप्त क्याम्पस | जम्मा | क्षेत्रगत प्रतिशत |
|---|---|---|---|---|---|
| हिमाली क्षेत्र | ४४ | ० | ३ | ४७ | ६ |
| पहाडी क्षेत्र | २३५ | १८२ | ६३ | ४८० | ६२ |
| तराई क्षेत्र | १०३ | १११ | ३४ | २४८ | ३२ |
| जम्मा | ३८२ | २९३ | १०० | ७७५ | १०० |
| प्रतिशत | ४९ | ३८ | १३ | १०० | |

*श्रोत : उच्च माध्यमिक परिषद*

१२.१२ सरकारी अनुदान प्राप्त माध्यमिक विद्यालयहरुमा संचालित उच्च माध्यमिक विद्यालयहरुको संस्थागत तथा संरचनागत सुधारका लागि आर्थिक वर्ष २०५७।५८ मा पूँजीगत अनुदान र आर्थिक वर्ष २०५८।५९ देखि प्रति विद्यालय प्रति एक शिक्षकका लागि १ वर्षको तलव वरावरको रकम अनुदान स्वरुप प्रदान गरिएको छ । यस बाट विपन्न क्षेत्रका अभावग्रस्त सार्वजनिक उच्च माध्यमिक विद्यालयहरु आफ्ना शैक्षिक उपलब्धी स्तरमा प्रगति गर्न सक्षम हुने छन् । शिक्षक तालिम तथा तालिमका आधारहरुलाई बस्तुपरक र समयसापेक्ष बनाउदै लैजाने क्रममा आर्थिक वर्ष २०५८।५९ सम्ममा करीव ४५० शिक्षकलाई तालिम प्रदान गरिएको छ ।

१२.१३ उच्चमाध्यमिक शिक्षालाई प्रोत्साहन गर्ने नीति अन्तर्गत आर्थिक वर्ष २०५७।५८ मा ४८६ जना विद्यार्थीलाई छात्रवृत्ति वितरण गरिएको देखिन्छ भने सार्वजनिक विद्यालयहरुलाई रु. १ करोड २२ लाख ९५ हजार वरावरको अनुदान वितरण गरिएको छ ।

## उच्च शिक्षा

१२.१४ उच्च शिक्षा अन्तर्गत हाल नेपालमा त्रिभुवन विश्वविद्यालय, महेन्द्र संस्कृत विश्वविद्यालय, काठमाडौ विश्वविद्यालय, पूर्वाञ्चल विश्वविद्यालय र पोखरा विश्वविद्यालय गरी पाँच वटा विश्वविद्यालय संचालित छन् ।

१२.१५ त्रिभुवन विश्वविद्यालय प्राविधिक अध्ययन संस्थानको उत्पादन विवरण निम्न वमोजिम रहेको छ :-

**तालिका १२ (च) : त्रिभुवन विश्वविद्यालय प्राविधिक अध्ययन संस्थानको उत्पादन विवरण**

| अध्ययन संस्थान र कार्यक्रम | २०५२।५३ | २०५३।५४ | २०५४।५५ | २०५५।५६ | २०५६।५७ | २०५७।५८ |
|---|---|---|---|---|---|---|
| **१. इन्जिनियरिङ.** | **४१७** | **२५५** | **३३२** | **६४७** | **५५९** | **६४८** |
| क. प्रमाणपत्र | ३३७ | २४१ | २३८ | ५१४ | ३७२ | ४३६ |
| ख. स्नातक | ८० | १४ | ९४ | १३३ | १५० | १८४ |
| ग. स्नातकोत्तर | - | - | - | - | ३७ | २८ |
| २. कृषि र पशुविज्ञान | **२२२** | **७५** | **११६** | **१०१** | **१४६** | उत्पाद |
| क. प्रमाणपत्र | ७६ | ५७ | ३२ | २१ | ६९ | न |
| ख. स्नातक | १४६ | १८ | ८४ | ८० | ७७ | भई |
| **३. चिकित्साशास्त्र** | **२९५** | **३६५** | **३९०** | **३७६** | **४५८** | नसकेक |
| क. निम्नस्तर | - | - | - | - | - | ो |
| ख. प्रमाणपत्र | २१४ | २६८ | २२८ | २६८ | ३०९ | **४५०** |
| ग. स्नातक | ७३ | ४८ | १३९ | ६७ | ९० | - |
| घ. स्नातकोत्तर | ८ | ४९ | २३ | ४१ | ५९ | २९४ |
| **४. वन विज्ञान** | **२३३** | **१६६** | **९१** | **८७** | **१३४** | १०९ |
| क. प्रमाणपत्र | १९२ | १२४ | ८८ | ८७ | ९५ | ४७ |
| ख. स्नातक | ४१ | ४२ | ३ | - | ३९ | **१६९** |
| **५. विज्ञान तथा प्रविधि** | **२८८** | **३६१** | **४५१** | **३४६** | **१६४** | १०३ |
| स्नातकोत्तर | २८८ | ३६१ | ४५१ | ३४६ | १६४ | ६६ |
| | | | | | | **४१५** |
| | | | | | | ४१५ |
| **कुल जम्मा** | **१४५५** | **१२२२** | **१३८०** | **१५५७** | **१४६१** | **१६८२** |

*श्रोत : त्रिभुवन विश्वविद्यालय ।*

त्रिभुवन विश्व विद्यालय प्राविधिक अध्ययन संस्थानबाट आर्थिक वर्ष २०५६।५७ मा कुल १ हजार ३१५ (कृषि र पशु विज्ञान वाहेक) विद्यार्थी उत्पादन भएकोमा आर्थिक वर्ष २०५७।५८ मा सो संख्या २७.९ प्रतिशतले वृद्धि भई १ हजार ६८२ पुगेको छ ।

**तालिका १२ (छ) : विद्यावारिधि उत्पादन विवरण**

| अध्ययन संस्थान / संकाय | २०५२।५३ | २०५३।५४ | २०५४।५५ | २०५५।५६ | २०५६।५७ | २०५७।५८ |
|---|---|---|---|---|---|---|
| १. विज्ञान तथा प्रविधि | १ | २ | १ | १ | १ | २ |
| २. व्यवस्थापन | १ | १ | १ | ३ | १ | १ |
| ३. मानविकी तथा सामाजिकशास्त्र | १२ | ८ | ९ | ८ | ८ | ७ |
| **कुल जम्मा** | **१४** | **११** | **११** | **१२** | **१०** | **१०** |

*श्रोत : त्रिभुवन विश्वविद्यालय ।*

त्रिभुवन विश्व विद्यालयबाट आर्थिक वर्ष २०५७।५८ मा १० जनाले विद्यावारिधी हासिल गरेका थिए । आर्थिक वर्ष २०५६।५७ मा पनि विद्यावारिधी हासिल गर्नेको संख्या १० रहेको थियो ।

१२.१६ त्रिभुवन विश्वविद्यालयले धेरै वर्ष अघि देखि सेवा प्रदान गर्दै आइरहेको स्वास्थ्य सेवा क्षेत्र अन्तर्गत त्रि.वि. शिक्षण अस्पताल, वि.पि. कोइराला लायन्स नेत्र अध्ययन केन्द्र, लागू औषध दुर्व्यसनी स्याहार केन्द्र र त्रि.वि. हेल्थ सेण्टर कीर्तिपुरमा विभिन्न किसिमका चिकित्सा सेवा प्राप्त गर्नेहरुको कुल संख्या आर्थिक वर्ष २०५७।५८ मा ४ लाख ३८ हजार ३९० पुग्यो, जुन गत वर्षमा ३ लाख ४८ हजार ४२१ रहेको थियो ।

१२.१७ आर्थिक वर्ष २०५८।५९ मा त्रिभुवन विश्वविद्यालय अन्तर्गत आंगिक क्याम्पस ६१ वटा र सम्वन्धन प्राप्त निजी क्षेत्रका क्याम्पस १९१ वटा गरी जम्मा २५२ वटा क्याम्पसहरु संचालनमा रहेका छन् । चालु आर्थिक वर्षमा त्रिभुवन विश्वविद्यालयका आंगिक क्याम्पस तर्फ १ लाख १५ हजार ६०८ तथा निजी क्षेत्रका क्याम्पस तर्फ ६२ हजार २५० गरी १ लाख ७७ हजार ८५८ विद्यार्थीहरु अध्ययनरत रहेको अनुमान छ ।

१२.१८ नेपाल अधिराज्यमा संस्कृत शिक्षालाई विस्तार गर्दै निरन्तरता दिने उद्देश्यले स्थापित महेन्द्र संस्कृत विश्वविद्यालय अन्तर्गतका आंङ्गिक र सम्वन्धन प्राप्त विद्यापीठहरुमा आर्थिक वर्ष २०५७।५८ मा ३ हजार ६१६ विद्यार्थीहरु अध्ययनरत थिए भने चालु आर्थिक वर्षमा ३ हजार २५२ विद्यार्थीहरु अध्ययनरत छन् ।

१२.१९ काठमाण्डौ विश्व विद्यालयमा (सम्वन्धन प्राप्त कलेज वाहेक) १ हजार १२० छात्र र ३७७ छात्रा गरी आर्थिक वर्ष २०५७।५८ मा जम्मा १ हजार ४९७ विद्यार्थी अध्ययनरत थिए भने चालु आर्थिक वर्षमा १ हजार २५८ छात्र तथा ४९८ छात्रा गरी जम्मा १ हजार ७८३ विद्यार्थी सोही विश्वविद्यालयमा अध्ययनरत छन् । गत आर्थिक वर्षको तुलनामा चालु आर्थिक वर्षमा विद्यार्थी संख्या १९.१ प्रतिशतले वृद्धि भएको छ ।

१२.२० पूर्वाञ्चल विश्वविद्यालय अन्तर्गतका आंङ्गिक र सो विश्वविद्यालयबाट सम्वन्धन प्राप्त क्याम्पसहरुमा समेत गरी गत आर्थिक वर्षमा कुल १ हजार ३२९ जना विद्यार्थीहरु अध्ययनरत थिए भने आर्थिक वर्ष २०५८।५९ मा सो संख्यामा ११४ प्रतिशतले वृद्धि भै २ हजार ८४० पुगेको छ ।

१२.२१ पोखरा विश्वविद्यालय र अन्तर्गतका आंङ्गिक तथा सम्वन्धन प्राप्त क्याम्पसहरुमा समेत गरी आर्थिक वर्ष २०५७।५८ मा जम्मा १ हजार ६६८ जना विद्यार्थीहरु अध्ययनरत थिए भने चालु आर्थिक वर्षमा सो संख्या ७६.६ प्रतिशतले वृद्धि भई २ हजार ९४६ पुगेको छ ।

१२.२२ पोखरा विश्वविद्यालयले आफ्नो सम्वन्धनको दायरा फराकिलो पार्ने क्रममा यस वर्ष सोवा फर्मास्यूटिकल युनिभर्सिटी (टोकियो) जापान, टोयामा मेडिकल एण्ड फर्मास्यूटिकल युनिभर्सिटि, जापान र डोङगकोक विश्व विद्यालय क्याङजु, कोरियासंग थप समझदारी पत्र (Memorandum of Understanding) मा हस्ताक्षर गरेको छ । हाल यो संख्या ७ पुगेको छ ।

१२.२३ यही २०५८ को जनगणनाको नतिजा अनुसार साक्षरता प्रतिशत ५३.७ पुगेको छ । जसमध्ये महिला साक्षरता प्रतिशत ४२.५ र पुरुष साक्षरता प्रतिशत ६५.१ रहेको छ ।

## स्वास्थ्य

१२.२४ आर्थिक वर्ष २०५८।५९ सम्ममा नेपाल अधिराज्यभरि अस्पताल संख्या ८३, स्वास्थ्य केन्द्र १०, स्वास्थ्य चौकी ७००, आयुर्वेद औषधालय २८५, सव हेल्थपोष्ट ३ हजार १६१

र प्राइमरी हेल्थ सेन्टर २०० रहेका छन् । त्यसैगरी चालु आर्थिक वर्षमा अस्पताल शैया ५ हजार ३१०, डाक्टर १ हजार २५९, परिचारिका ४ हजार ७७५, कविराज २११ (अधिकृत कविराज समेत), बैद्य २२०, स्वास्थ्य सहायक ५ हजार २९५, स्वास्थ्य कार्यकर्ता ३ हजार १९०, स्थानीय स्वास्थ्य कार्यकर्ता ३ हजार ९८० र अन्य स्वास्थ्य कार्यकर्ता (तालिम प्राप्त सुडेनी र महिला स्वास्थ्य स्वयं सेविका) ६२ हजार ५४६ रहेका छन् । गत आर्थिक वर्ष २०५७।५८ को तुलनामा चालु आर्थिक वर्ष २०५८।५९ मा आयुर्वेद औषधालय ३.६ प्रतिशतले, प्राइमरी हेल्थ सेन्टर ११.१ प्रतिशतले, अस्पताल शैयामा १.१ प्रतिशतले, परिचारिका २.६ प्रतिशतले र वैद्य ४.८ प्रतिशतले वृद्धि भएको छ । केही स्वास्थ्य चौकी र सवहेल्थपोष्टहरुको स्तर वृद्धि गरी प्राइमरी हेल्थ सेन्टरको स्थापना गरिएकोले तिनीहरुको संख्या कमी देखिएको हो ।

१२.२५ आर्थिक वर्ष २०५७।५८ मा गर्भवती महिलाको सेवा पहिलो पटकको (कभरेज प्रतिशत) ४०.५ प्रतिशत, तालिम प्राप्त व्यक्तिद्वारा प्रसुती सेवा १३.८ प्रतिशत, परिवार नियोजनको साधनको प्रयोगदर ३७.६ प्रतिशत रहेकोमा चालु आर्थिक वर्ष २०५८।५९ मा सो प्रतिशत क्रमशः ४२.०, १४.० र ३९.० पुगेको अनुमान छ । त्यसैगरी गत आर्थिक वर्षमा विस्तारित खोप (कभरेज, प्रतिशत) मा वी.सि.जि. खोप ९४.६ प्रतिशत, डि.पि.टी. र पोलियो तेश्रो डोज ८०.० प्रतिशत र दादुरा विरुद्धको खोप ७५.० प्रतिशत रहेकोमा चालु आर्थिक वर्षमा सो प्रतिशत क्रमशः ९६.०, ८०.० र ७७.० रहेको अनुमान छ । आर्थिक वर्ष २०५७।५८ मा बार्षिक श्वास प्रश्वास रोग प्रति १ हजार बच्चामा २१० जना (जसमध्ये वार्षिक कडा श्वास प्रश्वास रोग ४.१ प्रतिशत), बार्षिक झाडा पखाला रोग प्रति १ हजार वच्चामा १७७ जना (जसमध्ये वार्षिक कडा झाडा पखाला रोग ४.३ प्रतिशत) थियो भने चालु आर्थिक वर्षमा सो संख्या क्रमशः २०१ र १६४ तथा दुवैमा ४.० प्रतिशत वार्षिक कडा श्वास प्रस्वास रोग र वार्षिक कडा झाडा पखाला रोग रहेको अनुमान छ ।

१२.२६ आर्थिक वर्ष २०५७।५८ मा ३ वर्ष मुनिका कुपोषित वच्चा १८.३ प्रतिशत थिए भने औलोको रक्त परिक्षण प्रति १ हजार जनसंख्यामा ०.७ थियो । त्यसै गरी क्षयरोग निको हुने दर प्रति १ हजारमा ७९ र स्वास्थ्य संस्थामा आउने जनसंख्याको आधारमा ३३.४ प्रतिशत रहेको थियो । चालु आर्थिक वर्षमा ३ वर्ष मुनिका कुपोषित वच्चा १६.५ प्रतिशत, औलोको रक्त परिक्षण प्रति हजार जनसंख्यामा ०.६, क्षयरोग निको हुने दर ८० र स्वास्थ्य संस्थामा सेवा लिन आउने जनसंख्याको आधारमा (प्रतिशत) ३५.० पुगेको अनुमान छ । स्वास्थ्य मन्त्रालय अन्तर्गत स्वास्थ्य संस्थाहरुको विस्तार गरी सेवाको पहुँचमा वृद्धि गर्न चालु आर्थिक वर्षमा लक्ष्य अनुरुप २० वटा प्राथमिक स्वास्थ्य केन्द्र स्थापना भई कुल प्राथमिक स्वास्थ्य केन्द्रको संख्या हाल १८० पुगी तिनीहरुबाट प्रभावकारी रुपमा सेवा प्रदान गरिएको छ ।

१२.२७ स्वास्थ्य सेवाका क्षेत्रमा भएका महत्वपूर्ण सूचकाङ्कहरु तालिका १२(ज) मा देखाइएको छ :

**तालिका १२ (ज) : स्वास्थ्य सेवाको महत्वपूर्ण सूचकाङ्कहरु**

| विवरण | ४६/४७ | ४७/४८ | ४८/४९ | ४९/५० | ५०/५१ | ५१/५२ | ५२/५३ | ५३/५४ | ५४/५५ | ५५/५६ | ५६/५७ | ५७/५८ | ५८/५९ |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| शिशु मृत्युदर प्रति हजार | १२८.० | १०७.० | १०७.० | १०२.० | १०२.० | १०२.० | १०२.० | ७९.० | ७४.७ | ६९.४ | ६६.८ | ६५.३ | ६४.२ |
| बाल मृत्युदर प्रति हजार | १९७.० | १९७.० | १९७.० | १६५.० | १६५.० | १६५.० | १६५.० | ११८.० | ११८.० | १११.७ | १०८.८ | १०५.४ | ९१.० |
| कोरा जन्मदर प्रति हजार | ४१.६ | ३९.६ | ३९.६ | ३९.६ | ३९.६ | ३७.५ | ३७.५ | ३७.८ | ३५.४ | ३४.५ | ३४.१ | ३३.६ | ३३.० |
| कोरा मृत्युदर प्रति हजार | १६.९ | १४.८ | १४.८ | १४.९ | १४.० | १४.० | १३.८ | ११.९ | ११.५ | १०.७ | १०.३ | १०.० | ९.६ |
| औषत आयु | ५३.५ | ५४.० | ५४.० | ५४.० | ५४.० | ५४.० | ५४.० | ५४.६ | ५६.१ | ५७.५ | ५८.३ | ५९.० | ५९.७ |
| मातृ मृत्युदर (प्रति लाख जीवित जन्ममा) | | | | | | | | ४७५ | | | | | ४०० |
| कुल प्रजनन दर | | | | | | | | ४.६ | | | | | ४.१ |

*श्रोत : स्वास्थ्य मन्त्रालय, केन्द्रिय तथ्याङ्क विभाग ।*

## खानेपानी, सरसफाई तथा ढल निकास

१२.२८ आर्थिक वर्ष २०५६।५७ मा खानेपानी तथा ढल निकास विभाग अन्तर्गत केन्द्रस्तरबाट २६७ र जिल्लास्तरबाट १ हजार २७१ गरी जम्मा १ हजार ५३८ वटा खानेपानी तथा ढल निर्माण आयोजना संचालन गरिएकोमा आर्थिक वर्ष २०५७।५८ मा कुल आयोजना संख्यामा १०.१ प्रतिशत वृद्धि भई सोही विभागबाट केन्द्रीय स्तरका ११ र जिल्लास्तरका १ हजार ५७७ गरी जम्मा १ हजार ६९३ वटा खानेपानी तथा ढल निर्माण आयोजना संचालन भए ।

१२.२९ आर्थिक वर्ष २०५६।५७ मा खानेपानी तथा ढल निकास विभाग अन्तर्गत थप ५ लाख २५ हजार जनतालाई खानेपानी सुविधा उपलव्ध गराइएको थियो भने आर्थिक वर्ष २०५७।५८ मा थप ४ लाख ६६ हजार २०२ जनतालाई खानेपानी सुविधा उपलव्ध भएको छ ।

१२.३० त्यसैगरी चालु आर्थिक वर्षमा खानेपानी तथा ढल निकास कार्यक्रम अन्तर्गत चालु आर्थिक वर्षको प्रथम आठ महिनामा यस्तो सुविधा थप ४५ हजार ५७५ जनता सामु पुऱ्याउन सकिएको छ ।

१२.३१ आर्थिक वर्ष २०५७।५८ मा शहरी खानेपानी तथा सरसफाई पुनर्स्थापना आयोजना अन्तर्गत कलंकी पानी प्रशोधन केन्द्र आयोजना र सुन्दरीजल पानी प्रशोधन केन्द्र सुधार विस्तार आयोजनाको क्रमशः ९४.४ र १०० प्रतिशत प्रगति कार्य सम्पन्न भएको छ । त्यसैगरी खानेपानी उत्पादन वृद्धि कार्यक्रम अन्तर्गत हेटौडा खानेपानी सुधार विस्तार आयोजना, भैरहवा खानेपानी सुधार आयोजना, वीरगंज खानेपानी सुधार विस्तार आयोजना र मनोहरा लोकन्थली खानेपानी आयोजनाको क्रमशः १००, ७५, ७५ र ९५ प्रतिशत पूरा भएको छ ।

१२.३२ आर्थिक वर्ष २०५७।५८ मा वृहत ढल निकास आयोजना अन्तर्गत गोगंवु क्षेत्र ढल निकास आयोजना, कोपुण्डोल ढल निर्माण आयोजना, सानेपा ढल निर्माण आयोजना, कुलेश्वर एरिया ढल निर्माण आयोजना, काठमाण्डौ र ललितपुर एरियामा पुरानो ढल सफा तथा मर्मत गरी प्रदुषण नियन्त्रण आयोजना, मध्यपुर ठिमी र उपत्यका वाहिरका शहरहरुमा ढलको विस्तृत अध्ययन सुधार आयोजना, काठमाण्डौ र ललितपुरको विभिन्न ठाउँमा ढल विस्तार सुधार आयोजना र कोड्कु ढल प्रशोधन केन्द्रको सुधार आयोजना आदि सम्पूर्ण आयोजनाहरु शतप्रतिशत पूरा भएको छ ।

१२.३३ आर्थिक वर्ष २०५८।५९ को प्रथम आठ महिनामा काठमाण्डौको बाँसवारी पानी प्रशोधन केन्द्र प्रोटेक्शन कार्य र रिप्लेसमेन्ट वेल निर्माण कार्य; हेटौडामा सवमर्सिवल पम्प खरीद तथा जडान कार्य र कर्रा वेल नं. १ मा पम्प अपरेटर क्वाटर निर्माण कार्य तथा भल्भ च्याम्वर निर्माण कार्य जारी रहेको छ । चुहावट पत्ता लगाई मर्मत गर्ने र मुठ्ठा मुठ्ठा पाइप हटाउने कार्य अन्तर्गत काठमाण्डौ उपत्यकामा र भैरहवामा कार्य भैरहेको छ ।

१२.३४ खानेपानी संस्थानबाट आर्थिक वर्ष २०५७।५८ मा प्रतिदिन १ हजार ४८० हजार लीटर खानेपानी उपलव्ध गराइएकोमा चालु आर्थिक वर्षको प्रथम आठ महिनामा सामान्य ऱ्हास भई १ हजार ४०० हजार लीटर मात्र आपूर्ति हुन सकेको छ । त्यसैगरी आधुनिक

ढल निकास सुविधा आर्थिक वर्ष २०५७।५८ मा ५ कि.मी. रहेकोमा चालु आर्थिक वर्षको प्रथम आठ महिनामा २ कि.मी. मात्र निर्माण हुन सकेको छ ।

## आवास तथा शहरी विकास

१२.३५ यही २०५८ को जनगणनाको नतिजा अनुसार देशको कुल ५८ नगरपालिकाहरुमा कुल जनसंख्याको १५.९ प्रतिशत शहरी क्षेत्रमा वसोवास गरिरहेको देखिएको छ । यसरी शहरी क्षेत्रमा बढ्दै गएको चाप अनुरुप आवास गृहको आवश्यकता पनि बढ्दै गएको देखिएको छ । आवासको राष्ट्रिय आवश्यकता पुरा गर्दै जाने क्रममा आर्थिक वर्ष २०५६।५७ मा ६०३ प्लट घडेरी बिक्री वितरण भएकोमा सो संख्यामा ५०१ प्रतिशतले वृद्धि भई आर्थिक वर्ष २०५७।५८ मा जम्मा ३ हजार ६२९ वटा घडेरी प्लटहरु बिक्री वितरण भयो । साथै आवास क्षेत्रमा ५.२५ कि.मी. कच्ची सडक, ८२५ मिटर पक्कि नाली निर्माण, १७ वटा क्रसड्रेन तथा कल्भर्ट निर्माण र १ हजार ५१० परिवारहरुलाई जग्गा धनी दर्ता प्रमाण पुर्जा वितरण गरिएको छ ।

१२.३६ चालु आर्थिक वर्षको प्रथम आठ महिनामा जम्मा ८४४ घडेरी प्लटहरु बिक्री वितरण भएको छ । साथै आवास क्षेत्रमा भौतिक पूर्वाधार निर्माणका लागि १२.८ कि.मी. कच्ची सडक, २ हजार २२५ मीटर पक्कीनाली, ७८ वटा क्रसड्रेन तथा कल्भर्ट निर्माण एवं १७ वटा पिउने पानीको लागि हातेपम्प जडान र २ हजार थान जग्गा धनी पुर्जा वितरण गर्ने कार्य भईरहेको छ । चालु आर्थिक वर्षमा काठमाण्डौ उपत्यकामा व्यवस्थित बसोवास गराउने कार्य भैरहेको छ । विगत २/३ वर्ष देखि नगरोन्मुख गा.वि.स. हरुमा पनि एकीकृत रुपमा क्रमशः योजनाहरु संचालन भइरहेका छन् ।

१२.३७ नगर विकास कोषलाई KFW बाट जनवरी २००१ देखि जुन २००५ सम्मका लागि रु. करिव ४८ करोड अनुदान सहयोग प्राप्त भएको छ भने जनवरी २००१ देखि २००६ सम्मका लागि एशियाली विकास बैंकबाट यु.एस.डलर १ करोड २० लाख (करिव रु. ८८ करोड) ऋण सहायता उपलब्ध भएको छ ।

## महिला, श्रम तथा सीप विकास

१२.३८ चालु आर्थिक वर्षमा पनि पिछडिएका आदिवासी तथा जनजाति एवं महिलाहरुको उत्थान र विकास गरी उनीहरुलाई आत्मनिर्भर बनाउन विभिन्न सीपमूलक कार्यक्रमहरुद्वारा स्व-जीविकोपार्जनको माध्यमबाट आय आर्जन गर्ने क्षमताको विकास गर्ने कार्यलाई निरन्तरता दिईएको छ ।

१२.३९ महिला सीप विकास कार्यक्रम अन्तर्गत महिला सीप विकास केन्द्रले आर्थिक वर्ष २०५७।५८ मा १८ हजार थान हस्तकलाका वस्तु उत्पादन भएको छ; १३१ जना महिलाले तालिम प्राप्त गरेका छन र प्रचार प्रसार मेलामा ६ पटक भाग लिइएको छ।

१२.४० महिला सीप विकास कार्यक्रम संचालन अन्तर्गत चालु आर्थिक वर्षको प्रथम चौमासिकमा विभिन्न किसिमका हस्तकलाका ४ हजार ५०० थान वस्तु उत्पादन गरिएको छ । दक्ष जनशक्ति तयार गर्ने कार्यका लागि ४७ जना दक्ष जनशक्तिलाई प्रशिक्षण र २ पटक प्रचार प्रसार तथा मेलामा भाग लिइएको छ । महिला जागृति तथा आय आर्जन कार्यक्रमलाई आर्थिक वर्ष २०५८।५९ देखि गरीवी निवारण कोषको छाताभित्र एकिकृत गरी संचालन गरिएको छ ।

१२.४१ यसै गरी महिला सशक्तिकरण कार्यक्रम अन्तर्गत चालु आर्थिक वर्षको प्रथम चौमासिकमा लोक सेवा आयोगको शाखा अधिकृत परिक्षामा सम्मिलित हुन १०० जना महिलाहरु समावेश गरी MGEP को सहयोगमा कक्षा संचालन गरिएको छ । चेलीबेटी बेचविखन नियन्त्रणका लागि ४ वटा श्रृङखला तयार गरी प्रसार गर्न स्क्रिप्ट लेख्ने काम सम्पन्न भएको छ । चेलीबेटी बेचबिखन नियन्त्रणका लागि जिंगल रेडियोबाट प्रसारण गराउने कार्य भैरहेको छ ।

१२.४२ महिला स्वावलम्बन तथा पुनर्स्थापना गृह कार्यक्रम अन्तर्गत चालु आर्थिक वर्षको प्रथम चौमासिकमा विभिन्न जिल्लाहरुबाट परिक्षार्थीहरु छनौट गरी ६ महिने प्रशिक्षण संचालन गरिएको हुँदा लक्ष्यको ३३.३ प्रतिशत प्रगति भएको छ ।

१२.४३ आर्थिक वर्ष २०५८।५९ मा श्रम शिर्षक अन्तर्गत नेपालबाट बालश्रम उन्मूलन गर्नका लागि राष्ट्रिय गुरु योजनाको मस्यौदा तयार गरिएको तथा सन. २०१० सम्ममा सबै खालका बालश्रम उन्मूलन नीति राखिएको छ । साथै विद्यार्थीहरुलाई सार्वजनिक यातायात साधनको भाडामा ३३ प्रतिशत सहुलियत उपलव्ध गराइएको तथा कमजोर आर्थिक अवस्था भएका नेपाली कामदारलाई वैदेशिक रोजगारमा जान ऋण प्रदान गर्ने तर्फ कारवाही भैरहेको छ ।

१२.४४ आर्थिक वर्ष २०५७।५८ मा आर्थिक तथा सामाजिक रुपले पिछडिएका २२० वटा विपन्न महिलाहरुलाई विभिन्न विषयमा सीपमूलक तालिम दिइयो भने श्रम बजारमा माग रहेका विभिन्न सीपमूलक तथा व्यवसायिक विषयहरुमा ५ हजार ८३५ जनालाई तालिम दिइयो । त्यसैगरी विभिन्न ७ जिल्लाका १४ स्थानमा दिवा शिशु स्याहार केन्द्र संचालन गर्नुका साथै बालश्रम निवारण गर्न गलैचा कारखानाको ६०२ पटक निरीक्षण गरियो ।

१२.४५ चालु आर्थिक वर्षको प्रथम आठ महिनामा ५५ हजार २५ जनालाई वैदेशिक रोजगारमा जाने स्वीकृति प्रदान गरिएको छ । गत आर्थिक वर्षको सोही अवधिमा कुल २५ हजार ८४० जना नेपाली कामदारहरु वैदेशिक रोजगारमा गएका थिए ।

## बाल एवं समाज कल्याण

१२.४६ बालविकास कार्यक्रम अन्तर्गत देउकी र भाँड जातिका छोराछोरीहरुलाई काठमाण्डौका आवासीय विद्यालयहरुमा राखि एस.एल.सी. सम्मको शिक्षा उपलव्ध गराउने उद्देश्यले पठन पाठनको व्यवस्था गरिनुको साथै न्यूनतम सुविधाविहीन बालबालिकाहरुको लागि शैक्षिक कार्यक्रम (UCEP Nepal) मार्फत सडक बालबालिकाहरुलाई व्यवसायिक सीप सिकाई आत्मनिर्भर बनाउने अटोमोवाइल, प्लम्विङ्ग र जनरल मेकानिक्स जस्ता आवासीय तालिम संचालन गरिएको छ। यो तालिम एक वर्षको हुनेछ ।

१२.४७ बालबालिका सम्वन्धी ऐन, २०४८ को दफा ४२ बमोजिम भक्तपुर जिल्लाको सानोठिमीमा बाल सुधार गृह निर्माण भै जेलमा परेका बाबुआमाका छोराछोरी र दुराचारमा संलग्न बालबालिकाहरुलाई आश्रय प्रदान गरिएको छ । साथै बाल न्यायलाई सर्वसुलभ पार्न ७५ वटै जिल्ला अदालतमा बाल इजलास स्थापना गरिएको छ ।

१२.४८ सामाजिक सुरक्षा कार्यक्रम अन्तर्गत आर्थिक वर्ष २०५७।५८ र २०५८।५९ को शुरु अवधि देखि नै अपाङ्ग नागरिकहरुको लागि थप सुविधा अधिकार र मानवोचित एवं सहज जीवन यापन गर्न सक्ने आधार सृजना गर्ने लक्ष्य अनुरुप अपाङ्ग संरक्षक तथा कल्याण ऐन, २०३९ संशोधनका लागि कार्य प्रारम्भ भई अन्तिम चरणमा रहेको छ भने अपाङ्गपन विषयमा नवौं योजना, अपाङ्ग सेवा राष्ट्रिय नीति २०५३, मौजुदा ऐन, नियमावली एवं अन्तराष्ट्रिय र क्षेत्रीय प्रतिवद्ध अनुरुप अपाङ्ग सेवा राष्ट्रिय कार्य योजना निर्माण भई स्वीकृतिको अन्तिम चरणमा रहेको छ।

१२.४९ चालु वर्षमा "जेष्ठ नागरिक कल्याण ऐन" को विधेयक मस्यौदाको कार्य प्रारम्भ हुनुका साथै आर्थिक स्थिति कमजोर भएका जेष्ठ नागरिकहरुको स्वास्थ्योपचार सुविधाका लागि "जेष्ठ नागरिक उपचार सेवा कार्यक्रम कार्यान्वयन निर्देशिका, २०५८" प्रकाशनको अन्तिम अवस्थामा पुगेको छ।

१२.५० अपाङ्ग स्वरोजगार कार्यक्रम अन्तर्गत आर्थिक वर्ष २०५५।५६ देखि आर्थिक वर्ष २०५७।५८ सम्ममा समाज कल्याण परिषदबाट ४८६ अपाङ्गहरुको लागि कर्जा सिफारिश भईसकेको छ भने चालु आर्थिक वर्षको प्रथम आठ महिनामा करीव ६०० व्यक्तिहरुको लघुकर्जा फाराम तथा परियोजना विवरण संकलन गरी उपयुक्त परियोजना छनौट सम्वन्धी प्रारम्भिक कार्यवाही सम्पन्न भएको छ।

१२.५१ स्वास्थ्य तर्फ योजनाको प्रथम चार वर्षमा करीव १ हजार ४०० अस्पताल शैया र १३ हजार ६१६ विभिन्न स्तरका दक्ष जनशक्ति थप भएको देखिन्छ। उक्त अवधिमा ८५ आयुर्वेदिक केन्द्रहरु पनि थप भएको छ। बाल प्रतिरोधात्मक खोपहरु यस अवधिमा निकै विस्तार भएको छ। त्यस्तै शहरी क्षेत्रमा निजी क्षेत्रको सेवा तीव्र दरमा बढी रहेको छ। कुल प्रजनन दर योजना अवधिमा ४.६ बाट घट्दै आर्थिक वर्ष २०५८।५९ सम्ममा ४.१ मा झर्नु, शिशु मृत्युदर ७४.७ प्रति हजारबाट ओर्ली ६४ मा आई पुग्नु, परिवार नियोजनका साधन उपयोगकर्ताहरु ३०.१ प्रतिशतबाट ३९ पुग्नु उत्साहवर्धक देखिन्छ भने औसत आयु ५४.६ वर्षबाट आर्थिक वर्ष २०५८।५९ मा ५९.७ वर्ष पुग्नु सन्तोषजनक मान्न सकिन्छ।

१२.५२ खानेपानी तर्फ योजना अवधिमा सबैलाई खानेपानी पुऱ्याउने लक्ष्य रहेकोमा आर्थिक वर्ष २०५८।५९ सम्ममा ७१.५ प्रतिशतलाई मात्र सेवा उपलव्ध गराउन सकिएको छ। यस मध्ये ग्रामीण क्षेत्रमा ७१.३ प्रतिशत (१ करोड ४५ लाख जनता) र शहरी क्षेत्रमा ७२.६ प्रतिशत (२५ लाख जनता) लाई खानेपानी सुविधा पुगेको छ। उक्त तथ्यांकमा गैर सरकारी संगठन, स्थानीय विकास संस्थाहरु तथा अन्य निकायहरुको क्रियाकलापबाट लाभ उठाएका जनसंख्या समावेश छैनन्।

१२.५३ त्यसैगरी आर्थिक वर्ष २०५८।५९ सम्ममा ग्रामिण क्षेत्रमा २० प्रतिशत (४१ लाख जनता) र शहरी क्षेत्रमा ५३ प्रतिशत (१८ लाख जनता) गरी कुल २५ प्रतिशत (५९ लाख) जनतालाई आधारभूत सरसफाई सुविधा पुऱ्याइएको छ।

१२.५४ महिला विकास तर्फ सम्पत्तिको अधिकार सम्वद्ध विधेयक संसदबाट पारित भएको छ भने छुट्टै महिला आयोगको गठन भई सकेको छ। काठमाण्डौमा सम्पन्न एघारौं सार्क शिखर सम्मलेनमा महिला वेच विखन सम्वन्धी अभिसन्धि पारित भएको छ। महिलाको साक्षरता पुरुषभन्दा निकै कम रहेको सन्दर्भमा यसलाई वृद्धि गर्न

छात्राहरुलाई छात्रवृत्ति प्रदान गरिएको छ । त्यस्तै विभिन्न कार्यक्रममार्फत महिला शिक्षाबारे जनचेतना वृद्धि गर्ने प्रयास भएको छ र राष्ट्रिय विकासमा महिला सहभागिता मापन गर्ने सूचकहरु निर्धारण गर्ने कार्यको पनि थालनी भएको छ । महिलाहरुमा आय आर्जन गराउन सीपयुक्त तालिम लक्ष्य अनुरुप संचालन भएका छन् ।

१२.५५ दलिततर्फ ७५ वटै जिल्लाहरुमा छात्रवृत्ति तथा जनचेतना अभिवृद्धिका कार्यक्रम संचालन भएका छन् । त्यस्तै दलितहरुको नैसर्गिक अधिकारको अभिवृद्धिको निमित्त सशक्त रुपमा राजनीतिक सहित थप कदमहरु कार्यान्वयनमा ल्याइएका छन् । जनजातीहरुको विकासमा थप तिव्रता ल्याउन जनजाती प्रतिष्ठानको गठन गर्नेतर्फ कार्यवाही प्रारम्भ भएको छ ।

१२.५६ श्रमिकहरुको जीवनस्तरमा सुधार ल्याउने लक्ष्य अनुरुप कृषि श्रमिकहरुका लागि न्यूनतम ज्याला निर्धारित गरिएको छ । त्यस्तै श्रमिकहरुको लागि आवश्यक बिषय पहिचान गरी आधारभूत तथा व्यावसायिक तालिम प्रदान गरी रोजगारीको थप अवसर सिर्जना गरिएको छ । गैर सरकारी क्षेत्रलाई विकासको साझेदारी निकायको रुपमा समाहित गर्ने वातावरणमा सुधार गरिएकोले ती संस्थाहरुको सहभागिता उल्लेखनीय रुपमा वृद्धि हुदै गएको छ ।

## चुनौतीहरु

१२.५७ नवौं योजनामा देशको साक्षरता ७० प्रतिशत पुऱ्याउने लक्ष्य रहेकोमा आधारभूत शिक्षाको पहुँच अझै सर्वसुलभ हुन सकेको छैन । महिला तथा पिछडिएका विपन्न वर्गका बालबालिका तथा, अपाङ्ग, अशक्त बालबालिकाहरुलाई विद्यालय तहको शिक्षा उपलब्ध गराउन अझै कठिनाई महशुस गरिएको छ । कक्षा दोहोऱ्याउने र छोडने प्रवृत्ति घटाउनु पर्ने तथा स्थानीय श्रोत र साधनको परिचालन गर्नु पर्ने खाँचो रहेको छ ।

१२.५८ प्राथमिक तहको शिक्षा, स्वास्थ्य, खानेपानी, सरसफाई जस्ता क्षेत्रमा स्थानीय तहमै प्रशासन र स्वामित्व वृद्धि गर्दै लैजानु पर्ने चुनौती छ । माध्यमिक र उच्च शिक्षालाई सक्षम र आत्मनिर्भर हुनसक्ने गरी स्वायत्तता दिने तर्फ रणनीति तर्जुमा गर्नु पर्ने चुनौती छ ।

१२.५९ स्वास्थ्य सुविधालाई दुर्गम तथा पहाडी क्षेत्रमा विस्तार गरी आवश्यक चिकित्सकहरुलाई त्यस्ता स्थानतर्फ सेवा प्रदान गर्न उत्साहित गरिनु पर्ने आवश्यकता रहेको छ ।

१२.६० शहरी विकास कार्यक्रममा बाधा पुगिरहेको सन्दर्भमा साविकमा रहेका घरहरु हटाउनु पर्ने, सडकको लागि जग्गा छोड्नु पर्ने, सडकको लागि छाडी दिदा घर वनाउन जग्गा पर्याप्त नहुने, निशुल्क जग्गा प्रदान गर्ने जस्ता विषयहरुमा स्थानीय जनताहरुको सहमति तथा मंजुरी जुटाउने कार्य, मुआब्जा तथा क्षतिपुर्ति दिने आधारहरु तयार गरी जनताहरुलाई एकमत गराउने कार्यहरु चुनौतीको रुपमा देखा परेको छ ।

१२.६१ सामाजिक सुरक्षा कवचलाई राष्ट्रले धान्न सक्ने गरी विस्तार र अनुगमन गर्ने कार्य चुनौतीपूर्ण रहेको छ ।